# रातो घाम

उपन्यास



भरत जङ्गम



प्रकाशक

इन्दु प्रकाशन

**लेखक :**

*भरत जंगम*
जंगम निवास, बानेश्वर, काठमाडौं
फोन : ४७०४८८



**प्रकाशक :**

*इन्दु प्रकाशन*
लहुरावीर, वाराणसी
फोन : ५३१३३



**पहिलो संस्करण**

*२०५० साल वैशाख*
१०,००० प्रति

**कम्पोजिंग :**

*ईप्सा कम्प्यूटर वर्क्स*
पाण्डेयपुर, वाराणसी
फोन : ४३८१६

**मुद्रक :**

*कृष्णा प्रिन्टर्स*
कमच्छा, वाराणसी

**मूल्य : रु० ६०/=**

# लेखक परिचय

*मुलुकमा प्रजातंत्र स्थापनाका लागी साहित्यको माध्यम द्वारा क्रान्तिको विगुल फुक्ने उपन्यासकार श्री भरत जंगम नेपाली पाठकका लागि अत्यन्तै परिचित नाम हो । कलम क्रान्तिका सफल योद्धा श्री जंगम ले* ***'कालो सूर्य'*** *र* ***'व्यूहचक्र'*** *लेखेर नेपाली समाजमा रहेको विकृतिलाई केलाएर स्पष्ट देखाउन सक्षम हुनु भएको छ । काठमाडौं उपत्यकाको भक्तपुरमा जन्मनु भएका श्री भरत जंगम विश्वको प्रायः सवै मुलुकहरूको भ्रमण गर्नु भएको छ । उहाँको कलम मानवता र मानव समस्याका लागि समर्पित भएको कारण चीनियाँ समाजको उत्थानको लागि* ***'रातो घाम'*** *जस्तो उपन्यास रचना हुन सम्भव भयो ।* ***'रातोघाम'*** *उपन्यासमा आधा शताब्दी देखि बन्द रहेको चीन र चीनियाँ समाजलाई स्पष्ट रूपमा देखाउन श्री जंगम सफल हुनु भएको छ ।*

*नेपालीमा* ***'रातो घाम'*** *अंग्रेजीमा* ***'द ब्लैक सन्'*** *र हिन्दीमा* ***'लाल सूरज'*** *एकै पटक प्रकाशित भएको कारणले गर्दा अन्तर्राष्ट्रीय क्षेत्रमा श्री जंगम चर्चित हुनपूग्यु भएको छ ।*

**-- प्रकाशक**

# भूमिका

एक दशक अघि नै **'कालो सूर्य'** नामक उपन्यास लेखेर श्रीभरत जंगमले आफूलाई एक दक्ष उपन्यासकारको रूपमा चिनाउन सफल भइसक्नुभएको थियो । **'कालो सूर्य'** उपन्यास नेपाली भाषामा मात्र सीमित नरही अंग्रेजी भाषामा **'दि ब्लैक सन्'** मा भाषान्तरित हुँदै विश्वको विभिन्न भाषा जस्तै चीनियाँ र रूसी भाषामा समेत अनुवादित हुन पुग्यो । त्यस उपन्यासमा उपन्यासकारले एकदमै सरल भाषामा पञ्चायत कालमा भए- गरेका, हुने गरेका क्रियाकलापलाई छर्लङ्ग देखाउन सक्षम हुन पुग्नुभएको छ । उहाँको लेखाइ-शिल्पले गर्दा तत्कालीन शासकले त्यस उपन्यासलाई प्रतिबन्ध लगाउने जमर्को गर्दा पनि स्पष्ट रूपमा प्रतिबन्ध लगाउन सकेन । त्यस उपन्यासले नेपाली समाजमा भएका अनैतिकता, भ्रष्टाचार र अधिनायकवादको बढ्दो स्वरूप विरुद्ध नेपाली पाठकमा जागरूकता ल्याइदियो ।

प्रस्तुत उपन्यास- **'रातो घाम'** पनि श्री जंगमले सरल कुराकानीबाट कथा शुरू गर्ने तरीका अपनाउनुभएको छ, तर यसको विषयवस्तु निश्चय नै भिन्न छ र पाठकहरूको लागि ज्यादै रमाइलो र उत्सुकताको विषय छ । यसमा स्वशासित क्षेत्र भनिने तिब्बतका जनताको पृष्ठभूमिमा, कम्युनिष्ट चीनको जीवन, नैतिकता र व्यवहार आदि झल्काइएको छ ।

यस उपन्यासको कथा मितेरी पुलबाट देखिने तिब्बत खासा (जाङ्मु) शहरका चम्किला घरहरूको चम्काहटबाट शुरू हुन्छ । उपन्यासकारले नेपाली मनःस्थिति र त्यस भेक र जनताहरूसँगको ऐतिहासिक सम्बन्धलाई उघार्दै कोदारीबाट यात्रा शुरू गरी उकालो-ओरालो र बतासे मरुभूमि र शीत मरुभूमि पार गर्दै कथालाई ल्हासा पुऱ्याउनुभएको छ ।

यस्तै प्रसिद्ध र समृद्ध शहरहरू क्यानटन, सांघाई, सेनजन, तियानजिन र बेजिङ्को भ्रमण र तीता-मीठा अनुभवको वर्णन रोचक शैलीमा गरिएको छ भने ती शहरहरू घुम्दा विभिन्न अवस्थामा चीनियाँ जनतासँग भएको कुराकानी, व्यापार-व्यवहार र रमाइला क्षणहरू पाठक-समक्ष प्रस्तुत भएका छन् ।

संसारको अरू मुलुकभन्दा नेपाल फरक छ, कारण यहाँ 'हान' जातिका चीनियाँहरूको अल्पसंख्यामा पनि बसोबास छैन । सर्वसाधारण नेपालीलाई चीनियाँ जातिका रहन-सहन, व्यवहार, आचार र मानसिकताको परिचय पाउने अवसरहरू प्राप्त छैनन् । त्यसैले यो उपन्यास **'रातो घाम'** ले नेपाली पाठकहरूलाई लेखकसँग-सँगै चीनियाँ जातिका स्वभाव र आचरणको परिचय प्राप्त हुन सक्नेछ भने अनेपाली पाठकहरूले पनि चीनियाँ जीवन र समाजमा भित्रसम्म च्याएर हेर्ने अन्तर्दृष्टि र तिनको वर्तमान सम्वेदनशीलता र भावनाहरूलाई लेखक-सँगसँगै बुझ्न पाउनेछन् ।

अन्तमा, उपन्यासकारले आफ्ना पाठकहरूलाई के सन्देश दिन खोजेका हुन् भन्ने कुरामाथि विचार गर्दा मलाई लाग्यो- 'लेखकको चिन्तनमा सन् १९४९ को क्रान्तिको प्रभाव अब अरू धेरै समय-सम्म रहन सक्नेछैन र चीनियाँ जनतामा प्राचीनकालदेखि जमेका आफ्नै सभ्यता र संस्कृतिका गुण र प्रभावहरू- जो अहिंसा, मैत्री र असल छिमेकीपन हुन्-यी गुण र प्रभावद्वारा प्रेरित र अनुप्राणित भएर चीनियाँ जाति र समाज छिटै अर्कै दिशातर्फ मोडिन सक्नेछ' भन्ने सन्देशका झल्काहरू मैले पाएँ ।

साथै उपन्यास चार सय वर्ष पुराना प्रसिद्ध चीनियाँ इन्जिनीयर लिविन र उनले योजना तयार गरी निर्माण गरेको दुजियाङ नदीको बाँध र उनको सिद्धान्त अंकित शिलापत्रको पनि वर्णन उपन्यासमा भएको छ । लिविनको सिद्धान्त हो- 'एकै ठाउँमा केन्द्रित कुनै पनि शक्ति विनाशकारी हुन सक्छ, शक्तिलाई विभाजन गर्दा विनाशकारी नभई सृजनशील हुन सक्छ ।' यसै सिद्धान्तको आधारमा लिविनले एकै ठाउँमा समेटिएको जलशक्तिलाई साना-साना बाँध पैनीहरूमा विभाजित गरी सिचाईको व्यवस्था गरे भने चिन्दू क्षेत्रलाई नदीको बाढीबाट हुने क्षतिबाट मुक्त गरिदिए । लिविनको यस सिद्धान्तलाई उपन्यासकारले राजनीतिक र आर्थिक क्षेत्रमा प्रयोग गरेको पाइन्छ । एकै ठाउँमा जम्ने राजनीतिक र आर्थिक शक्तिलाई विभाजित एवं विकेन्द्रित गरी कार्यान्वयन गर्दा मानव समाजको कल्याण हुन्छ भनेर उपन्यासमा स्पष्ट भनिएको छ ।

म आशा गर्छु--पाठकहरूले लेखकका पहिले प्रकाशित कृतिहरू जस्तै यस **'रातो घाम'** लाई पनि उत्तिकै उत्साह र उत्सुकताका साथ स्वागत गर्नेछन् ।

**हृषीकेश शाह**

**२३मार्च, १९९३**

**काठमाडौं, नेपाल**

नेपाली भाषा : रातो घाम

मुल लेखक

**भरत जङ्गम**

जंगम निवास,
वानेश्वर,काठमाडौं, नेपाल

अनुवाद

**अंग्रेजी 'द रेड सन'**

**सरोज कुमार शाक्य**

पाटनढोका, ललितपुर,
नेपाल

**हिन्दी : 'लाल सूरज'**

**डा० रामदयाल राकेश**

वानेश्वर, काठमाण्डौं,
नेपाल

## - १ -

विश्व-मानचित्रमा रातो रङ्ग पोतिएका देशहरूमध्ये विशाल देश चीनका बारेमा जान्न, बुझ्न र अझ प्रत्यक्ष देखेर अनुभव गर्न धेरैले चाहे । उन्नाईससय पचासको दशकदेखि बन्द यो देशको बारेमा अनेकानेक अडकलहरू विश्व बजारमा आए, हराउँदै गए । यसअघि त्यहाँका शासक र शासितका बीचमा मात्र होइन, पूर्व र पश्चिमका ठूला साना सबै राष्ट्रसँग द्वन्द्व कायम थियो । चाओ, हान र छिन वंशीय राजाहरूले सयौं वर्ष राज्य गरेको चीन उन्नाईसको शुरू दशकमै क्रान्तिको भुमरीमा फस्यो । छिन वंशीय प्रत्येक सम्राटले चीनलाई विश्व सामु मर्यादित रूपमा उभ्याए र राष्ट्रको गरिमा बढाए । तर समयको गति कसले रोक्न सक्छ । यूरोपमा भएको औद्योगिक क्रान्ति सँगसँगै जन्मिएको नयाँ विचार, नयाँ वाद, विश्वका ठूला-साना मुलुकहरूमा बिस्तारै फैलिंदै चीनमा प्रवेश गऱ्यो ।

चीनमा नयाँ बोली आयो ! नयाँ विचार आयो ! नयाँ चाहना आयो! नयाँको खोजी सबैले गर्छन् किनभने पुरानोबाट मान्छे दिक्क हुन्छन् त्यसैले बदलिन चाहन्छन्, यो मानवीय प्रकृति हो ! मानववाद हो !

यो परिवर्तित हुने मस्तिष्कको निर्णय नै अन्तिम होइन र हुन सक्दैन। यो त परिवर्तित हुन चाहन्छ सधैं र जहिले पनि । नयाँ वस्तु प्राप्त गर्ने चाहनामा दिल दिमाग खपाइरहेको हुन्छ र आफूलाई नै मेटाइरहेको हुन्छ । जीवन बाँच्नुको नाउँ हो ! यसको अवधि निश्चित हुन्छ । यदि निश्चित अवधिभित्र अनेकानेक प्राप्तिको आशा र अभिलाषा पनि रहेको हुन्छ यसैको उपज हो नयाँ परिवर्तनको चाहना!

कुनै पनि पशुपन्छीको लागि कडा नियन्त्रण उसको मृत्यु हो भने स्वतन्त्रता उसको जीवन हो । विवेकहीन पशु पनि स्वतन्त्रता-प्रेमी हुन्छ । उ सधैं आफ्नो आहाराको खोजी-सँगसँगै आफ्ना बाल-बचेराहरूको पालन-पोषणको लागि पनि प्रयत्नशील रहिरहेको हुन्छ । अनि उसले चाहेको ठाउँमा घुमफिर गरेर जीवन यापन गरिरहेको हुन्छ-यही जीवन हो । बाँच्नको लागि खाना ! बाँचेपछि लामो अवधि बिताउन भौतिक आवश्यकताको

परिपूर्ति ! त्यसपछि मानसिक विकासको लागि स्वच्छ एवं स्वतन्त्र वातावरणको तयारी! यही मान्छेको जीवनले खोजिरहेको हुन्छ ।

मानिसको स्वभाव हो-आफ्नो आधारभूत आवश्यकताको परिपूर्ति आफ्नै मिहिनेत र बुद्धिको बलले जुन दिन प्राप्त गर्छ, त्यो समय उ स्वयंमा खुशी हुन्छ र आफूमा आनन्द प्राप्त भएको महसूस गर्छ ।

तर मान्छे सबै उस्तै हुँदैनन्, सबै बलवान र योग्य पनि हुँदैनन् । जहिले पनि ती समाजका निर्बल एवं कमजोर वर्गलाई बलिया वर्गले शोषण गरिरहेका हुन्छन् । त्यसैले त्यस्तो शोषणबाट ती समाजका शोषित व्यक्तिहरूले मुक्ति पाउनुपर्छ। समानरूपमा आवश्यकताको परिपूर्ति हुनुपर्छ र शोषणरहित समाजको स्थापना हुनुपर्छ ।

पृथ्वी र त्यससँग सम्बन्धित यावत् पूँजी कसैको व्यक्तिगत सम्पत्ति हुन सक्दैन । यो सबैको साझा हो र हुनुपर्छ । त्यसैले पूँजीको व्यक्तिगत स्वामित्व अन्त गरी सामूहिक अर्थात् सामाजिक स्वामित्व स्थापना गर्नुपर्छ र भएको सम्पत्तिको सबैले समान रूपमा उपभोग गर्न पाउनुपर्छ-यही नै सत्य हो ।

यसैको आडमा यूरोपमा मार्क्सवाद जन्मियो । यो वाद सत्तरी वर्षमा रूस र सय वर्षमा चीन पुग्न सफल भयो । मार्क्ससँग लेनिन जोडिएर रूसको साथै विश्वका अरू मुलुकहरूलाई यो वादले प्रभाव पाग्रो भने सन् १९४० को माओत्से तुङ्को नौलो जनवादी विचार यस वादसँग जोडिएर चीनमा नौलो जनवाद स्थापना भयो । यही नौलो जनवाद के र कस्तो ? भन्ने उत्सुकता अरूलाई जस्तै मलाई पनि भयो ।

उन्नाईस सय सत्तरीको दशकमां म जब काठमाडौंबाट चीनको सीमा हेर्ने उत्सुकता बोकेर कोदारी राजमार्गद्वारा त्यसतर्फ लाग्छु, म मनमनै अत्यन्तै प्रसन्न छु । दोलालघाट-पछि भोटेकोशीको किनारै-किनार बाह्रबिसे हुँदै म कोदारी पुग्छु। कोदरी बजारदेखि केही टाढा चीनको सीमा अर्थात् मितेरी पुल भएको स्थान, जसलाई लिपिङ भनिन्छ,- मा पुगेर म पुलको वारि नै रोकिन्छु । म पारि जान साक्दिनैं किनभने पारि चीन क्षेत्र हो ।

भोटबाट झरेको भोटेकोशीमा बनेको पुलको बीच भागमा रेखा कोरिएको छ । त्यो रेखा नै शायद नेपाल-चीन सीमा हो । त्यसैले म पारिका दृश्यहरू हेरेर र त्यहाँ सीमाका पहरेदार मूर्ति समान सुरक्षा कर्मीलाई हेरेर चीन हेर्ने धोको मेटिरहेंछु ।

इन्द्रावती मिसिएपछि सुनकोशी र अरू पाँच नदी मिलेपछि सप्तकोशी भनेर चिनिने यो भोटेकोशीको उर्लदो अवस्था र गर्जदो आवाजले लिपिङ्को वातावरणलाई नै रमाइलो तुल्याएको छ । शेर्पा जातिले खासा भन्ने गरे पनि चीनियाँहरूले जाङमु भन्ने गरेको जाङमु शहर यो मितेरी पुलसँग नजीकिन खोजेको भान भइरहेको छ ।

मोटरमा जाँदा पन्ध्र किलोमीटर लामो बाटो, हिंडेर जाँदा पनि दुई घण्टा लाग्ने दक्षिण फर्केको हरियो डाँडामा अवस्थित जाङमु शहरका सेता र टल्कने घरहरू चम्केको देखेर मेरो मनलाई नै प्रफुल्ल पारिरहेको छ । म घण्टौं उभिएर हेरिरहँदा पनि मेरो मन भरिएको छैन ।

हेर्दाहेर्दै सम्झें-कुदेर जाङ्मु शहर पुगूँ । तर के गर्नु ? जहाँ जान भिसाको जरूरत पर्छ । विदेशी भूमि जतिसुकै रमाइलो लागे पनि जान नसकिने । त्यसैले हेरेरै बसें ! मनग्गे हेरें ! नथाकेसम्म हेरें ! मेरा खोजपूर्ण आँखाले केही समाउन र खुट्याउन पनि सकेन, भोटेकोशीको वेग दक्षिणतर्फ फाल हानिरहेछ भने मेरो मनको वेग उत्तरतर्फ उकालो चढ्न व्यस्त छ ।

सर्वप्रथम मैले चीनियाँ मान्छेहरूलाई काठमाडौं-कोदारी राजमार्ग निर्माण कालमा देखेको हुँ । यी चीनियाँहरू बस्दा एकै ठाउँमा बस्ने, सँगै खाने र सँगै बजार घुम्न हिंड्ने र कोहीसँग नबोल्ने हुँदा अरू विदेशीभन्दा पृथक् देखिन्थे ! नौलो जनवादको थालनीपछि चीनले गरेको प्रगति पढ्दा रमाइलो लाग्दथ्यो, त्यसै समयदेखि अध्यक्ष माओको टाउकोको फोटो भएको लकेट सबै चीनियाँ हरू, जो यहाँ कार्यरत छन्, ले लगाउने र सम्पर्कमा आएका नेपालीहरूलाई उपहारस्वरूप दिने गर्दथे र केही नेपालीहरूले पनि त्यो लकेटलाई लगाउने गरेका छन् ।

हाम्रा देशका केही क्षयरोगले ग्रस्त व्यक्तिहरूलाई चीनमा उपचार गराउन पठाउने प्रचलन पनि थियो किनभने चीनमा क्षयरोगको औषधोपचार भयो भने रोग निर्मूल हुन्छ भन्ने बलियो विश्वास हाम्रो समाजमा छ । त्यही रोगको उपचार गर्न गएका रोगीहरू, चीन प्रवासबाट फर्कँदा कट्टर कम्युनिष्टको अनुयायी भएर आउँथे र चीनका बारेमा भन्नु सुनाउनुभन्दा साम्यवादी सिद्धान्तका बारेमा व्याख्या गर्न नै आफूलाई व्यस्त राख्थे । यहाँका रोगीहरू शारीरिक औषधोपचार गराउन गएकोमा मानसिक उपचार गराएर फर्काइन्थे । अनि यिनीहरू नव चीनका कट्टर समर्थक देखिन्थे ।

पुरातन चीनको जनजीवनको इतिहास विश्व-सभ्यतामा ज्यादै उच्च स्थान ओगटेको कुरा, पुराना प्रकाशित कथा, कहानी र छिटफुट प्रकाशित इतिहासले हामीलाई बताएको छ । यो जातिले गरेको वीरत्वको गाथा पत्याउन नै नसकिने गरी व्याख्या गरिएको पनि हामीले सुनेका छौं, तर नवचीनका बारेमा भने अत्यन्तै अनभिज्ञ अवस्थामा हामी छौं ।

यो मितेरी पुल जो चीन सरकारकै सहयोगमा निर्माण भएको हो र जुन बाटोबाट म काठमाडौंदेखि आएँ, त्यो पनि उनीहरूकै सहयोगको प्रतिफल हो । यस मानेमा चीनियाँहरूप्रति मेरो अत्यन्तै श्रद्धा छ र अत्यन्तै मैत्री भाव हृदयमा पैदा भइरहेर पनि म उनीहरूको सामु व्यक्त गर्न सकिरहेको छैन । कारण, मैले चिनेका चीनियाँहरू यहाँ कोही छैनन् र मसँग बोल्न आउने पनि कोही छैनन् ।

मेरो घण्टौं बसाइमा पारितर्फका चीनियाँ मान्छेहरूलाई मैले धेरैपटक हात हल्लाई हल्लाई उनीहरूको ध्यान आफूतर्फ खिच्ने प्रयत्न गरें, तर प्रतिउत्तरमा उनीहरूबाट मैले केही पाइनँ । मेरो लामो पर्खाइ रित्तो रह्यो । मेरा आँखाले भ्याएसम्मका चीन क्षेत्र मनग्गे हेरें । आफ्नै हिसाबले कल्पनाको जाल बुनें र आफ्नै किसिमको चीनको परिकल्पना गर्दै चीन-नेपाल सीमाबाट म आफ्नो क्षेत्रतर्फ मोडिएँ ।

दिन ढलिसकेको हुँदा त्यहीं कोदारीमा शेर्पा जातिको एक जना सज्जन पुरुषले चलाएको सानो लजमा रात बिताउने मैले निश्चय गरें । त्यस लजका मालिक शेर्पा भएका

र उनलाई भोटको बारेमा धेरै जानकारी रहेछ । उनले भने- 'यी चीनियाँहरूले तिब्बत प्रवेश गरिसकेपछि हामीलाई भोटतिर आउन- जान पनि बन्देज लगाइएको छ । हाम्रो सालभरिलाई चाहिने नून भोटबाट नै ल्याउँथ्यौं, हाल हामीले भोटको नून खान पाएका छैनौं ।'

हुन पनि नेपालमा चाहिने नून भोटबाट नै आउने गरेको कुरा मलाई थाह थियो । त्यत्ति मात्र होइन मासुको लागि भेडाच्याङ्ग्रा र ऊन समेत तिब्बत क्षेत्रबाट नै आउने गर्थ्यो । हाल यी आउन बन्देज लगाइएका कुरा थाह पाएँ । उनले चीनको नीतिको विरुद्धमा धेरै धेरै कुरा सुनाए । यिनी तिब्बतको धेरै भाग घुमेका रहेछन् । यिनको भनाइ-अनुसार कुनै हालतले पनि तिब्बतलाई चीनले अधीन गर्न नहुने हो भन्ने कुरामा यिनी स्वयम्मा अत्यन्त विश्वस्त रहेछन् यिनको विश्वासका आधार-बारेमा मलाई जान्न उत्सुकता जाग्यो र मैले उनलाई सोधें- 'कसरी भन्न सक्नुहुन्छ तिब्बत चीनले अधीन गर्नै हुँदैन भनेर ? '

'यसको भौगोलिक स्थिति तपाईंलाई थाह छ ?' उनी मसँग प्रश्न गर्छन् ।

'हो ! थाह छ ! यसको दक्षिणमा हिमालय पर्वत छ र उत्तरमा चीन क्षेत्र छ ।'- मैले जानेको कुरा उनलाई बताएँ ।

'हो ! दक्षिणमा अग्लो हिमालय हुँदैमा तिब्बत नेपालबाट टाढा होइन । चीनको भू-भागको हिसाब गर्दा पनि चीनबाट तिब्बत नजीक होइन । जहाँसम्म राजनीतिक कुरा हो, चीन र नेपालको बराबर सम्बन्ध र पहुँच रहेको हाम्रो आपसी व्यवहारले प्रमाणित गर्दछ ।'

लज - मालिकको यस्तो गम्भीर र दुई देशको बीचको सम्बन्धबारेमा गहिरो जानकारी भएको कुरा सुन्नेबित्तिकै म उनीप्रति अत्यन्तै सतर्क भएँ र उनलाई सोधें- 'दाइ ! तपाईंको नाम के हो ? र तपाईं योभन्दा पहिले के काम गर्नुहुन्थ्यो ?'

'मेरो नाम वाङ्दु शेर्पा हो । मेरो घर नेपाल भू-भागमा भए पनि मेरो रहन-सहन, बस-उठ र विधि-व्यवहार तिब्बतको दक्षिणी क्षेत्रको तिब्बतीहरूसँग मिल्छ । म धेरै वर्षदेखि तिब्बत व्यापारमा थिएँ । मेरा धेरै व्यापारी साथीहरू पनि थिए । तर समय - चक्रको कुरा कसले जान्ने ? दलाई लामा त तिब्बत छोडेर हिन्दुस्थान जानुभयो भने हामी जस्ता मामूली मान्छेको के कुरा ?'

उनले भन्दाभन्दै आफ्नो वाक्यलाई रोकेर मलाई नियाल्न थाले । उनको म-प्रतिको प्रश्न साधारण थियो, जो मैले आफ्नो बारेमा केही वाक्यमा नै प्रस्तुत गरेपछि उनी मसँग ढुक्क भए । उनको र मेरो कुराकानीको थालनी नै त्यस्तो थियो, जो अन्त्य हुने स्थिति नै थिएन । मेरा अनेकानेक जिज्ञासा उनको अगाडि प्रस्तुत हुँदै गए । प्रस्तुत समस्या-पूर्तिको लागि उनी वाध्य हुँदै गए ।

उनी बडो चिन्तित अनुहारमा भन्दै गए- 'तपाईंलाई थाह छ ? जब सन् १९५९मा तिब्बतमा चीनियाँ सैनिक प्रवेश गर्‍यो तब तिब्बतका सबै साना, ठूला जिम्मेवार व्यक्तिदेखि

लिएर व्यापारीहरू समेत त्रस्त भएर भाग्न तरखरिए । कोही भाग्न सफल भए त कोही भाग्न नसकी त्यहीं मर्नु र बाँच्नुको दोसाँधमा लुकेर बसे । धेरै त अँधेरो कोठामा आफसेआफ गुम्सिएर मरे । जो बाँचे ती पनि सबै मर्ने बाँच्ने दोसाँधमा आफ्नो समयलाई काट्दैगए । यस हिसाबले तिब्बतका हुने खाने र जानकार व्यक्ति त्यसै हराएर र सेलाएर गए ।'

'अनि को बाँकी रहे त ?'- अनायास मेरो प्रश्न वाङ्दुमाथि- तेर्सिन्छ।

'बाँकी तिनै रहे, जो भाग्न सकेनन्. जोसँग कुनै साधन थिएन र विवश थिए बाँकी रहे ।' उनी बड़ो गम्भीर भएर उत्तर दिन्छन् ।

उनको भनाइबाट आश्चर्य-चकित हुन्छु । उनको भनाइ-अनुसार आज पनि हरेक दिन तिब्बतबाट सयौंको संख्यामा मान्छेहरू नेपाल र हिन्दुस्थान झरिरहेका छन् । बाटो एउटा छैन । हिन्दुस्थानको अरुणाञ्चलप्रदेश देखि सिक्किम गान्टोक अनि र नेपालको वलाङ्चुङ्देखि सोलु तथा यही कोदारी र पश्चिममा धुन्चे, मुस्ताङ, मनाङ र हुम्ला-सम्मका बाटाहरूबाट मान्छेहरू दिनहुँ झरिरहेका छन् । चाहे ती व्यापारी हुन्, चाहे किसानवर्ग नै, कुनै वर्ग हाल तिब्बतमा बस्न चाहँदैनन् । कारण, तिनको रानो नै विदेशी एपछि सबै एकलिएका छन् ।

'के सबै झरिसके त ?' म आफ्नो अबुझपन उनको अगाडि प्रस्तुत गर्छु ।

'के भन्नुभएको ? कसरी सबै झर्ने ? कुन बाटोबाट भाग्ने ? सबै बाटोघाटो चीनियाँ सैनिकले नाकाबन्द गरिसके !'- उनी आफ्नो कुरामा जोड दिंदै मलाई सम्झाउने कोशिश गर्दै भन्छन् - 'यसरी चीनियाँ सैनिकले घेरे कि कुनै पनि व्यक्ति भाग्ने वा देश छोड्ने अवस्था नै भएन । फेरि मुख्य मुख्य शहर बजार त झन् चाँडै नै नियन्त्रणमा लिए ।'

उनको भनाइसँग मेरो सहमति वा असहमति कुनै हुँदैन । म एकोहोरो उनको कुरा सुन्नमा तल्लीन छु । मैले नजानेका र नबुझेका धेरै र थुप्रै कुराहरू उनी बताउँदै जान्छन् । म उनको कुरामा आफूले बुझेको सहमति सम्म जनाउने गर्छु ।

यसैबीच एकजना महिला चियाको थरमस र हातमा दुईवटा चियाको कप बोकेर हाम्रो अगाडि आइपुग्छिन्, एक एक चिया-कप हाम्रो अगाडि राख्छिन्, थरमसको चिया कपमा भर्छिन् र हाम्रो छेउमै थुचुक्क बस्छिन् । यिनी वाङ्दुकी श्रीमती छिरिङ रहिछिन् । यो कुरा वाङ्दुले मलाई भनेपछि थाह भयो ।

श्रीमती छिरिङ्का आमा-बाबुको घर हाल तिब्बत क्षेत्रमा परेको हुँदा भेटघाट गर्न जान सकेकी रहिनछन् । उनको भनाइ अनुसार एकजना भाइ जसोतसो ज्यान जोगाएर भागेर आयो, अरू सबै पारि नै छन् । आमा - बाबु ज्यादै वृद्ध भएको हुँदा रातारात गरी हिंडेर दिउँसो लुकेर हिमाल पार गर्न असमर्थ छन् । तिनीहरू त्यत्तिकै मर्छन् । अब तिनीहरूको अनुहार देख्न नपाइने भयो भन्ने छिरिङ्को गुनासो छ ।

यो दुःखपूर्ण कुरा श्रीमती छिरिङले आँखाभरि आँसु र मुटुमा गाँठो पारी सुनाइन् । तुरुन्तै मैले उनलाई सान्त्वना दिन भनें - 'पारि पनि त तपाईंको परिवार राम्रै गरी बसेका होलान् ! किन पीर गरेको ?'

'राम्रो त के ? कैयौं दिन घरबाट बाहिर निस्कन पाएनन् । जो डराएर भाग्न खोज्यो वा सैनिकको इच्छा- विरुद्ध बोल्यो वा चल्यो भने गोली खानु बाहेक अरू केही उपाय थिएन, यो कुरा मलाई भाइले सुनाएको हो । भाइले भन्थ्यो - कति मान्छे त सैनिकको हूल जमात देखेर तर्सेर भाग्दा-भाग्दै बाटोमै भ्वाक्क भ्वाक्क मरे ! कैयौं हिउँले पुरिए ! कैयौं हराए ! पारि बसेकाहरू बसेका त छन् तर कसरी बसेका छन् ? यो तपाईंले अनुभव गर्न सक्नुहुँदैन !'- श्रीमती छिरिङ दुःखित स्वरमा सविस्तार उनको अनुभव मलाइ सुनाउँछिन् ।

वाङ्दु आफ्नी श्रीमतीको भनाइलाई पुष्टि गर्दै भन्दछन्- 'हेर्नुहोस् ! तपाईंलाई थाह छैन ! यही भोटेकोशीको भित्तामा सयौं भोटेहरू मरे !'

कसरी ? - मैले जान्न चाहें ।

'टाढादेखि थकित भएर आएकाहरू सीमा देख्नेबित्तिकै हतारले हामफाल्दा ढुङ्गा चिप्लिएर पहाडबाट खुरमुरिएर मरे भने कति त्यस्ता धेरै भगौडाहरूले चीनियाँ सैनिकको गोलीको शिकार यही पारि हुनुपर्‍यो । एक जना त मैले नै राम्ररी चिनेको सिगाचेका ठूला व्यापारी थिए । उनको मृत्युले मलाई धेरै दिन दुःखित तुल्यायो ।'- वाङ्दु आफूले देखे-जानेका कुरा सम्झँदै हृदय दुःखित तुल्याउँछन् ।

उनी भन्दै जान्छन्- 'हाम्रो नेपाली रुपियाँ लिएर हामी भेडा किन्न जान्थ्यौं । नून हामी नेपाली रुपियाँमा नै खरीद गर्थ्यौं । तिब्बतमा आजदेखि होइन, सयौं वर्ष अघिदेखि दोहोरो हाम्रो व्यापार थियो र व्यापारी थिए ! अहिले खै ? कहाँ गयो त्यो व्यापार ? कहाँ गए ती व्यापारीहरू ?'

म उनको भनाइ राम्रोसँग सुनिरहेको छु । मेरो लागि नितान्त नौलो कुरा भएको हुँदा मैले आफ्नो प्रतिक्रिया जनाउने पनि कुनै ठाउँ छैन । म सुन्दै र बुझ्दै जाँदै छु ।

उनी भन्दै जान्छन्- 'कैयौं हाम्रा नेपाली शेर्पा र खच्चरहरू त्यतै छन्।'

'यता तर्फका नेपालीहरू व्यापारमा जाँदा पारिको केटीसँग सम्पर्क भएर जन्मिएकाहरू खच्चर हुन् । यस्ता खच्चरहरू एक दुई होइनन्, हजारौंको संख्यामा छन् । अझ ल्हासा जाने बाटो कुती, थिंग्री र सिगाचे क्षेत्रका केही गाउँहरू पूराका पूरा खच्चरले भरिएका छन् ।'

यी खच्चरहरू कुन देशका नागरिक हुन् त ? भन्ने मेरो प्रश्नको उत्तरमा भन्छन्- 'पहिलेको नेपाल-तिब्बत सम्झौता अनुसार छोरा जति नेपालको हुने र छोरी जति तिब्बतको हुने भन्ने थियो । अब चीनियाँ शासन लागू भइसक्यो, कसरी छुट्याउने ? हेर्दा सबै भोटे नै हुन् । बसोबास सबैको तिब्बतमै छ ।'

खच्चरहरूको बारेमा मलाई पहिलोपटक वाङ्दुले नै बताए । यसभन्दा अघि मलाई थाहा थिएन । पुरानो व्यवस्था अनुसार तिब्बतको धेरै भागमा नेपालतर्फका मुखिया-डिट्ठा रहने गर्थे र तिनीहरूले नै ती खच्चरहरूलाई संरक्षण दिने र नियन्त्रण गर्ने काम गर्दा रहेछन् । खास खच्चरहरूको काम नेपालबाट गएका व्यापारीहरूको सामान निश्चित ज्याला

लिई तोकिएको क्षेत्रसम्म भारी बोकेर ल्याउने र पुग्याउने काम गर्नुपर्ने रहेछ । तिनीहरूलाई दण्डजरिमाना वा पुरस्कृत गर्ने अधिकार पनि नेपाली अधिकारीलाई नै रहेछ ।

अनुभवी वाङ्दु शेर्पाले तिब्वती भू-भागका कुरा मलाई सुनाए । उनको भनाइ अनुसार तिब्वत ज्यादै विशाल क्षेत्र हो । त्यहाँ विभिन्न जातिहरूको बसोबास छ । पूर्व क्षेत्रमा आम्दु जाति छन् भने पच्छिमतर्फ खम्पाहरूको बसोबास छ । मध्य क्षेत्रमा नेपालको उत्तरी भागका भोटेहरूको बस्ती छ, त्यसैले भोटेहरूको क्षेत्र भोट हो र भोट जहिले पनि नेपालको सम्बद्ध थियो ।

भोट क्षेत्रमा नेपालको सामाजिक, आर्थिक र राजनीतिक अधीनता बारेमा जान्नु मेरो चासोको विषय होइन, त्यसैले बढी मैले यसबारेमा कोट्याउन पनि चाहिनँ, त्यसैले हाम्रो कुराकानीमा रोकावट आयो । म साँझको खानाको सोधखोज गर्न थालें ।

यसै- बीच श्रीमती छिरिङ्ले मेरो लागि खाना र अन्य आवश्यकीय व्यवस्था गरिसकेकी रहिछिन् । खाना खाएर म सुले कोठातर्फ लागें ।

भोटेकोशीको अविरल गुञ्जनको संमिश्रणमा मेरा कल्पनाका लहरहरू जोल्ठिँदै र बाँटिँदै बन्द चीनियाँ क्षेत्रभित्र प्रवेश गर्न थाले । यसै धमिलो कल्पनाभित्र माओत्से तुङ्को नौलो जनवादको व्यावहारिक पक्षका बारेमा अनेकानेक छायाचित्रहरू देख्न थालें ।

राजनीतिक रूपले उत्पीड़ित र आर्थिक रूपले शोषित चीनका बारेमा नदेखे पनि केही सुनेको थिएँ । चीनलाई स्वतन्त्र र समृद्ध बनाउने तथा पुरानो संस्कृतिको प्रभुत्व अन्तर्गत अज्ञान र पिछडिएको अवस्थामा रहेका चीनियाँ जनतालाई प्रबुद्ध र प्रगतिशील बनाउँदै नौलो चीनको निर्माण गर्ने उद्देश्यले थालिएको नौलो जनवादको बारेमा सम्झँदा उत्पीडन र शोषणले सताइएको गरीब देशको म पीड़ित नागरिकलाई न्यानो आनन्द मिल्नु स्वाभाविक हो ।

बिहान उज्यालोभइसकेको छ । चर्पीको व्यवस्था नभएको हुँदा कुनै खोल्सो वा तल भोटेकोशी नै पुग्नुपर्ने रहेछ । बिहानको कार्यबाट फुर्सद पाउन म भोटेकोशीतर्फ गएँ, त्यहाँको रमाइलो वातावरणमा केही क्षण बिताएँ ।

पारि चीन क्षेत्र हो । यो एउटै नदीको दुई किनार किन उस्तै छैन ? उही पहाड, उही ढुंग्यान र उस्तै भौगोलिक अवस्थाको थलो भएर पनि किन भिन्न ? किन आकाश र जमीनको अन्तर ? यही भोटेकोशी पार गर्न दौडादौड र भागाभाग गर्दै पारिबाट किन मान्छेहरूको ओइरो वारितर्फ लाग्दै छ ? हेर्दा वारि र पारिको फरक केही नदेखिए पनि मान्छेहरूको आकर्षण यसतर्फ किन छ कुन्नि ? यी मान्छेहरू किन तर्सेका छन् नौलो चीन निर्माण गर्ने उद्देश्य बोकेका जमातहरूसँग ?

यी सबै प्रश्नहरू एक-एक गरी मेरा मनभित्र उब्जन थाल्छन् । म पारिको ढुंग्यान डाँडोलाई तलदेखि माथिसम्म हेर्दै वेला-वेलामा जाङ्मु शहर नियालिरहेको छु । सुनेको थिएँ- केही वर्ष अगाडिसम्म यो खासा र रमिते डाँडो नेपालतर्फका शेर्पाहरूको सानो खर्क थियो । त्यसैले यो खासाको नामले परिचित भएको हो । हाल यो तिब्बत-सीमा क्षेत्रभित्र

पर्ने भएकोले स-सानो शहर नव नीर्माण गरी चीनियाँहरूले जाङ्मु भन्ने गरेका छन् । यसरी तल भोटेकोशीवाट माथि हेर्दा दक्षिण फर्केको डाँडोमा अवस्थित जाङ्मु शहर साँच्चिकै मनमोहक छ ।

शायद तिब्वती मान्छेहरूको हातमा बन्दूक भएको भए तिब्बतीहरू यसरी भागाभाग गर्ने थिएनन् कि ? आफ्नै हातमा शक्ति छ भनेर ढुक्क भई आफ्नै ठाउँमा बस्ने थिए कि ?

क्रान्ति सबै मुलुकमा हुन्छ, किनकि राष्ट्रिय सवालमा सबैको एकमत हुन्छ अनि सवैले महसूस गर्छन् कि सबैको भलाइको लागि यो शुरू भएको हो । यस्तै कुरा सोध्दै म उकालो लाग्छु ।

म माथि वाङ्दु शेर्पाको कोठामा आइपुग्छु । धेरै मान्छेहरू खाना खान भनेर बसेका रहेछन् । श्रीमती छिरिङ यात्रुहरूलाई सेवा पुग्राउन व्यस्त थिइन् । म पनि कोठाको एक कुनामा रहेको मेचमा गएर बस्छु ।

वाङ्दु मलाई सम्बोधन गर्दै भन्छन्- 'राती जाडो भयो कि ?'

'होइन, बडो आनन्दले नीद आयो !'- मैले उत्तर दिँदै उनको लजको ताडीफ गरें- 'साँझको खाना पनि राम्रो थियो र ओड्ने बिछ्याउने पनि राम्रा थिए ।'

'बिहानको खाना पनि यतै खानुहुन्छ कि ?'- खाना तयारी गर्न उनले अग्रिम आदेश मागे ।

खाना खाने समय हुन लागिसकेको छ । खाना खाएर काठमाडौंतर्फ लाग्ने निश्चय गरी उनको प्रश्नलाई सहमति जनाएँ ।

म बसेको छेउमै श्रीमती छिरिङ्ले नूनचिया एक कप ल्याएर राखिदिँदै सोध्छिन्- 'यो भोटे चिया मन पर्छ कि पर्दैन ? होइन भने चीनीचियाँ बनाउँछु ।'

'होइन ! यही ठीक छ ! म पिउँछु' - मैले आफ्नो इच्छा व्यक्त गर्दै कपको चिया पिउन थालें ।

मेरो प्रत्येक चुस्कीले कपमा घटाएको चियाको सतह श्रीमती छिरिङ्ले पूरा गर्दै जान्छिन् । म पिउँदै गएँ । घण्टौं भइसक्यो चियाको कप रित्तिदैन । श्रीमती छिरिङ्को सतर्कताले चियाको कप मैले रित्त्याउन सकिनँ ।

'बसाइ यहाँको राम्रो कि माथिको राम्रो ?' यो प्रश्न मैले चियाको कप भर्न आएकी श्रीमती छिरिङ्सँग गरें ।

'अहिले त यहींको राम्रो !'

'ठाउँ नि ?'

'ठाउँ त माथिकै राम्रो !'

'किन र ? माथि ज्यादै राम्रो छ कि क्या हो ?'- म जान्न चाहन्छु ।

'उज्याला र रमाइला गाउँघर छन् !! गाह्रै रमाइलो छ !'- आफ्नो जन्मस्थल सम्झेर होला श्रीमती छिरिङ यतिखेर हँसिली र आनन्दित देखिन्छिन् ।

तिब्वतका गाउँघर र शहरका बारेमा उनले देखे-जानेका कुरा बताउँछिन् । सुन्दा त्यो अर्कै आनन्दको संसार जस्तो लाग्यो । आफू जन्मेको थलो स्वर्ग बराबर हुन्छ-त्यसैले श्रीमती छिरिङलाई तिब्बत राम्रो लागेको हुन सक्छ ।

छेउमै बसेका एक युवकले हाम्रा कुरा सुनिरहेका मात्र छैनन्, श्रीमती छिरिङसँग तिब्बतको बारेमा सोधखोज पनि गरिरहेका छन् । ती युवकले चीनियाँ सैनिकको ज्यादतीले धेरै तिब्बतीहरू नेपाल, भारत र विश्वको अन्य मुलुकमा राजनीतिक शरण लिन तिब्बत छोडेको कुरा पनि थाह पाए ।

तिब्वतको बारेमा जानकारी राख्न चाहने यी युवकको नाम कमलकान्त रहेछ । यिनी साम्यवादी सिद्धान्तका अनुयायी र अझ माओ विचारधाराका कट्टर समर्थक रहेछन् ।

हाम्रो सामान्य चिनजानपछि हामी आपसमा अलि नजीकिन्छौं । म उनीबांट केही जानकारी पाउने आशामा आफ्नो जिज्ञासा पोख्छु ।

चीनको क्रान्ति विश्व-क्रान्तिको एक अंग हो र चीनमा नौलो जनवादको सफलता नै कम्युनिजमको विश्वव्यापी सफलता हो भन्ने बलियो धारणा बोकेका कमलकान्त पुरातन् चीनका बारेमा मलाई धेरै कुरा बताउँछन् ।

प्राचीन चीन अत्यन्तै सभ्य र सुसंस्कृत थियो । सन् १८४० को अफिम युद्धदेखि त्यहाँको सामाजिक अवस्थामा गतिरोध उत्पन्न भयो । मान्छेहरू बिस्तार बिस्तार अय्यासी र स्वार्थी बन्दै गए । अर्ध सामन्त र सामन्त वर्गहरूको समाजमा प्रभुत्व बढ्दै गयो । धर्मको नाउँमा एक वर्ग आरामसँग जीवनयापन गर्न थाल्यो भने अर्को वर्ग धर्म कमाउन मरी मरी काम गर्न थाल्यो । समाजको बनावटमा नै विकृति पैदा भयो । पछि फेरि विदेशी पूँजीवादको आक्रमण शुरू भएपछि चीन क्षेत्र र चीनियाँ समाज बिस्तार बिस्तार औपनिवेशिक र अर्ध औपनिवेशिक स्वरूपमा बदलिन थाल्यो । यसरी बिस्तारै चीन आफ्नो वास्तविक परिचयबाट अलग्गिन थाल्यो । यो तर्क कमलकान्तको हो ।

म उनको भनाइलाई चाखका साथ सुनिरहेको छु । उनी भन्छन्-चाओ र छिन राजवंशहरूको समयमा चीनको अर्थ-व्यवस्था ज्यादै जीर्ण हुन पुगेको थियो भने चीनियाँ संस्कृतिमा पनि विविधता आउन थाल्यो । समाजको राजनीति र अर्थव्यवस्थालाई प्रतिबिम्बित गर्ने जिम्मा लिएको संस्कृति पनि सामन्ती संस्कृति बन्दै गयो, त्यसैले चीनियाँ क्रान्तिले राजनीतिक, आर्थिक र सांस्कृतिक तीनै क्षेत्रमा आफ्नो प्रहारको निशाना बनायो ।

चीनियाँ क्रान्ति बारेमा कमलकान्तलाई पूरा जानकारी भएको कुरा उनको भनाइबाट मैले थाह पाएँ । मलाई पनि चीनको बारेमा केही जानकारी त थियो नै, तर कमलकान्त-बराबर होइन रहेछ, चीनको बारेमा उनीबाट मैले धेरै जान्न चाहें ।

उनको भनाइ अनुसार भू-मण्डल ढाकेको विश्व-पूँजीवादको ठूलो भाग ढलिसकेको छ र त्यहाँ कम्युनिष्टको कब्जा जमिसकेको छ, विश्वको अझ बाँकी भाग पनि जतासुकै

मक्किँदै गइरहेको हुँदा अब पूँजीवादी देशहरू निकट भविष्यमै कम्युनिष्टको कब्जामा पर्नेछन्-यो कमलकान्तको विश्वास हो ।

यो भनाइमा भने मैले उनलाई सहमति जनाइनँ । वास्तवमा यो उनको कम्युनिष्ट सिद्धान्त-प्रतिको विश्वास हो र उनको अडकल पनि हो । कम्युनिष्टले विश्वलाई नै आफ्नो लपेटामा पार्न पनि सक्छ वा आफै विश्व-मानचित्रबाट हराएर जान पनि सक्छ-यो भविष्यको गर्भभित्र छ ।

कमलकान्तलाई अर्का एक जनाले सोधे- 'चीनियाँ क्रान्तिलाई किन विश्वभर आलोचना गरिन्छ ?'

'साम्राज्यवादको दबदबा विश्वभर फैलिएको छ । चीनियाँ क्रान्तिले साम्राज्यवादको कोखमा नै प्रहार गर्छ । साम्रज्यवादी र त्यसका प्रभावका मुलुकहरूले आलोचना मात्र होइन, खुलेर विरोध गर्दछन् । तर समाजवादी देशले यसको समर्थन नगरे पनि विरोध चाहिं गर्दैनन् । मेरो विचारमा सबै क्षेत्रबाट आलोचना भने भएको छैन । यसका समर्थक पनि विश्वभरका किसान, मजदूर र सर्वहारा वर्ग छन् । त्यसैले चीनियाँ क्रान्ति आलोचनाको विषयभन्दा अनुकरणयोग्य साबित भएको छ ।'- कमलकान्तले ठोकुवाका साथ हाम्रो सामु आफ्नो तर्क पेश गरे ।

'कस्तो अनुकरण ? किसान र मजदूरलाई आफ्नो हक हितको लागि आवाज उठाउन लगाएर वा किसान र मजदूरलाई आफ्नो व्यवसाय छोडाएर हाते औजारको साटो बन्दूक बोकाएर क्रान्तिको बिगुल फुकाउने अनुकरण भन्नुभएको हो ?' - अझ स्पष्ट हुन चाहेर उनले कमलकान्तको अगाडि आफ्नो जिज्ञासा प्रस्तुत गर्छन् ।

'ठीक भन्नुभयो ! किसान र मजदूर ती सर्वहारा वर्ग हुन् जो युगौं-युगदेखि सामन्तवाद र पूँजीवादको दबदबामा थिचिएर, मिचिएर र पिल्सिएर मान्छेको रूपमा मात्र बाँचेका छन् । तिनीहरूकै नेतृत्वमा विश्व-क्रान्तिहरू शुरू भइरहेका छन् र अन्ततोगत्वा विश्वका सबै मुलुकहरूमा तिनीहरूकै अधिनायकत्वमा राज्य संचालन हुन्छ । त्यस बखत कोही धनी र कोही गरीब रहनेछैनन् र कोही सानो र कोही ठूलो बन्नेछैनन् । सबै समानताको आधारमा राज्य-व्यवस्था संचालन हुनेछ'- दृढ निश्चयका साथ कमलकान्त आफ्नो विश्वास व्यक्त गर्छन् ।

सिद्धान्तको कोरा आधारभन्दा व्यवहार-पक्षमा के भइरहेछ भन्नेतर्फ म कमलकान्तको ध्यान आकर्षण गराउन थाल्छु । चीनियाँ क्रान्तिकारीको तिब्बत प्रवेशले शान्तिप्रिय मृगहरूको वाटिकामा हिंसक बाघ पसेजस्तो किन भयो ? सबै भयग्रस्त भएर भागाभाग किन गर्न थाले ? किन ती किसान तथा मजदूरले हाम्रै अधिनायकत्वमा क्रान्ति छेडिएको छ भनेर बुझ्न नसकेको ? आदि प्रश्न पनि मैले कमलकान्तको अगाडि राखें ।

उनको भनाइमा- 'ती भगौडाहरू कम्युनिष्ट आन्दोलनका विरोधी सामन्तवाद तथा पूँजीवादका पृष्ठपोषक प्रतिक्रियावादी तत्त्व हुन् र परम्परावादी विचार राख्ने बुर्जुवाहरूका पिछलग्गू हुन् । तिब्बतको सबै जनता त्यहीं छन् । ती भगौडाहरू त जनसिद्धान्त-विरोधी साम्राज्यवादीका दलाल मात्र हुन् ।'

कमलकान्तले यसरी खुला रूपमा चीनियाँ क्रान्तिको समर्थन र तिब्बतीहरूको विरोध गरेको सुनेपछि वाङ्दु शेर्पा र श्रीमती छिरिङ्ले पनि हाम्रो कुरामा अलि बढी ध्यान दिएजस्तो लाग्यो ।

खाना तयार हुने वेला भइसकेर पनि चिया कपमा भरिने काम भइरहेछ । अलि जाडो ठाउँ भएकोले मैले चिया पुग्यो भनेर भनेको पनि छैन । कमलकान्त पनि चिया पिउन व्यस्त छन् ।

कमलकान्तलाई सम्बोधन गर्दै श्रीमती छिरिङ प्रश्न गर्छिन्- 'तपाईंले किन तिब्बती मान्छेलाई नराम्रो भन्नुभएको ?'

यो प्रश्नले कमलकान्त झस्कन्छन् । उनी खुल्ला रूपमा चीनियाँ क्रान्तिबारेमा कुरा गर्दै थिए । उनले तिब्बतको बारेमा धेरै नबताए पनि वाङ्दु शेर्पा र श्रीमती छिरिङ्लाई किन चासो बढ्न गयो, मलाई थाह हुन सकेन ।

पहिले त कमलकान्त अकमकिए, केही क्षणमै उनले जवाफ दिए- 'होइन! मैले तिब्बती मान्छेलाई नराम्रो भनेको होइन ! मैले त चीनियाँ क्रान्तिको कुरा गरेको हुँ ।'

'तपाईंले चीनियाँ क्रान्ति ज्यादै राम्रो र तिब्बती मान्छे नराम्रो भनेर भरखर भन्नुभएको होइन ?' वाङ्दु शेर्पाले कुरा थप्छन् ।

'बुझ्नु न सुझ्नु चीनियाँ मान्छे राम्रो भनेर हिड्नु राम्रो होइन'- श्रीमती छिरिङ आफ्नो लोग्नेको कुरालाई पुष्टि गर्छिन् ।

वाङ्दु र छिरिङ्लाई सम्झाउन खोज्दै कमलकान्त भन्छन्- 'गरीब र शोषितहरूले अगुवाइ गरेको क्रान्ति भएको हुँदा चीनियाँ क्रान्ति पूँजीपति एवं सामन्ती वर्गको मात्र शत्रु हो, हाम्रो होइन । हाम्रो त ती चीनियाँ क्रान्तिकारीहरू मित्र हुन् किनकि तिनीहरूले जहिले पनि किसान र मजदूरहरूको हितमा आफ्नो क्रान्तिलाई अगाडि बढाइरहेका छन् ।'

'कसरी किसान र मजदूरको हितमा तिनीहरू अगाडि बढे ? त्यो तपाईंले देख्नुभएको छैन । तपाईंले त किताब पढ्नुभएको छ, वास्तविकता भोग्नुभएको छैन । कम्युनिष्ट प्रचारका सामग्री तपाईंसम्म आइपुग्छ, तर कम्युनिष्ट ज्यादतीका वास्तविक चित्र तपाईंसम्म आइपुग्न सक्दैन । त्यसैले तपाईं चीनियाँ क्रान्तिको बखान सबैलाई बडो गर्वका साथ सुनाउनुहुन्छ । हामीलाई लागेको चोटको दुखाइ तपाईंलाई के थाहा ?' वाङ्दु बडो मार्मिक स्वरले आफ्नो अनुभव कमलकान्तलाई सुनाउँछन् ।

श्रीमती छिरिङ वाङ्दुका भनाइलाई पुष्टि गर्न थप्छिन्- 'हेर्नुहोस् ! चीनियाँ क्रान्ति चीन क्षेत्रभित्र राम्रो होला वा चीनियाँ जातिका लागि राम्रो होला, तर तिब्बतीका लागि चीनियाँ क्रान्तिले कुनै भलो गर्न वा तिब्बतीहरूको भलाइ गर्न सक्दैन किनभने चीन र तिब्बतको भू- ऐतिहासिक सम्बन्ध नै फरक छ र व्यवहार, धर्म तथा संस्कृति नै फरक छ । चीन र तिब्बतलाई एकै दृष्टिकोणले हेर्नु वा एकै क्षेत्र सोच्नु तिब्बतको लागि अन्याय हो र अनधिकृत कब्जा हो ।'

वाङ्दु र श्रीमती छिरिङले तिव्वतमाथि चीनियाँ कब्जालाई पूर्णरूपले असान्धर्मिक र अप्राकृतिक भएको कुरालाई पुष्टि गर्न चाहन्छन् भने तिब्बतमाथिको चीनियाँ क्रान्तिको चढाइँ समुचित एवं स्वाभाविक भएको कुरा कमलकान्त जनाउँछन् । यी दुई थरीका भनाइमा अत्यन्तै फरक छ, मानो यिनीहरूको बीचमा बहस लम्बियो भने नतीजा राम्रो हुँदैन भन्ने मैले बुझेको हुँदा वेला-वेलामा दुवैको बीचको मध्य मार्ग बनी बीचबीचाउको बाटो मैले अपनाउने गरेको छु ।

नवयुवक करीब पच्चीस वर्षको देखिने, गोरो अनुहार, साधारण पहिरनले गर्दा स्कूलको शिक्षक जस्तो लाग्ने, एउटा झोला काँधमा बोकिने खालको साथमा भएको र मृदुभाषी, सरल स्वभाव भएका कमलकान्तका साथमा एक जना अर्का त्यस्तै युवक थिए। उनीसँग पनि एउटा झोला थियो । उनी बोल्नुभन्दा बढ्ता त्यहाँ भएका वार्तालापमा ध्यान दिने गर्दथे । यी दुई हेर्दा एउटै उमेरको भए पनि अर्का चाहिं कमलकान्तका सहायकका रूपमा आएका अनुमान गर्न सकिन्थ्यो ।

वाङ्दु र छिरिङको एकै स्वरको एकै भनाइ सुनेर कमलकान्त एकक्षण चुप रहे र उनीहरूलाई सम्झाउन खोज्दै भने– 'तिब्बत सधैं चीनको अधीन थियो । त्यसैले आफ्नो क्षेत्र घेराबन्दी गर्न तिब्बतलाई नलिइ नहुने अवस्था भएको हुँदा लिएको हो किनभने हिजो पनि तिब्बत चीन साम्राज्यको अधीनमा थियो भने आज पनि तिब्बत विशाल चीनको मातहतमा हुन पुगेको छ । फरक त्यही भयो, त्यो के भने हिजो साम्राज्यवादी चीनको अधीनमा सामन्तवादी तिब्बत थियो भने आज साम्यवादी चीनको मातहतमा समानतावादी तिब्बत हुन पुगेको छ ।'

'के समानतावादीको कुरा गर्नुहुन्छ ? चीनियाँ मान्छेसँग मिल्नेका लागि सबै ठीक र अझ असहाय र चीनियाँ मान्छेसँग पहुँच नपुग्नेहरूका लागि सबै बेठीक साबित हुन थालेपछि कसरी समान हुन्छ ? तपाईं भन्नुहोस् तिब्बत क्षेत्रको समस्या र वास्तविक कुराको अध्ययन तिब्बती स्थायी बसोबासीहरूलाई हुन्छ न कि चीनियाँलाई ?'- वाङ्दु आफ्नो कुरालाई जोड दिंदै कमलकान्तका अगाडि प्रश्न तेर्स्याउँछन् ।

कमलकान्तसँग वाङ्दु र श्रीमती छिरिङको बहस अगाडि बढ्दै जान्छ । कमलकान्त सैद्धान्तिक पक्षको व्याख्या गर्न कोशिश गरिरहेका छन् भने वाङ्दु पक्षले घटेको घटनाको प्रमाण दिंदै व्यावहारिक पक्षलाई अगाडि सारिरहेका छन् ।

वाङ्दु आफ्नो विचारलाई यसरी अगाडि सार्छन्- 'चीनियाँ क्रान्तिकारीको रूपले तिब्बतमा क्रान्ति छेड्नुपर्थ्यो भने तिब्बती जनताको मार्फतबाट गरेको भए मान्छे त्यति त्रस्त हुँदैनथिए । फेरि दलाई लामालाई तिब्बत छोड्न वाध्य गराइयो । दलाई लामालाई औतारी मान्ने र धर्माधिकारी मान्ने तिब्बतीहरू पनि विदेशिन थाले । एक समय त यस्तो थियो कि गाउँका गाउँ तिब्बतीहरू लश्कर लागेर हिमाल पार गर्दै तलतिर झरे । कैयौं मरे । बाँचेकाहरू अर्काको देशमा शरणार्थीको रूपमा बस्नुपरेको छ । यो जसले भोगेको छ, त्यसलाई मात्र यसको दर्द थाहा हुन्छ ।'

'ती कट्टरपन्थीहरू धर्मको आडमा आम जनतालाई शोषण गरेर मुट्ठीभरले मात्र फाइदा लुटिरहेका साम्राज्यवादका पिछलग्गू एवं दलाल-समूह वास्तवमा नवचीन निर्माणको लागि काँटा सावित हुने हुँदा पनि त्यस्ता समाजका वाधक तत्वहरू रहिरहनुभन्दा नरहनु वेस हुन्छ'- चीनियाँ क्रान्तिको समर्थन जनाउँदै कमलकान्त जोशिएर भन्दै थिए । वीचैमा वाङ्दु कमलकान्तको भनाइलाई रोक्न खोज्दै अलि ठूलो स्वरमा भन्छन्- 'त्यसो नभन्नुहोस्।'

'समाज निर्माणका ठेकेदार ती चीनियाँ क्रान्तिकारी होइनन्, यसको निर्माण त प्राकृतिक रूपबाट भइरहेको छ र हुन्छ । मान्छेको विश्वास र मान्यतालाई कसैले मेटाउन सक्दैन र वन्दूकको तातो गोलीले मान्छेको शरीर त ढल्छ, तर मनोभावना, विश्वास र जातीय संस्कृतिलाई मार्न सक्दैन । त्यसैले कसैले पनि आफ्नो परम्परा र जातीय मान्यतालाई छोड्न सक्दैन ।' अलि जोशिएर वाङ्दुले भने- 'एक जातिको सामाजिक संगठन अर्को जातिसँग मिल्नुपर्छ भन्ने केही जरूरी छैन ।'

वहस अलि गर्मिन लागेको हुँदा मैले बीचैमा वोलें-- 'तपाईको भनाइ परिपक्व र व्यावहारिक छ । तपाईका अनुभवले पनि त्यही वताउँछ । तपाईंको भनाइ मनासिब छ । साथै, कमलकान्तजी नवयुवक हुनुहुन्छ, उहाँलाई कम्युनिष्ट सिद्धान्तको धेरै ज्ञान रहेछ र अझ चीनियाँ क्रान्ति-वारेमा जानकार हुनुहुँदो रहेछ । तपाईंबाट पनि उहाँलाई धेरै जानकारी प्राप्त भयो । त्यसैले यस्तो बहस वा कुराकानीबाट धेरै कुरा जानकारी हुन्छ ।'

मेरो भनाइ टुङ्गिन नपाउँदै श्रीमती छिरिङ हामी नजीकै आइपुग्छिन् र शंकालु भावमा भन्छिन्- 'यी भाइलाई पहिले पनि यहाँ देखेजस्तो लाग्छ ! हो?'

'होला !' कमलकान्त दुविधापूर्ण जवाफ दिन्छन् ।

'हो, भन्नुहोस् न ! किन 'होला' भन्नुहुन्छ ?

'हो, नै भन्नुपर्‍यो !'

कमलकान्त केही महीना अघि यही कोदारीमा आएका रहेछन्, यस्तै अर्को होटेलमा चर्को वादविवादमा परेपछि यिनलाई केही व्यक्तिले शंका व्यक्त गरी यिनीसँग भएको झोलाको खानतलाशी गर्दा माओत्से तुङ्का फोटाहरू र चीनियाँ क्रान्ति-सम्बन्धी पुस्तकहरू भेटिएको हुँदा यिनलाई हा हु गरी धपाएका रहेछन् । यो कुरा तब खुल्यो जब श्रीमती छिरिङ्ले यिनीमाथि शंका व्यक्त गरिन् ।

मैले कमलकान्तलाई सोधें- 'तपाईंसँग माओको फोटो छ ?'

'अवश्य छ !'- उनले निःसंकोच मलाई भने ।

'मलाई देखाउन सक्नुहुन्छ ?' मैले उनको झोलाको वस्तु हेर्न चाहें ।

उनले झोलाबाट चीन-सम्बन्धी अनेक पुस्तक र माओत्से तुङ्का फोटाहरू झिकेर स-साना माओको टाउको मात्र अंकित लकेट पनि एक मुठी झिके र एउटा लकेट मलाई दिए ।

त्यो झोलाको माल देख्नेबित्तिकै वाङ्दु शेर्पाले भने-- 'यी भाइ त तिब्बती मान्छेलाई दलाल भन्थे, तर आफू नै पो चीनियाँ दलाल रहेछन् । मान्छे कस्तो मात्र हुँदो रहेछ, यो भाइ देखेपछि पो त चाल पाइयो ।'

यसरी वाङ्दु शेर्पाले कमलकान्तको ठाडै बेइज्जत हुने किसिमबाट बोलिदिए । तर कमलकान्तले त्यो बोलीलाई त्यत्ति चिन्तित रूपमा स्वीकार गरेनन् । मैले सक्दो दुवैको मध्यस्थता गर्न प्रयत्न गरें ।

खाना बनाउन लगाए पनि कमलकान्त खाना नखाई नै हिंड्ने कोशिश गर्न लागेको मैले बुझें । मैले जोड गर्न पनि आवश्यकता महसूस गरिनँ, कारण वाङ्दु र उनकी श्रीमती दुवैलाई कमलकान्त अपच भएको कुरा पनि मैले बुझें । यति बुझेर पनि मैले कमलकान्तलाई रोक्नु मनासिब देखिनँ ।

झोला काँधमा बोकी कमलकान्त र उनको साथी बाहिर निस्किएपछि वाङ्दु शेर्पा भन्छन्– 'बुझ्नुभो ! चीनियाँ क्रान्तिकारी समूहको विश्वव्यापी नेटवर्क छ । आज हेर्नुहोस्! क्रान्ति हुन्छ एउटा देशमा, अर्का देशमा समर्थनमा प्रचार प्रसार भइरहेछ । माओत्से तुङ्को तस्वीर र लकेट सर्वत्र फिंजाइएको छ । यस्तै नवयुवकलाई तालीम गरेर विश्वका सबै कुनामा पठाइएको छ । चीनियाँ क्रान्तिकारीहरूले जतिसुकै नराम्रो गरे पनि राम्रो भएको छ भन्नेहरूको कमी छैन ।'

'होइन ! सबै कुरालाई शंकाको दृष्टिले हेर्नु हुँदैन ।'– मैले वाङ्दुलाई सम्हाल्न बिस्तारै भनें ।

'हामीले शंका गरेका होइनौं । यो मान्छेले पहिले पनि यस्तै नचाँहिंदो कुरो गरेको थियो र आज पनि गर्‍यो । यो राम्रो होइन'- श्रीमती छिरिङ थप्छिन् ।

'ठीकै छ नि ! उसको दृष्टिकोण र विचार बुझ्न पाइयो । हामीले उसको भनाइमा लाग्नुपर्छ भन्ने कुनै जरूरी छैन'- मैले उनीहरूलाई सम्झाउँदै भनें ।

तपाईंको भनाइ ठीक हो ! यदि तपाईं जानिफकार हुनुहुन्छ वा प्रबुद्ध हुनुहुन्छ भने उनको कुराले तपाईंलाई कुनै असर गर्दैन, तर सोझा सीधा मान्छे त यस्ता कुरामा लठ्ठ परेर यिनीहरूकै पछि लागिहाल्छन्'- मलाई हल्का तवरले वाङ्दुले भने ।

खाना खाने समय भइसकेको छ । श्रीमती छिरिङ्ले खाना तयार गरिन् । वाङ्दुले पनि मसँगै बसेर खाने राय व्यक्त गरेको हुँदा हामी दुवै सँगै खाना खान थाल्यौं ।

तिब्बतका बारेमा उनी भन्छन्-- 'हेर्नुहोस्, हामी त हिमालको छेउमा बस्ने शेर्पा जाति हौं । सालमा आधा समय तिब्बत क्षेत्र र आधा समय नेपाल क्षेत्रमा बस्ने हामी शेर्पाहरूले तिब्बत र नेपाल कहिल्यै फरक देखेका थिएनौं । माथिका भोटेहरूले पनि फरक ठानेका थिएनन् । फेरि हाम्रो धर्म एउटै भएको तथा भाषा र व्यवहारमा पनि धेरै समानता भएको हुँदा पनि हामी एकै हौं जस्तो लागेको थियो, तर अहिले राजनीतिक सीमा कायम भएपछि हामी पृथक् भएका छौं ।'

वाङ्दुको भित्री मनको आशयलाई मैले राम्ररी बुझेको छु । सयौं वर्षदेखि खुला हिमाल क्षेत्रमा पनि राजनीतिक सीमा गढ्रेकोमा र बेरोकटोक हिमालको वारपार र पहाडको तलमाथि कुदिरहेकाहरू खुम्चनुपर्दा के महसूस गर्छन्, यो सबैले बुझ्न सक्ने कुरा हो ।

तिब्बतका बारेमा वाङ्दु बताउँछन्-- 'तिब्बत कहिल्यै सम्प्रभुता सम्पन्न राज्य भएन। कहिले चीनको अधीन त कहिले कुनै क्षेत्र नेपालको अधीनमा रह्यो । नेपाल साँच्चिकै बलियो भएको भए भोट क्षेत्रलाई साझा कायम गर्न सक्थ्यो ।'

वाङ्दुको भनाइ चीनियाँ क्रान्ति विरुद्धको आक्रोश हो, तिब्बतमाथि अनधिकृत आक्रमणको विरोध हो । उनको स्वच्छन्द तिब्बत घुमाइमा रोक लागेकोमा गुनासो हो र आफ्ना इष्टमित्रहरूसँग भेट गर्न नपाएकोमा खेद व्यक्त गराइ हो ।

वाङ्दु शेर्पाको ठाउँमा अरू जोसुकै भए पनि यही अवस्था देखिन्थ्यो होला र यही भनाइ सुन्नुपर्थ्यो होला ! यो मेरो अनुमान यस कारणले हो कि वाङ्दुले भनेका र बोलेका कुराहरू कुनै बनावटी नभै मानव हृदयको भनाइ थियो, जो सबैले सरल किसिमबाट बुझ्न सक्छन् ।

खाना खाइसकेपछि छुट्टिने तरखरमा म वाङ्दु र श्रीमती छिरिङ्सँग बिदा हुन चाहन्छु र फेरि फेरि भेट्ने आशय व्यक्त गर्दै हामी छुट्टिन्छौं ।

=★=

## - २ -

उन्नाईस सय सत्तरीको दशकमा म हङ्कङ पुग्दा चीनियाँ मूलका हङ्कङ्का नागरिकलाई देख्ने र तिनीहरूको सम्पर्कमा आउने मौका पाएँ । चीनियाँ मूलका मान्छेहरू हङ्कङमा मात्र होइन, दक्षिण-पूर्वी एशियाका धेरै मुलुकमा फैलिएर बसेका छन् । यात्राको क्रममा थाइल्याण्ड र सिङ्गापुरमा जुन किसिमका चीनियाँ मूलका मान्छेहरू भेटें, तिनीहरू मैले नेपालतिर देखेका चीनियाँहरूभन्दा अलग थिए, अझ ताइवानका चीनियाँहरू भेट्दा त यी चीनियाँ नभएर अर्कै जाति हुन् कि भन्ने भान पर्थ्यो ।

एक दिन मैले ब्रिटिश गोर्खा क्याम्प घुम्ने मौका पाएँ । हङ्कङ्लाई चीनसँग एक सय वर्षको लीजमा लिएर ब्रिटेनले पूर्वी एशियामा सैनिक अखडा बनाएको छ । यो सैनिक क्याम्पमा गोर्खाली सैनिक तैनात गरिएको छ । यहीं गोर्खा मेजर लालकुमारसँग मेरो परिचय भयो । केही क्षणकै कुराकानीमा हामी आपसमा नजीकियौं ।

लालकुमार पढे-लेखेका र भरपूर राजनैतिक ज्ञान भएका र सहयोगी प्रवृत्तिका रहेछन् । वाउ वाजेको घर नेपालको पूर्वी पहाड पाँचथर भए पनि बाबुकै पालामा धरान झरेर घरजम गरिसकेका रहेछन् । हाल उनको घर धरान बजारमा नै रहेछ ।

धरान घोपा क्याम्पमा भर्ना भएर विदेशी सैनिक सेवामा प्रवेश गरेका लालकुमारलाई यो सेवा त्यत्ति मन परेको रहेनछ । तर मन नपरेर पनि के गर्ने आफ्नो देशमा यत्तिको काम नपाइने र बाबुले पनि यही काम गरेकोले गर्नुपरेको राय व्यक्त गर्दछन् ।

हाम्रो वीचमा गोर्खा ब्रिगेड- सम्बन्धी धेरै कुराकानी भएपछि हङ्कङ - बारेमा र पछि चीनको वारेमा कुराकानी शुरू हुन्छ । मेजर लालसँग चीनको बारेमा मैले जान्न चाहेको कुरा भनेपछि उनले चीनको बारेमा मलाई धेरै कुराहरू बताए ।

मेरो रुचि-अनुसार चीनको जनजीवनबारेमा केही कुरा बताएपछि मेजर लालले लालचीनको सीमा देखाउने कार्यक्रम बनाए । मैले त्यस कार्यक्रममा खुशीपूर्वक भाग लिने राय व्यक्त गरेपछि भोलि बिहान आठ बजे नै जाने निर्णय भयो ।

म चीन नपसेको मान्छे । आफ्नो देशको उत्तर सीमा तिब्बत क्षेत्रको एउटा भाग देखेकोलाई मेजर लालले हङकङ क्षेत्रको चीन-सीमा देखाउने कार्यक्रम निश्चय गरेकोमा म अत्यन्तै खुशी भएँ । यही कार्यक्रम तयार गरेर म आफ्नो वासस्थानतर्फ लागें ।

निश्चित कार्यक्रम अनुसार गाडी लिएर म बसेको होटेलमा मेजर लाल आइपुगे । हतार- हतार म पनि उनीसँग निक्लिएँ ।

करीब एक घण्टा मोटरको दौडाइपछि एउटा बगैंचा जस्तो ठाउँमा गाडी रोकियो। गाडीवाट उत्रिएर पाँच मिनेट उक्लिएर एउटा सानो डाँडोको टुप्पामा पुग्यौं । जहाँ स-साना मेचहरू र त्यो मेच रहेको एरियासम्मलाई छतले ढाकिएको छ । शायद यो पर्यटक स्थल हो । त्यहीं पुगेर मेजर लालले पश्चिमतर्फ आफ्नो दाहिने हात तेर्साउँदै भने- 'त्यही हो चीन !'

मैले हेर्न खोजेको चीन मैले त्यहाँ देखिनँ । मैले त् केवल हरिया बाली लागेको फाँट देखें । मैले हेर्ने धेरै कोशिश गरेर चारैतर्फ हेर्दै मेजर लालको अनुहार नियाल्दै आश्चर्य भाव प्रकट गरेको देखेर मेजर लालले झोलाबाट दूरवीन मेरो हातमा दिएर भने- 'हेर्नुहोस् ! ऊ ! घरहरू निर्माण हुँदै गरेको ।'

दूरबीन क्षितिजतर्फ फर्काउँदै हेर्ने कोशिश गरें-- 'हो रहेछ' निर्माणाधीन अग्ला अग्ला भवनहरू बिस्तारै देखिदै गए, त्यो शहर स्वतन्त्र आर्थिक क्षेत्र घोषित गर्ने लक्ष्य राखी निर्माण हुन लागेको रहेछ । सेन्जन नामको त्यो शहरको निर्माणको थाल्नी यही सातको दशकमा शुरू भएको रहेछ ।

हामी उभिएको ठाउँबाट चीनको सीमा धेरै टाढा छ । सुरक्षाको दृष्टिकोणले होला सीमासम्म जाने गरिदो रहेनछ । दिनहुँ सयौं पर्यटकहरूले यहींबाट चीन हेर्ने गरेका रहेछन्। जुन कुरा मेजर लाल ले स-विस्तार व्याख्या गरेपछि मैले थाहा पाएँ । टाढा-टाढाको पहाडको टुप्पामा स-सानो सैनिक बुथ र त्यहाँ रातो चीनको झण्डा फहरिएको हामीले देख्न सक्थ्यौं । हामी त्यहाँ धेरै बेर बसेर चीनका बारेमा आफ्नो जानकारी आदान-प्रदान गर्‍यौं। उनले भने-- 'हरेक दिनजसो चीनका मान्छेहरू ज्यान हातमा लिएर यहाँ हङकङ आउने गर्छन् । रातभरि समुद्रमा तैरदा-तैरदै डुब्नुपरे पनि त्यो पहाडबाट भाग्दा सैनिकको गोलीले मर्नुपरे पनि आउने क्रम रोकिएको छैन । यसरी भागेर आएका चीनियाँहरूमा पच्चीस प्रतिशत मात्र हङकङ पुग्न सफल हुन्छन् भने पचहत्तर प्रतिशतले मृत्युसँग साक्षात्कार गर्ने गरेका छन् ।'

'यसरी मृत्युकै जोखिम लिएर आफ्नो देशबाट भाग्नुपर्ने अवस्था किन भयो त ?'- सहसा निस्किएको यो प्रश्नको उत्तरमा उनले भने- 'यहाँ हङ्कङमा जो उनका इष्टमित्रहरू छन् तिनीहरू त आउने कोशिश गर्ने नै भए, जसको कुनै सम्बन्ध नै छैन भने पनि यो हङ्कङ शहरको अग्ला अग्ला भवनहरूबाट झुल्केका आकर्षणले थामिन नसकी यहाँ पस्ने गर्दछन् ।'

उनी भन्दै जान्छन्-- 'शुरूमा यो हङकङमा करीब दश हजार जनसंख्या थियो भने आज करीव असी लाख पुग्न आँटिसक्यो । हुन त सबै चीनबाट मात्रै भागेर आएका होइनन् । कमन वेल्थ कन्ट्रीका कैयौं मान्छेहरूले यहाँ नागरिकता पाए । पुराना हङकङवासीहरू पनि बढे । यति मात्र होइन, खुला अवस्थामा धेरै चीनायाँहरू बसाईं सरे। तरपनि चीनबाट भागेर आएका मान्छेहरू चालीस लाखभन्दा कम छैनन् ।'

हङकङ चीनको क्यान्टन प्रान्त क्षेत्रभित्र पर्ने सानो टापू हो । यो ढुङ्ग्यान टापू भएको हुँदा यहाँ खेतीयोग्य जमीन थिएन । केवल माछा मार्ने चीनियाँ जातिका मलाहाहरूको बसोबास थियो । जब संयुक्त अधिराज्यले आफ्नो देश विस्तार गर्ने क्रममा विश्वभरि आफ्नो जाल फैलाउन चाह्यो र सबै क्षेत्रमा आफ्नो प्रभुत्व जमाउन खोज्यो, यस्तै क्रममा प्रशान्त महासागरको पश्चिम सीमामा पर्ने यो हङकङलाई चीनसँग मागेर वा आफ्नो प्रभाव देखाएर ब्रिटेनले आफ्नो सैनिक अखडा खडा गऱ्यो र यहाँ ब्रिटिश सरकारको प्रत्यक्ष शासन संचालन भयो । - यो मेजर लालको व्याख्या हो ।

यो क्षेत्रमा कृषियोग्य जमीन नभएको कारणले गर्दा सबै आवश्यकीय वस्तु अरू मुलुकबाट आयात गर्नुपर्ने भएको हुँदा ब्रिटिश सरकारले यो क्षेत्रलाई स्वतन्त्र आर्थिक क्षेत्र घोषित गरी पर्यटकहरूलाई खुला गरिदियो । यो प्रयोग साँच्चिकै सफल भयो । हङकङ पर्यटकको आकर्षणको केन्द्र भयो, विश्वका पर्यटकहरूमा प्रायः सबैले एकपटक हङकङ टेकेकै हुनुपर्ने अनिवार्य जस्तो हुन गयो । स्वतन्त्र आर्थिक प्रणालीले गर्दा विश्व-व्यापारको केन्द्र हुन पुग्यो । सानो भएर पनि विश्वमा महत्त्वपूर्ण स्थान राख्न सफल भयो ।

चीनियाँ जातिकै बाहुल्य भएको यो हङकङमा संयुक्त अधिराज्यबाट खटिएर आएका गभरनरले राज्य सञ्चालन गरे पनि यो कुनै मुलुक नभएर ब्रिटिश शासित क्षेत्र मात्र हो, यहाँ करीब सात हजार गोर्खा सैनिकहरू रहेका छन् । ती नेपाल सरकारका गोर्खा सैनिक नभएर ब्रिटिश सरकारका शक्ति - समूह हुन् ।

मेजर लाल भन्छन्- 'अहिले हामी जहाँ उभिएका छौं, यो हङकङको न्यूटेरिटोरी हो । मतलब नयाँ क्षेत्र हङकङमा यसरी आवादी बढ्यो कि पछि चीनसँग नयाँ क्षेत्र थप्दै जानुपऱ्यो । हाल रेड चाइना भएपछि क्षेत्र थप्न सकेन, तर बसोबासको क्षेत्र बढाउन समुद्र पुर्न शुरू गरेको छ'- पूर्वतर्फ औंल्याउँदै उनी भन्छन्– 'त्यो सबै समुद्र पुरेर बनाएका भवनहरू हुन् ।'

हुन पनि हङकङको विकासको गति हेर्दा अचम्म लाग्छ । प्रत्येक वर्ष सयौं विशाल भवनहरू निर्माण भइरहेका छन् ।

बाटोघाटोको निर्माण त्यही वेगमा बढेको छ । अब त कौलुन र हङकङ समुद्र-मुनि र विशाल भवन-मुनि निर्मित सुरुङमा चल्ने रेलबाट घुम्न सकिन्छ ।

हाम्रो बीचमा चीन र हङकङको बारेमा धेरै कुरा अघि बढि नै रहेका छन् । चीन क्षेत्रमा निर्माण हुन लागेको सेन्जन शहर निकट भविष्यमा नै हङकङको मुकाबिला गर्न सक्ने आफ्नो तर्क पेश गर्दै मेजर लाल भन्छन्- 'हाल निर्माणाधीन सेन्जनलाई हङकङको

जस्तो स्वतन्त्र आर्थिक क्षेत्र घोषित गर्‍यो भने चाइनाको अर्थ-व्यवस्थामा नै यसले ठूलो प्रभाव पार्न सक्छ ।'

यस्तै अनेक तर्क-वितर्क गर्दै हामी आफ्नो वासस्थानतर्फ लाग्ने तरखर गर्छौं । लामो मोटरको यात्रा-विषय उही चीन-सम्बन्धी कुराकानी गर्दै हामी अगाडि बढिरहेछौं ।

यस क्षेत्रका क्यान्टनिज चीनियाँहरू हामी नेपाली जस्तै पितृ र पूर्खालाई देउता मान्ने र स्वर्ग-नर्कको विश्वास गर्ने अत्यन्तै रूढिवादी मनोवृत्तिका रहेछन् । आज पनि श्राद्ध गर्ने र मृतक पितृलाई तार्ने चलन चलेकै रहेछ । परिवारको कुनै सदस्यको मृत्यु भयो भने शरीरलाई चिहानमा गाडे पनि टाउकोलाई सुरक्षित राख्ने चलनले गर्दा परिवारका सबै सदस्यको टाउको एकै ठाउँमा जम्मा हुँदै जाने रहेछ। परिवारका सदस्यहरूमध्ये जो धर्मात्मा छ, उ त्यो संकलित टाउकोलाई धार्मिक कृत्यद्वारा स्वर्ग पुर्‍याउन सक्षम हुन्छ भन्ने प्रचलनले गर्दा यो कार्य गर्न होड चल्ने चलन भए पनि आर्थिक दृष्टिले जो सक्षम छ त्यसले मात्र यो कार्य पूरा गर्ने गर्दो रहेछ ।

पूर्खालाई देउता मानी घर-भित्र धूप बत्ती बाल्ने र त्यसको सामु नतमस्तक हुने र ढोकाको सुरमा प्रतिदिन बिहान धूपबत्ती बालेर राक्षस र पापी दुष्टहरू घरभित्र प्रवेश नगरून् भनेर प्रार्थना गर्ने चलन रहेछ ।

यी सबै मैले मेजर लालबाट सुनेका कुरा हुन् । यस्तै थुप्रै थुप्रै कुराहरू सुनाउँदै मेजर लालले मलाई म बसेको होटेलसम्म छोड्न आए ।

यस्तै मैले दोस्रोपटक हङकङबाट मकाउ जाने कार्यक्रम बनाएँ । हङकङ ब्रिटिशले लीजमा लिएजस्तै मकाउलाई पुर्चुगिसले चीनसँग लीजमा लिएको रहेछ ।

मकाउलाई स्वतन्त्र आर्थिक क्षेत्र घोषित गरे पनि हङकङ जति व्यापारिक केन्द्र बन्न नसके पछि क्यासिनोको व्यवस्थाले पर्यटकलाई खिचि नै रहेको छ । विश्वका ठूला जूवाघरमध्ये एक जूवाघर भएको मकाउमा हजारौं पर्यटकहरू केवल जूवा खेल्न मात्र पनि त्यहाँ आउने गर्दछन् ।

मकाउसँगै रहेको चीनको जुहाई शहरमा पनि स्वतन्त्र आर्थिक क्षेत्र घोषित गर्ने क्रममा नयाँ भवनहरू निर्माण हुने कार्य हुँदै रहेछ । यसपटकको चीन-सीमा भ्रमण गर्ने क्रममा पनि मेजर लाल सँगै थिए ।

धेरै दिनको हङकङको बसाइ र सुरक्षा-सम्बन्धी जागीर र एउटा जिम्बेवार अफिसर भएको हुँदा उनलाई यस क्षेत्रको निकै ज्ञान थियो ।

हामी जूवाघर घुमेर समय बिताउनुभन्दा मकाउ र चीनको सीमा हेर्नेतर्फ लाग्यौं । यहाँ पनि सीमा-नजीकै जान दिइँदो रैनछ । टाढैबाट चीनियाँ सैनिकको कडा सुरक्षा हेर्‍यौं। यति मात्र होइन, समुद्रमा चीनियाँ सैनिकले कसरी सुरक्षा गरेको छ भन्ने पनि उनले सविस्तार व्याख्या गरेर बताए र जाँदा आउँदा प्रत्यक्ष देखाए । कारण, हङकङबाट मकाउ जान समुद्री बाटो भएर जानुपर्छ । हामी यात्रुजहाजमा चढेर मकाउ गएका थियौं ।

यतिखेर चीन यसरी वन्द गरिएको छ । यहाँ कतैबाट च्याउन पनि सकिदैन र देख्न वुझ्न पनि सकिंदैन । सवै अनुमान गरेर नै भन्ने र बताउने गर्छन्, त्यही बुझिन्छ जो सरकारी पक्षको प्रचार छ । जुन कुरा सरकारले सूचना दिन योग्य सम्झिन्छ त्यही मात्र बाहिर आउँछ ।

'मलाई पनि त्यत्ति विस्तृत थाह छैन'- मेजर लाल मलाई सल्लाह दिंदै भन्छन्: 'चीनको बारेमा त तपाईंले यति सजिलै जानकारी पाउनुहुन्न । यदि चीनियाँ परिवारका बारेमा जानकारी पाउने इच्छा राख्नुहुन्छ भने होटेलको बसाइ छोडेर स-साना गेष्ट हाउसहरूमा बस्नुहोस्, जुन चीनियाँहरूले चलाएका हुन्छन् । तपाईंलाई भाडा पनि सस्तो पर्छ र चीन-सम्बन्धी जानकारी पनि हुन्छ ।'

मेजर लालको सल्लाह ठीक थियो । मैले त्यसै गरें । म चीनियाँहरूले चलाएको गेष्ट हाउसमा गएर बसें ।

हङकङका चीनियाँहरू प्रायःले क्रिश्चियन धर्मलाई अपनाएका र हरेकले आफ्नो अंग्रेजी नाउँ राखेको हुँदा संस्कृति, भाषा र वेश-भूषामा मिश्रण आइसकेकोले पनि उनीहरूको आफ्नोपन हराउँदै गएको छ । बिस्तारै पश्चिमी सभ्यताले गाँज्दै ल्याएको हुँदा व्यक्ति अत्यन्तै स्वार्थी र एकलकाटे हुँदै गइरहेका छन् । बिस्तारै मान्छे मेशीन जस्तो हुँदै गइरहेका छन् ।

गेष्ट हाउसको मालिक पिटरको बाबु र आमा ज्यादै वृद्ध छन्, तर तिनले पनि काम गर्नुपर्छ । सबै परिवारले काम गरेर गेष्ट हाउस चलाएका छन् । मैले पिटरको नाउँ यस कारणले लिएको हुँ, उनी मसँग बिस्तारै अंग्रेजीमा कुरा गर्छन्, तर उनको बाबु आमा पट्टकै अंग्रेजी जान्दैनन् ।

चीनको सांघाईमा बसोबास गर्ने यो सम्पन्न परिवार घर- विहीन त्यत्तिखेर भए, जब चीनमा जनक्रान्ति शुरू भयो । त्यो क्रान्तिको ज्वाला खप्न नसकी चालीसकै दशकमा यिनीहरू हङकङ पसेका रहेछन् । त्यस बखत चाहेर वा नचाहेर चीनको धेरै प्रान्तका चीनियाँहरू हङकङ पसेका थिए । पिटर त्यस बखत ज्यादै सानो भएको हुँदा यहाँ आएर स्थानीय क्यान्टनिज चीनियाँ भाषा सिक्ने औसर पाएको हुँदा यो परिवारले आज जसोतसो गेष्ट हाउस चलाएर बसेको छ ।

उसको चीनियाँ नाउँ पेङ साङ्लु भए पनि हाल पिटरको नाममा उनी प्रख्यात छन्। पिटरसँग म पूर्व इतिहास जान्न चाहन्छु । म बिस्तारै आफ्नो चाहना र उत्सुकता उनीहरूको परिवारमा पोख्दै जान्छु । पटक-पटक पिटरले मेरो जिज्ञासा पूरा गर्दै जान्छन् ।

'चीनमा जनक्रान्ति नभएर पुरानै राजनैतिक व्यवस्था रहिरहेको भए म आज संसारको धनीमध्येको एक हुने थिएँ होला । मेरा दर्जनौं पानीजहाज र सयकडौं मोटर तथा चीनको हरेक शहरमा पाँचतारे होटेल हुने थिए होलान् र त्यसको म म्यानेजिङ डाइरेक्टर भएर म ज्यादै ठूलो मान्छे हुन्थें होला'- अनायास पिटरले एक साँझ मलाई यो कुरा सुनाउँछन् ।

हाफ पाइन्ट र टिशर्ट लगाएर गेष्ट हाउसका कोठाहरूको साँचोको झुप्पा कमरपेटीमा लटकाएको पिटरले आफूले आफैलाई एउटा जिम्मेवार व्यक्तित्वको व्यवहार गर्दै म बसेको सामु सोफामा उपरखुट्टी लाएर बसे र आफू वडो चिन्तित भएको र रहेको स्थिति मेरो सामु स्पष्ट देखाउँछन् ।

यही समयमा म उनलाई प्रश्न गर्छु-- 'भाइ ! तिम्रो परिवारलाई साँच्चै नै बज्र प्रहार भएको रहेछ । होइन भने आफ्नो थलो छोडेर को विदेशमा आएर बाँच्न चाहन्छ र ?'

'त्यही त ! तपाईं जानिफकार हुनुहुन्छ । यो विदेशमा जहाँ हाम्रो भाषा मिल्दैन, खाना मिल्दैन, धर्म र संस्कृति मिल्दैन । चीनियाँ मात्र भनेर हुँदैन । अलग अलग प्रान्तको विधि-व्यवहार, रीति-स्थिति, चलन-चल्ती, भाषा-संस्कृति र आहार-विहार भिन्न-भिन्न छन्। कद, अनुहार र हेराइमै फरक छन् । हाम्रो र यी क्यान्टनिजको केही पनि मिल्दैन'- पिटर फटाफट अंग्रेजीमा मलाई सुनाउँदै छन् ।

उनी र उनको परिवार बडो कठिन परिस्थिति पार गरेर हङकङमा स्थापित भएका रहेछन् । उनको मनोवेदना मैले सुन्दै गएँ र बुझ्दै गएँ । सारांशमा उनको परिवारको कथा अत्यन्तै मार्मिक रहेछ ।

पेङ साङलुको बाबु ते साँङलु सांघाईको धनाढ्य परिवारका सदस्य रहेछन् । ते साँङलुको त्यसताका चीनमा एउटा विशाल होटेल र यात्रुवाहक पाँचवटा जहाज, साथै स-सना दशवटा स्टीमर रहेछन् । उनले शहरमा साना ठूला व्यापारीलाई नगद लगानी गरी धेरथोर ब्याज आर्जन गर्ने गरेका पनि रहेछन् । ते साँङलुका दाज्यू बडो बुद्धिमान् एवं आफ्नो कार्यप्रति कर्मनिष्ठ भएको कारण लु परिवारले दिन दुगुना रात चौगुना उन्नति गरेको रहेछ ।

एकदिन ते साँङलुका दाज्यूलाई विद्रोही कम्युनिष्ट दलका नेताले बोलाउन पठाएछन्। उनी विद्रोहीको क्याम्पमा जान नमानेकोले दुई महीनापछि संस्मरण पत्र आएछ । त्यसमा पनि उनी जान हिच्किचाएछन् । समयको गति अगाडि बढ्यो । विद्रोहीले सांघाई शहर कब्जा गरेपछि कैयौं जापानी, अमेरीकन र ब्रिटिश नागरिकलाई भाग्ने मौका दिइएको थियो, तर चीनियाँहरूलाई होइन । लु परिवार प्रभावशाली भएको हुँदा विद्रोहीहरूले साथ लिन चाहेका थिए । साथ पाएनन् । एउटा विद्रोही सिपाई ते साँङलुको अफिसमा पसी दश राउण्ड गोलीले प्रहार गरी काम गरिरहेको उसको दाज्यूलाई उसैको कार्यालयमा मुर्दा बनाइदिएछ । त्यसपछि ते साँङ-लुले आफ्ना श्रीमती र छोरा पेङ साँङलुलाई लिएर एउटा सानो स्टीमरमा बाँच्ने रहर बोकेर सांघाई छोडेका रहेछन् ।

बिना धन सम्पत्ति, केवल लगाएको लुगाको भरमा श्रीमती र काखको बच्चा च्यापी ते साँङलु आफ्नै भनिएको स्टीमरमा सात दिनसम्म दिन-रात हिंडेपछि हङकङ आइपुगेछन्। भोक तिर्खाले सताइएका लु परिवारले हङकङ भूमिमा टेकेपछि पुनर्जीवन पाएछन् ।

यिनीहरूको धन सम्पत्ति इज्जत सबै सांघाईको विद्रोहमा समाप्त भएछ । जन्मसिद्ध मानवीय अधिकार पनि त्यही विद्रोह-सँगसँगै त्यहीं छोडिएछ ।

'तिमीहरूको धन सम्पत्ति केही ल्याउन पाएनौ त ?'– म आफूमा विश्वस्त हुन चाहेर प्रश्न गर्छु ।

'कसरी ल्याउने ? ज्यानै नजोगिने स्थिति थियो !'- पिटर पुरानो कुरा संम्झदै भन्छन्– 'तुरुन्त निर्णय नगरेर नभागेको भए विद्रोहीको गोली मेरो बाबुले पनि खानुपर्थ्यो! अनि सम्झनुहोस् मेरो के गति हुन्थ्यो होला !'

एकपटक सांघाई गएर आफ्नो पुर्खाको बसोबासको क्षेत्र हेर्ने उनलाई ठूलो रहर छ । सरकारले अहिलेसम्म पनि बाहिरका नागरिकहरूलाई खुलारूपमा प्रवेश गराएको छैन। चीन सरकारले घुमफिर गर्ने अनुमति दियो भने पिटर पहिलो पङ्तिमा रहने आफ्नो अठोट जाहेर गर्छन् ।

हुन पनि आफ्नो जन्मभूमि कसलाई प्यारो लाग्दैंन र ? आफ्ना इष्ट- मित्र र नाताकुटुम्बसँग बसउठ गर्न कसलाई मन लाग्दैन र ? यो मानवीय प्रकृतिबाट कोही पनि विमुख हुन सक्दैन ।

हामी कुरा गरिरहेको ठाउँमा पिटरका बाबु ते साँङ्लु पनि आएर थुचुक्क मेचमा बसे । पिटरले आफ्नो भाषामा सांघाईको विद्रोहबारेमा कुरा भइरहेको शायद बताए होलान्। उनीले पिटरसँग कुरा गर्न शुरू गरे ।

उनको हाउभाउबाट त्यही विद्रोहको कुरा गरिरहेको म सोझै अनुमान लगाउन सक्छु। पिटर बडो चिन्तनशील भएर बाबुको कुरा सुनिरहेका छन् । वेलावेलामा छोटो प्रश्न गरेर पिटरले आफ्नो प्रतिक्रिया जनाइरहेका छन् ।

म स्वयम् पनि जान्दछु-कम्युनिजम जनताकै भलाइको लागि उन्नाइसौं शताब्दीको मध्यमा जर्मनीमा कार्लमार्क्सले जन्माएको सिद्धान्त हो । कम्युनिजम बारेमा कार्लमार्क्स र बेलायतका फ्रेडरिक एन्जेल्सले समय समय घोषणा पत्रमा विभिन्न किसिमबाट व्याख्या गरेर कम्युनिजम-बारेमा जनचेतना जगाउन समर्थ भएका थिए ।

यूरोपमा जब औद्योगिक विकास शुरू भयो त्यहाँ मिल-मालिक र मजदूरको बीचमा द्वन्द्व शुरू भयो । मजदूरले आफ्नो श्रम-शक्तिको मूल्य पाएनन् । शोषणले पराकाष्ठा नाघेको हुँदा त्यहाँ एउटा विद्रोह जन्मिन खोज्यो। विभिन्न दार्शनिक पत्रकार र राजनीतिज्ञ सबै नै समस्याका समाधानको उपाय को खोजीमा लागेको देखियो ।

त्यस बखत सर्वहाराको व्याख्या गर्दै फ्रेडरिक एन्जल्सले भनेका थिए-सर्वहारा समाजको त्यो वर्ग हो जो आफ्नो जीविकाको साधनश्रम बिक्रीबाटमात्र प्राप्त गर्छ । अझ यसलाई संक्षेपमा भन्ने हो भने सर्वहारा अथवा सर्वहारा वर्ग उन्नाइसौं शताब्दीको श्रमजीवी वर्ग हो ।

सर्वहाराको मुक्तिको शर्तको सिद्धान्त नै कम्युनिजम हो भन्ने कार्लमार्क्स र एन्जल्सले सर्वहारा शताब्दियौंदेखि यूरोपमा विद्यमान थिए भन्नेमा विश्वास गर्दैनन् । उनीहरूले त सर्वहाराको उत्पत्ति यूरोपको औद्योगीकरणसँगै जन्मिएको वर्ग मानेका छन् ।

कम्युनिजम बुझेर हो वा नबुझेर हो पिटरले मेरो अगाडि प्रश्न तेर्स्याउँछन्- 'यो कस्तो सर्वहाराको विद्रोह हो, चीनमा त्यत्रो उथलपुथल ल्याउन समर्थ भयो ?'

पिटरको प्रश्न नै नसुनी र उनको भनाइ नटुङ्गिँदै म पिटरसँग प्रश्न गर्छु- 'कै तपाईंलाई कम्युनिजम थाह छ ?'

'पक्कै थाह छ !'- तुरुन्तै उनले उत्तर दिन्छन् ।

'मलाई सम्झाउन सक्नुहुन्छ ?'

'किन नसक्नु !'

'सम्झाउनुहोस् त !'

उनी बडो गम्भीर भएर भन्छन्- 'कम्युनिजमको अर्थ ल्याटिन भाषा अनुसार सँगै सेवा गरौं भन्ने हुन्छ भने फ्रेन्च भाषाबाट बाँडौं भन्ने हुन्छ तापनि मार्क्सको भनाइ अनुसार शोषित पीडितवर्गको उत्थान र पूँजीपतिवर्गको अन्त गरी समानताको आधारमा सर्वहाराको अधिनायकत्वमा राज्य स्थापना गर्ने हो, तापनि कम्युनिष्टका अनुयायीहरूले आफ्नो किसिमबाट व्याख्या गरी आफ्नो हिसाबले मिलाए । भन्दा सर्वहाराको अधिनायकत्व भन्छन्, तर त्यो पनि तिनै बाठा र सिपालुकै अधिनायकत्व कायम गर्दै हिड्छन् । मैले बुझेसम्म अहिले यो एउटा आकर्षक नारा मात्र साबित भएको छ शक्ति प्राप्त गर्ने ।'

उनी आफ्नो तर्कलाई पुष्टि गर्दै अझै भन्दै जान्छन्- 'हेर्नुस्, कम्युनिष्टहरूको सामु कुनै घर छ भने त्यो आफ्नो अनुकूल कसरी बनाउने भन्ने कहिल्यै सोच्न सक्दैनन् बरु त्यसलाई जगैदेखि भत्काएर बनाउनुपर्ने सिद्धान्त-अनुसार श्रमशक्ति र समय खर्चेर अल्मलिरहेका हुन्छन् । न यसबाट नागरिकको भलाइ छ, न राष्ट्रको सम्पत्ति जोगिन्छ । त्यसैले मलाई कम्युनिजम बाँदरको हातमा तरवांर जस्तो लाग्छ ।'

सुन्दा म झस्किएँ । पिटरको तर्कसँग म पूर्ण सहमत छैन । हुन त उनले जति बुझेका छन् त्यति बोले । यसमा मेरो सहमतिको जरूरत पनि छैन र मैले उनको भनाइमा कुनै समर्थन पनि जनाइनँ, सुन्दै गएँ ।

'यदि लाल कम्युनिष्टको शक्ति बाँदरको हातको तरवार नभएको भए, मेरो परिवारको मुलीको हत्या हुने थिएन होला । त्यो स्थापित समाज तहस-नहस हुने थिएन होला'- पिटर बड़ो गम्भीर स्वरमा यो वाक्य पूरा गर्छन् ।

एउटा स्थापित समाज तहस-नहस हुनको पछाडि धेरै मानवीय मूल्य र मान्यताहरूको अन्त्य हुन्छ । मानवतामाथि नै ठूलो अन्याय पर्छ । यो प्रत्येक समाज परिवर्तन गर्न खोज्ने दार्शनिक र नौलो समाज निर्माण गर्न खोज्ने राजनीतिज्ञले बुझ्दा मानवतामाथि न्याय हुन जान्छ र बुझ्न नसक्दा अन्याय साबित हुन्छ ।

सत्ता प्राप्तिको अन्ध आकांक्षा र शासनको निरन्तरताको पछाडि जतिसुकै संख्यामा मान्छेको बलिदान गर्नुपरे पनि यदि एक वा सानो समूहको स्वार्थपूर्ति हुन्छ भने त्यो सभ्य हुन्छ, न्यायिक ठहरिन्छ, र मानव मात्रको कल्याणको लागि गरेको सत्कर्म ठहरिन्छ, चाहे

त्यो लेनिनले सत्ता प्राप्तिको लागि गरेको संघर्ष होस् वा स्टालिनले कम्युनिजमलाई निरन्तरता प्रदान गर्न गरिएको निर्णय होस् ।

हामी बसिरहेको ठाउँमा एक जना चीनियाँ सज्जन आइपुग्छन् र आफ्नो भाषामा केही कुरा गरिसकेपछि उनी जान लागेका थिए । पिटरले उनलाई पुनः सम्बोधन गर्दै मलाई चिनाउँछन् । मैले पनि यी चीनियाँ सज्जनसँग 'हेलो' को बोलीले औपचारिकता पूरा गर्छु । उनी बिस्तारै म अगाडि खाली भएको सोफामा बस्छन् र बिस्तारै मेरो बारेमा सोध-खोज गर्न थाल्छन् ।

पूर्ण ६ फीट अग्ला कदका सलक्क परेका राम्रा युवक मैले देख्नेबित्तिकै अनुमान गरें । यी पनि उत्तर चीनतर्फकै मान्छे हुन् । किनभने हङ्कङ गुआङ्डङ प्रान्तको एक भाग हो । यो क्षेत्रका स्थायी बसोबासीहरू क्यान्टनिज हुन् । क्यान्टनिजहरू पुड्का र सानो काँटीका हुन्छन् । चीन क्षेत्रमा सबैभन्दा होचा र साना खालका मान्छे बसोबास गर्ने भए पनि यो क्षेत्र अरूको क्षेत्रको दाँजोमा सबै किसिमबाट विकास भएको ठहरिएको पाइन्छ । उन्नाइसको पहिलो दशकदेखि चालीसको दशकसम्म यो क्यान्टन क्षेत्र ज्यादै चर्चित क्षेत्रमा पर्थ्यो । यहाँ रेल यातायातको सुविधाले गर्दा र बन्दरगाहको सुविधाले गर्दा त्यस बखतको राजनीतिक परिवर्तनको एकमात्र जिम्मेवार पार्टी क्वामिङ्टनको मुख्य कार्य-क्षेत्र नै बनेको थियो । त्योभन्दा पनि पहिले ब्रिटिशहरूले नै गुआङ्चाउ नामक शहरलाई अंग्रेजीमा क्यान्टन भनी त्यहाँ राम्रो अंग्रेजी प्रभाव फैलाउन समर्थ भएका थिए।

उनको अनुहार नियाल्दै मैले भनें– 'शायद तपाईं पनि सांघाई क्षेत्रको चीनियाँ जातिको हुनुहुन्छ कि क्या हो ?'

'हो'- अनुहारमा आश्चर्य प्रकट गर्दै उनले अंग्रेजीमा जवाफ दिए । अनि उनले मेरो बारेमा सोधे । केही क्षणमै हामी दुवै आपसमा नजीकियौं ।

उनको नाम ताङ्चाउलइ रहेछ । ताङ चीनियाँ नाउँलाई अंग्रेजीकरण गर्दै 'टम' भएछ र हाल उनी 'टम' ले सर्वत्र परिचित रहेछन् । टम भन्ने नाउँ तिमीलाई किन मन पर्‍यो भन्ने मेरो प्रश्नको उत्तरमा उनले भने- 'यो हङ्कङ ब्रिटिश राज्य-अन्तर्गत सञ्चालित छ । यहाँ सबै अंग्रेजीकरण भएको राज्य-व्यवस्थाले देख्न चाहन्छ । हामीले चीनियाँ धर्म त मान्छौं, तर अरू बिहाबारी र बाहिरी व्यवहार अंग्रेजी रीतिरिवाज-अनुसार गर्ने गर्छौं। होइन भने हामी असभ्य ठहरिन्छौं, आफ्नो देश समाज छोडिहालियो, अब यहाँ बाँच्नको लागि पनि अंग्रेजी चाल-ढाल हामीले मजबूरीका साथ स्वीकार्नुपरेको छ । 'टम' मेरो वाध्यता हो ! चाहना होइन !'

टम यही दशकको शुरूमा हङ्कङ पसेका रहेछन् । उनी हङ्कङ पस्नुभन्दा अगाडि सांघाईको एउटा अस्पतालमा कार्यरत चिकित्सक रहेछन् । उनी त भरखर डाक्टरी पास गरेर अस्पतालमा सेवारत थिए, तर उनका बाबु ताङ आइ सु तीस वर्षदेखि अस्पतालमा कार्यरत वरिष्ठ डाक्टर रहेछन् । कुन डाक्टरको कहाँ खाँचो, त्यसको निर्णय प्रशासन-सञ्चालन गर्ने व्यक्तिहरूको जिम्मा भएको हुँदा उनका बाउलाई चीनको उत्तरी क्षेत्र हार्विनमा खटाइएछ । उनलाई चीनको दक्षिणी भाग गुआङ्सी प्रान्तको साँङ्याङ्को

एउटा अस्पतालमा खटाइएछ । यसरी वावु छोरा अलग अलग काममा खटिएपछि दुवै आ-आफ्नो कामदेखि असन्तुष्ट र दुःखी भएछन् ।

कालचक्रको कुरा कसले जान्ने ? दुई वर्ष नवित्दै वावु र आमा दुवैको हार्बिनमा मृत्यु भएछ । मृत्युको समाचार आएपछि ताङ्चाउलइ अत्यन्त दुःखित भएछन् र केही दिन अस्पतालमा जान पनि सकेनछन् । त्यही निउँमा अस्पताल प्रशासकले उनलाई डिमोसन गरेछ ।

काममा निरन्तरता दिन मन मर्दै गएपछि विदेश जाने वा आत्महत्या गर्ने द्विविधामा काम छोडेर गुआङ्चाउ शहर गएछन् । ठूलो शहर, पैसाको अभाव, चिने-जानेका आफन्त कोही नभएको हुँदा त्यहाँ पनि बस्न नसकी नव निर्माण हुन लागेको सेन्जनमा आइपुगेछन् ।

पुरानो अवस्था सम्झँदै उनी भन्छन्- 'हेर्नुहोस् गुआङ्चाउबाट सरल किसिमबाट सेन्जन आउन सक्दिनथिएँ । म आफूलाई श्रम गरेर खाने कुल्लीहरूको माझमा वरेर कुल्ली काम गर्न भनेर कुल्लीहरूको समूहमा मिलेर सेन्जन आइपुगें ।'

'के तिमी कुल्लीको रूपमा सेन्जन आएको ?'

'हो ! सेन्जनमा स्वतन्त्रतापूर्वक कोही आउन जान सक्दैन !'

'ए ! किन सेन्जन आएको त ?'

'चीनको सीमा जहाँ नजीक थियो'- म त्यहाँ जान चाहन्थें !'

केही दिन सेन्जनमा कुल्ली काम गरेपछि एकजना मान्छे भेटेछन् । उनले आफ्नो दुःखपूर्ण कुरा त्यो मान्छेलाई सुनाएपछि त्यो मान्छेले हङकङ भागेर जाने योजना वताएछ। चीनबाट हङकङ आइपुग्नु भनेको हिंस्रक बाघको पञ्जाबाट छुट्नु बराबर नै हो ।

'जब मैले हङकङको नाम सुनें, फेरि मलाई बाँच्ने रहर जाग्यो ! अनि मैले दिन-रातलाई एक गरेर काम गर्न थालें ! कुल्लीहरूसँगै बस्ने खाने र दिनभर श्रम गर्ने !'- टम प्रफुल्ल भएर भन्छन्-

'तिमी डाक्टर भएर पनि कसरी श्रम गर्न सक्यौ ?'

'कुनै पनि काम गर्न भित्रदेखि उत्साह जाग्नुपर्छ, काम भइहाल्छ ! माथिबाट काम लाद्दा मान्छेमा काम गर्ने उत्साह मर्छ ! चिकित्सकको आरामको काम गर्न मैले बोझ महसूस गरें, तर कुल्ली काम गर्न म उत्साहित भएँ । यसबाट मैले बुझें- मान्छे एउटा परचालित होइन, स्वचालित मेशीन हो'- उनी आफ्नो अनुभव बताउँदै जान्छन् ।

'ठीक भन्यौ !'- उनको कुरालाई मैले आफ्नो सहमति जनाएँ ।

'केही हप्ता काम गरेपछि मसँग केही युआन जम्मा भयो । दिनहुँ तीन युआन पाउने मैले एक युआनको खाना खाएर दुई युआन बचाएको थिएँ ।'

'कति रकमको आवश्यकता थियो तिमीलाई ?'

'एक सय युआन जम्मा गर्नु थियो, त्यो चाँडै नै भयो ।'

'के गर्यौ त त्यो रकम ?'

'भागेर हङ्कङ आउने योजनामा हामी पाँच जनाले मत गर्‍यौं र पाँच सय युआन जम्मा गरेर एक जना स्थानीय मलाहालाई लगेर दियौं । उनले हामीलाई रातको ठीक दश बजे समुद्रको किनारामा आउने आदेश दिए । उनले भने-अनुसार ठीक समयमा पुग्यौं ।'

'अनि के भयो ?' - सुन्न म उत्सुक भएँ ।

उनी भन्दै जान्छन्- 'त्यो मलाहाले हामी पाँच जवानलाई एक - एकवटा लाइफ बेल्ट हाम्रो छातीमा बाँधिदिएर पूरा हावा भए- नभएको फेरि जाँच गरेर भने- 'तिमीहरूले पानीमा तैरिन जानेको छ कि छैन? हेर, यसरी हात चलाउनुपर्छ'— भनेर सबैलाई हात चलाउन सिकाए । समुद्रमा पौडेर जानुपर्ने रहेछ । म पौडिन नजानेको मान्छे, कुरा सुनेर मेरो होशहवास गुम भयो ।

'के तिमी पौडिन जान्दैनौ ?'

'जान्दिनँ !' पाँच घण्टा पौडेपछि पार तरिने रहेछ । उनले भने--दुई घण्टासम्म अगाडि बढ्दै जानू- त्यसपछि दाहिनेतर्फ बत्ती देखिन्छ, त्यही बत्ती पच्छ्याएर अगाडि बढ्नू, हङकङ पुगिन्छ । मर्ने वा तर्ने बाहेक हाम्रो केही उपाय थिएन । करीब आधा घण्टा हुन लागेको हुँदा मलाहा भन्छन्-अहिल्यै तिमीहरूले शुरू गरेनौ भने उज्यालो हुन्छ र गस्ती सैनिकले देख्छन् । गैहाल-भनेर धमाधम समुद्रमा धकेलिदिए ।'

'अनि के भयो ?'- म हत्पत्तिएर बीचैमा सोध्छु ।

'के हुने ! अन्धकार ! पानीका छालले मलाई तल-माथि गराउँदै हुत्याउँदै कता लग्यो लग्यो ! साथीहरू पनि धेरै टाढा पुगे । हामी सबै एकै स्वरमा आ- आफ्ना साथीहरूको नाउँ लिएर आफू ठीक अवस्थामा भएको कुरा साथीहरूलाई जानकारी दिन चिच्यायौं । किनारमा उभिएको मलाहाले चिच्याएर हामीलाई भने— नकराऊ ! शत्रुले सुन्नेछ ! तिमीहरूको मृत्यु हुनेछ— अब मलाहाको निर्देशन-अनुसार अगि बढ्ने बाहेक हामीसँग केही उपाय थिएन ।'

'के तिमी ठीक समयमा आइपुग्यौ त ?'

'म त ठीक समयमा आइपुगें, तर हामीमध्येका तीन जना साथीहरू चाहिं हङकङ्को भूमिमा आइपुग्न सकेनछन् ।'

'कहाँ गए त तिनीहरू ?'

'करीब आधा बाटोसम्म त सँगै थियौं । त्यसपछि म नै एकलिएँ । म बिजुली बत्तीको आधारमा अगि बढ्दै गएँ । म कसरी हङकङ आइपुगें, त्यो त मलाई पनि थाह छैन । जतिखेर मेरो होश खुल्यो त्यति वेला म पुलीस कस्टडीमा थिएँ ।'

'के भन्नुभएको पुलीस कस्टडी ?'

'हो ! मलाई धेरै घण्टापछि होश आयो, मलाई अपराधीको रूपमा अदालतमा पेश गरियो र केही दिनपछि अदालतले हङकङ्मा बस्न दिने निर्णय गर्‍यो । म स्वयम्‌मा मैले एउटा नयाँ जिन्दगी पाएको महसूस गरें र वेलफियर फण्डबाट केही रकम प्राप्त गरी नयाँ व्यवसाय शुरू गरें ।'

ताङचाउलइ एक कुशल चिकित्सक थिए चीनमा, तर त्यही ताङ हङ्कङ आइपुगेपछि चिकित्सक पेशालाई परित्याग गरेर होटेल व्यवसायलाई अपनाएका छन् ।

उनले पेशा मात्र वदलेनन् कि नाम पनि वदलेर टम भएका छन् ।

टमले आफ्नो भाषा संस्कृति मिल्ने क्रान्तिको शुरूकै समयमा वसाइँ सरेका चीनियाँ नाउँ मियाताङ भए पनि आफूलाई मेरी भन्न रुचाउने एक जना युवतीसँग विवाह गरेछन्। टम र मेरी होटेल व्यवसाय गरेर सुखी जीवन बिताएका रहेछन् ।

टमको विस्तृत कुरा सुनेर पिटर भन्छन्- 'टम जस्तो लाल चीनबाट भागेका हजारौं मान्छेहरू सुमुद्रको पिँधमुनि पुगेका छन् भने हजारौं लाल सेनाको गोलीको शिकार भएर समुद्रमाथि तैरिन पुगेका छन् । यति मात्र होइन, जो भाग्दाभाग्दै समाइए, तिनीहरूले मृत्युदण्ड पाएका छन् ।

उनीहरूको भनाइमा मेरो कुनै प्रतिक्रिया छैन । कारण सुनेर म आफै स्तब्ध छु । मैले सोचेको पनि थिइनँ कि यस्तो हृदय - विदारक घटना पनि मान्छेको जीवनमा घट्न सक्छ भनेर ! मैले सुन्दै नसुनेको र बुझ्दै नवुझेको कुरा त सुनें, यत्तिकैमा नयाँ चीन- प्रति मेरो धारणामा केही परिवर्तन आउने कुरा पनि भएन । बस ! मैले सुनें र बुझें ।

कुनै पनि तत्त्वको परिवर्तन हुँदा वा एक अवस्थाबाट अर्को अवस्थामा पुग्न खोज्दा आन्तरिक द्वन्द्व,आपसी विरोध र संघर्ष अनिवार्य छ, त्यहाँ कसैको समाप्ति र कसैको विकास वा नयाँ परिवर्तित रूपको उत्पत्ति हुनु पनि स्वाभाविक हो । त्यसैले नयाँ चीन निर्माण गर्ने क्रममा लागेको नौलो जनवादी क्रान्तिले केही असर त गर्छ नै, यदि कुनै कसैलाई केही असर नगर्ने भए क्रान्ति नै भनिदैनथियो होला । क्रान्ति भन्नेबित्तिकै परिवर्तन भन्ने बुझ्नुपर्ने भएकोले त्यस्तो परिवर्तनमा सबै कुरा क्षम्य हुन्छ ।

क्रान्तिकारीले ठीक सम्झेका काम-कार्यवाहीहरूले अरूलाई अन्याय र मर्का पर्न सक्छ, त्यही हुन नदिएर परिवर्तन गर्न सक्यो भने सबैको श्रद्धाको पात्र बन्न सक्छ, यदि त्यसो हुन सकेन भने त्यससँग विद्रोह हुन सक्छ । यो त क्रान्तिकारीको काम कार्यवाहीमा भर पर्ने कुरा हो ।

शायद यो वास्तविकतासँग परिचित भएर हो वा अपरिचित नै रहेर हो, पिटर भने अत्यन्तै विरोधी भइरहेछन् । हुन त उनको परिवारले जे भोग्यो र जुन कुरा उनले सुने तथा अनुभव गरिरहेका छन् त्यही नै उनको अनुभव र वास्तविकता हो ।

पिटरको दुःखमनाउ के रहेछ भने-- चीनमा शोषित र गरीब वर्गको हितको लागि शासन-व्यवस्था स्थापना गर्ने क्रान्तिकारी कम्युनिष्टहरूले एक वर्गको हितको नाउँमा अर्को वर्गलाई मारकाटद्वारा नै समाप्त पार्छु भन्ने लक्ष्य लिन नहुने हो, र देशभित्रका सवै वर्ग समेटेर कम्युनिष्ट सिद्धान्त पनि त लगाउन सकिन्थ्यो । - यो पिटरको आफ्नै हिसाबको तर्क हो ।

'नौलो जनवादको साँस्कृतिक क्रान्तिले देशका प्रबुद्ध डाक्टर, इन्जिनीयर र प्रोफेसरहरूलाई देश विकासको लागि औजार सम्झेर जसरी प्रयोग गरिएको छ, त्यो मिल्नेन।

कुनै पनि मुलुकमा मान्छेको जन्म त्यस मुलुकको विकासको लागि मात्र भनेर भएको हुँदैन, तर राज्य-शक्तिले त्यस्तो व्यवहार गरिदिंदा मानवीय चेतनाले सहन गर्न सक्दैन अनि राज्यसत्ता विरुद्ध विद्रोह गर्छ'- यो तर्क टमको हो, जो आफ्नै अनुभव उनले बोले ।

टमसँग म आफ्नो अनुभव अगि सार्छु- 'साँस्कृतिक क्रान्तिको उद्‌देश्य- चीनमा प्रचलित विविध संस्कृतिलाई समाप्त गरेर एकै भाषा, एकै बोली, एकै मान्यता र एउटै जाति भएर बाँच्न सक्ने समाजको रचना गर्नु हो । त्यसैले यसको मर्मलाई पनि बुझ्नुपर्छ! तिमीलाई पर्न गएको मार्का चाहिं व्यक्तिगत हो- जो दुःखपूर्ण हो, टम आफ्नै गुनासो पोख्नमा व्यस्त रहन्छन्- 'मेरो छोरा छ !! उसलाई मैले पुर्खौली कथा सुनाउनैपर्छ ! मेरो समाजको बोली र साँस्कृतिक मान्यता मैले सुम्पिनैपर्छ ! यदि मैले दिन चाहिनँ भने पनि मेरो रगतवाट निर्मित मेरो छोरोलाई मेरो सामाजिक संस्कार मैले त्यसै बखतमा सुम्पिसकेको छु जतिखेर ऊ यो पृथ्वीमा जन्म लिन तयार भयो ।'

म उनको भनाइलाई जवाफ दिन्नँ र सुनेरै बसेको छु । उनी भन्दै जान्छन्– 'कुनै पनि क्रान्तिले ल्याएको परिवर्तन जनमतद्धारा ल्याइएको भन्न मिल्दैन किनभने क्रान्ति भन्नेबित्तिकै बढी वा ठूला समूहको विरुद्ध अल्प र सानो समूहले गर्ने विद्रोह हो । क्रान्तिमा निर्णायक स्रोत जनता नभई क्रान्तिका अगुवाइ गर्ने क्रान्तिकारी हुन्छन् । त्यसैले त्यस्ता क्रान्तिकारीले गरेको निर्णयबाट भएको परिवर्तन स्थायी हुन सक्दैन । निश्चित समयावधिमा यसको समाप्ति निश्चय छ ।'

टमका जोशपूर्ण कुराले हामी सबैलाई खिंचेको छ । एक हिसाबले उनको भनाइ ठीक जस्तै लागेको छ । उनको भनाइ- अनुसार चीनभित्र सन्ताउन्न जाति र भाषा प्रचलित छ ।

ती प्रत्येक जातिको आ-आफ्नो धार्मिक र साँस्कृतिक मान्यता छ । एक जातिको अर्को जातिसँग विधि-व्यवहार, आहार-विहार केही मिल्दैन। एशियाको यत्रो भू-भाग ओगटेको चीनले आफ्नो राजनीतिक सीमा क्षेत्रलाई सांस्कृतिक र सामाजिक सीमा कायम गर्न खोज्नु माओत्से तुङ्को भावनात्मक विचारबाट आन्दोलित मस्तिष्कको उपज मात्र हो। यथार्थतामा यो सम्भव छैन । उनी ठोकुवा गरेर भन्छन्- 'चीनियाँ समाजले पुरानै धार्मिक, साँस्कृतिक मान्यतालाई पुनःस्थापित गर्छ ! यो चीनियाँ संस्कारको गुण हो ।'

यसमा पिटर पनि सहमति जनाउँदै भन्छन्- 'मान्छे जन्मँदा आफ्नो मन र मस्तिष्कमा पुर्खौली गुण तथा अनुहार र शरीर समेत पुर्खाको प्रतिमूर्ति भएर समाजमा प्रतिनिधित्व गरेका हुन्छन् । अनि त्यस्तो शाश्वत सत्यलाई परिवर्तन गर्न खोज्नु हत्केलाले सूर्य ढाक्न खोज्नु मात्र हो । त्यसैले यो जन-स्वीकार्य हुन सक्दैन । जुन जन-स्वीकार्य छ, त्यो बाँचेको छ र शताब्दी, शताब्दीसम्म बाँच्नेछ ।'

टम र पिटर दुवै सांघाईवासी हुन् । जातीय स्वभाव, भाषा, संस्कृति र क्षेत्रीय आधारमा मात्र होइन, यी दुईलाई एउटै हतियारले पारेको चोटको पीडा बेहोर्नुपरेकोले पनि यिनीहरूमा राम्रो सम्बन्ध कायम भएको देखिन्छ । यतिका बेर भैसक्यो, टम जाने नाउँ नै लिदैनन् । टम क्रान्ति - पूर्व र पश्चात् पनि चीनमा बसेका हुँदा उनलाई दुवै अवस्थाको

यथेष्ट जानकारी रहेछ । उनी भन्छन्- 'एक जना साहित्यकार लूशुन नै यस साँस्कृतिक क्रान्तिका अगुवा हुन् । उनकै नेतृत्वमा संञ्चालित अभियानमा एउटा हाँगो उठ्दो र काल्पनिक नारा दिइन्थ्यो-पुरानो नैतिकता मुर्दावाद ! नौलो साहित्य जिन्दावाद !! र पुरानो साहित्य मुर्दावाद ! नौलो नैतिकता जिन्दावाद !! - यो नारा चीनभित्र उन्नाईस सय तीसको दशकदेखि पछिसम्म नै कायम रह्यो । तर यसको अर्थ कसैले बुझेनन् ।'

पिटरले व्यङ्ग्यात्मक स्वरले भने-- 'आज-भोलि बुझ्दै छन् कम्युनिष्ट नेताहरूले नैतिकता र साहित्य भनेको के हो ?'

चाखलाग्दो कुरा भइरहेर पनि समय धेरै बितिसकेको हुँदा पछि भेटेर यस्तै दुःख-सुखका कुरा गरौंला भनेर मैले टमसँग आफ्नो विचार भनें । उनले पनि बुझे र छुट्टिने तरखरमा मलाई उनले आफ्नो ठेगाना दिए । साथै, मैले पनि उनलाई आफ्नो परिचयकार्ड दिएँ । फेरि पछि भेट्ने र अरू कुराकानी गर्ने वाचा गर्दै टम हामीबाट छुट्टिन्छन् ।

म पनि पिटरलाई त्यहीं छोडेर आफ्नो कोठातर्फ लाग्न खोज्दै भन्छु - 'पिटर! आज मैले तिमीहरूको जाति, समाज र चीनबारेमा धेरै जानकारी पाएँ । तिम्रो साथी टम र तिमीलाई धेरै जानकारी रहेछ । मौका पऱ्यो भने फेरि फेरि बसौंला ।'

म आफ्नो कोठामा पुग्छु । कोठाको एक छेउमा रहेको मञ्चमा बसेर म सोच्न थाल्छु - यहाँ कति पेङ साँङ्लुहरू 'पिटर' भएर बाँचेका छन् र कति ताङ्चाङ्लइहरूले 'टम' भएर पुनर्जीवन पाएका छन् । यो हङ्कङ्का लाखौं मान्छेहरू मुटुभित्र पीर बोकेर आफ्नो समाज र पुर्खौली घर सम्झेर कति छटपटिदा हुन् । कति कोठाभित्र रोएर बस्ता हुन् ! सम्झँदा म स्वयम् दुःखित हुन पुग्छु ।

=★=

- ३ -

केही दिनको हङ्कङ्को बसाइपछि म काठमाडौं फर्कन्छु । मेरो चाख र आकर्षणको कारणले मेरो खोजी जारी रहन्छ । एकदिन पोखरा यात्राको क्रममा काठमाडौंबाट हिड्छु । मेरा एक जना मित्र काठमाडौं- पोखरा राजमार्ग निर्माणको दमौली शाखामा कार्यरत छन् । त्यहाँ एक दिन बस्ने निर्णय गर्छु ।

चीन सरकारले मेरो देशमा उद्योग स्थापना गर्न र नयाँ बाटो बनाउन ज्यादै ठूलो मद्दत गरेको छ । चीनको सीमाको शहर जाङमु र काठमाडौं जोड्ने राजमार्ग बनाइसकेपछि काठमाडौं र पोखरा जोड्ने नौविसे - पोखरा राजमार्ग बनाउन चीनियाँहरू व्यस्त छन् । नेपालको विकासमा चीनियाँ सहयोग प्राप्त भएकोले चीन र नेपालको अत्यन्तै राम्रो सम्बन्ध कायम छ तथापि एक देशको नागरिकसँग अर्को देशको नागरिकको कुनै सम्बन्ध छैन ।

निर्माणाधीन नौविसे-पोखरा खण्डको बीचमा पर्ने दमौली बजार-नजीकै प्राविधिक टोलीको क्याम्प छ । त्यहाँ एक खण्डमा चीनियाँहरू र अर्को खण्डमा नेपाली टोली बस्ने गरेका छन् । त्यस क्याम्पमध्ये नेपाली टोलीका प्रमुख भएका मेरा मित्र इन्जिनीयर कैलासमान भएको हुँदा उनकै आतिथ्यमा केही दिन क्याम्पमा नै बस्न पुगेको छु । क्याम्पमा नेपालीतर्फका सहयोगीहरू अरू दश जवान ओभर सियर, स्टोर र लेखा शाखाका अन्य कर्मचारी गरी जम्मा पच्चीस जवान कार्यरत छन् । त्यस्तै चीनियाँतर्फ पनि करीब पच्चीस जवान नै रहेछन् । दुवै थरी एकै ठाउँमा भएर पनि रीतिरिवाज, रहन-सहन र व्यवहारले गर्दा अत्यन्तै फरक देखिन्छन् ।

काठमाडौंबाट सबेरै हिंडे पनि निर्माणाधीन बाटो भएको हुँदा म साँझ मात्र दमौली पुगेकोले त्यस दिन केही हेर्ने समय नै भएन, तै पनि साँझ क्याम्पको बारेमा त जानकारी लिएँ । कैलासमानले भोलिपल्ट बिहानदेखि यताउता घुम्ने कार्यक्रम राखेका रहेछन् । कैलासमानले तयार गरेको कार्यक्रममा मैले आफ्नो कुनै विशेष इच्छा जाहेर नगरेको कारण मलाई यस क्षेत्रको बारेमा केही थाहा नभएको र मेरो यो यात्रा वास मात्र भएको हुँदा उनकै अनुसार चल्नु बेस सम्झेर हो ।

बिहान आठ बजे नै हिँड्नुपर्ने भएकोले म छः बजे सबेरै उठें र बिहानको आफ्नो कार्यबाट फुर्सद लिएर आठ बजेभन्दा अगाडि नै तयार भइसकेको छु । कैलासमानलाई लिन जीप क्याम्पभित्र पस्यो । जीपमा बसेर कैलसमान र म योजनाको कार्यक्षेत्रतर्फ लाग्यौं । करीब आधा घण्टाको मोटरको हिंडाइपछि एक ठाउँमा मोटर रोकियो, जहाँ एक जना चीनियाँ प्राविधिक कर्मचारी नेपाली कुल्लीहरूलाई काम लगाइरहेका छन् ।

नेपाली प्राविधिकभन्दा अगाडि नै पुगेर चीनियाँ मान्छे कार्यक्षेत्रमा भिडिरहेको देख्दा मलाई अचम्म लाग्नु स्वाभाविक हो । किनभने काम नेपालको हो, नेपालीहरू पहिले पुग्नुपर्ने र काम शुरू गर्नुपर्नेमा विदेशी मान्छे पहिले पुगेको देखें । निर्माण-स्थलमा चीनियाँ मान्छेले बडो फूर्तिका साथ काम लगाइरहेका छन् ।

'निहाउ !'- कैलासमानले चीनियाँ भाषामा सहकर्मी चीनियाँ मान्छेलाई 'हेलो' को सम्बोधन गर्दै जीपबाट उत्रन्छन् ।

उत्तरमा चीनियाँ मान्छेले पनि- 'निहाउ ! निहाउ !!'- भनेर स्वीकार गरे । तर नहाँसीकन र आफ्नो कामको निरन्तरतालाई नछोडीकन कैलासमानलाई औपचारिकता पूरा गरे । उनको ध्यान कैलासमान र उनको जीपको आगमनलाई भन्दा आफ्नो कार्यव्यस्ततामा संलग्न भइरहेको छन ।

आधा घण्टासम्म ह्रामी उनको नजीकै उभिँदा पनि हामीतर्फ एकपटक पनि नहेर्ने यी चीनियाँ मान्छे कैलासगान सरहका इन्जिनीयर रहेछन् । अलिक वेरपछि कैलासमानले केही अप्ठेरो मान्दै चीनियाँ साथीलाई सम्बोधन गर्दै मलाई औंल्याउँदै अंग्रेजीमा भन्छन्- 'मिस्टर आङ ! यिनी काठमाडौंवाट आएका मेरा साथी हुन् ।'

मतर्फ फरक्क फर्केर केही आश्चर्य भावमा भन्छन्- 'हेलो ! यु फ्रॉम च्याटमाडु!'

मैले 'येस' भन्न नपाउँदै फेरि उनी आफ्नै काममा व्यस्त हुन पुगे । ह्रामी पनि चुपचाप उनकै काम नियाल्न थाल्यौं । नेपाली कुल्लीहरूलाई काममा लगाउँदै गरेका ती चीनियाँ मान्छेले केही नेपाली भाषाका शब्द पनि जानेका रहेछन् ।

काम राम्रो, काम नराम्रो र सानो मान्छे, ठूलो मान्छे जस्ता दुई चार नेपाली शब्दहरू जानेका ती चीनियाँ मान्छेहरूले नेपाली कुल्लीहरूलाई हाँकेको देख्दा म चकित परें । मेरो साथी उनी सरहकै इन्जिनीयर पाइन्टको पाकेटमा हात हालेर टहलिरहेका छन् ।

यी दुई देशका एकै कामको जिम्मा लिएर आएका जिम्मेवार व्यक्ति, नेपाली पक्षका इन्जिनीयर आफ्नो हाकिमी रवाफमा उच्च व्यक्तित्वको परिचय दिन आफूलाई नसुहाउँदो किसिमबाट प्रस्तुत गर्न व्यस्त छन् भने चीनियाँ पक्षका इन्जिनीयर आफ्नो जिम्मेवारी पूरा गर्न तन-मनले लागिरहेका छन् ।

जहाँसम्म चीनियाँ पक्षको सवाल छ, को कुन पदको हो ? कुनै भेदभाव देखिंदैन, चाहे त्यो इन्जिनीयर होस्, चाहे ओभरसियर होस्, चाहे साधारण प्राविधिक होस् तथा चाहे ड्राइभर नै किन नहोस्-सबै एकै देखिन्छन् - काम गर्दा, हिंड्दा, खाँदा, बस्दा र पहिरन आदि र सहुलियत हेर्दा ।

तर नेपाली. पक्षको इन्जिनीयर, ओभरसियर र प्राविधिक कर्मचारीमा आकाश-जमीनको फरक देखिन्छ । नेपाली इन्जिनीयरले आफूलाई एक साहूकार, बुद्धिजीवी र सभ्य किसिमले प्रस्तुत गरेका हुन्छन् भने, साधारण प्राविधिक जस्तै मेशीनम्यान, अप्रेटर र ड्राइभरले आफूलाई बुद्धिहीन, गरीब, असभ्य किसिमवाट प्रस्तुत गरिरहेका हुन्छन् । यसरी पदको आधारमा वर्ग छुट्टिएर ठूलो पदकोले श्रम नगर्ने वा गर्नु नहुने मनःस्थिति विकसित भएको छ भने तल्लो पदको मान्छेले श्रम गरेर मात्र अर्थोपार्जन गर्न सक्छन् भन्ने धारणा विकसित भएकोले यहाँ स्पष्ट वर्ग छुट्टिएको छ, जो न्यायसंगत होइन।

एउटा निश्चित योजनामा खटिएका कर्मचारी, चाहे त्यो जुनसुकै पदको होस् योजना समाप्ति नभएसम्मको कार्यकालमा सवैको एउटै जिम्मेवारी हुने हुँदा कार्य- विभागको आधारमा सवैले उत्तिकै काम गरी योजना समाप्त गर्नुपर्ने हुन्छ । यो सत्यलाई भुलेर माथिका पदवालाले तलका कर्मचारीलाई शोषण गर्ने प्रवृत्तिले गर्दा तलका ज्यादै तल र माथिका पदका मान्छे ज्यादै नै माथि देखिने कारणले गर्दा योजनामा मात्र होइन, समाजमै विकृति पैदा हुन पुगेको छ ।

एक साधारण नागरिकले पनि इन्जिनीयरिङ डिग्री लिएर आएपछि आफूले आफूलाई असाधारण सम्झी साधारण नागरिकभन्दा धेरै माथि नै हुँ भन्ने सम्झने र डिग्री प्राप्त व्यक्तिले शारीरिक परिश्रम गर्नु हुँदैन वा पर्दैन भन्ने भावना विकसित हुँदा पनि पदको फरकमा व्यक्तिको मनोविचारगा नै फरक हुनु सहज प्रक्रिया होइन । तरपनि हामीले यहाँ पदीय फरकलाई मानवताकै फरक सम्झने गर्छौं, जो अत्यन्तै अनुचित हो र अन्याय हो ।

कैलासमान र म काम गरिरहेका नेपाली कुल्लीहरू र तिनले गरेका काम हेर्न व्यस्त छौं । हामीभन्दा व्यस्त ती चीनियाँ इन्जिनीयर छन्, जो कुल्लीसँगसँगै काम गरिरहेका छन् । काममा सबै व्यस्त छन्, दिनको शुरू भएकोले पनि काममा स्फूर्ति देखिन्छ ।

एउटा कुल्लीले तल खोलावाट डोकोमा ढुङ्गा वोकेर ल्याउँदै थियो, अचानक टेकेको ढुङ्गा खुस्किएर कुल्ली लड्न पुग्यो । हेर्दाहेर्दै ढुङ्गा तल खोलातर्फ गुड्न थाल्यो र सँगसँगै मान्छे पनि । सबै हेरेको हेर्‍यै भए । म आत्तिएँ र कराएँ । 'हेर्नुहोस् ! हेर्नुहोस् !!' सँग-सँगै सबैको हतारिएको अनुहार देखियो, तर कोही पनि अगाडि बढ्न सकेनन्, सबैले एक अर्कालाई हेर्दै रहे । ती चीनियाँ इन्जिनीयर फ्रुनसडको त्यहाँ पुगे र त्यो कुल्लीलाई समाल्न पुगे, त्यो कसैलाई थाहा नै भएन र कसैले पत्तो नै पाएनन् । त्यत्तिखेर मात्र सबैले देखे जब उनले कुल्लीलाई आफ्नो दुई हातमा वोकिसकेका थिए । म हेरेको हेर्‍यै भएँ र जिल्लिएँ ।

कैलासमानले यो घटनालाई वडो हल्कासँग लिएको वेहोरा तब मैले बुझें जव उनले त्यो कुल्लीलाई देखेर पनि आफ्नो कुनै प्रतिक्रिया जनाएनन्, जवकि देख्ने सबै आत्तिएको मनोभाव व्यक्त गरिरहेका थिए ।

कैलासमानले बडो सरल ढङ्गवाट भने- 'यस्तो घटना त दिनहुँ घटिरहन्छ, जाऔं हामी अर्को एरियामा !'

मैले तुरुन्त प्रतिक्रिया जनाएँ- 'के भनेको तिमीले ? यस्तो घटनालाई तिमी साधारण मान्छौ ? के दिनहुँ यस्तै हुन्छ ?'

मेरो प्रश्न-माथिको प्रश्नको जवाफ कैलासमानसँग छैन, जुन विषयमाथि मेरो प्रश्न छ त्यसप्रति उनको हलुका हेराइले गर्दा जवाफ पनि त्यत्तिकै साधारण नै छ । त्यसैले मैले उनको हलुको जवाफ सुन्न नचाहेर पनि सुन्नुपर्छ । उनी भन्छन्- 'बाटो बनाउने योजनामा कुल्लीहरू घाइते भइरहन्छन्, त्यसको उपचारको पनि व्यवस्था छ । तिमी चिन्ता नगर !'

'अहिले चीनियाँले नबचाएको भए यसको मृत्यु हुन्थ्यो !'- तुरुन्त मैले आफ्नो दिल-दुखाइ व्यक्त गरें ।

'यस्तो आकस्मिक हुने घटनामा यो हुन्थ्यो वा त्यो हुन्थ्यो भन्ने कुरा बेकारको हो! यस्तो भइरहन्छ, तर यस्तो हुन दिनु हुँदैन'- उनले बहुत सरल तवरले घटनाका बारेमा आफ्नो विचार व्यक्त गरे ।

खोलाको किनारको बाटोमा ल्यान्ड स्लाइड गइरहन्छ, त्यसैले फलामे तारको जाली वनाई ढुङ्गा भरी तल खोलादेखि रिटेनिङ वालले बाटो संरक्षण गर्नैपर्ने प्रविधिमा अलिकति पनि कमजोर वा प्राविधिक बेवास्ता भयो भने कुनै पनि समयमा बाटो पूरै खोलामा पुग्ने सम्भावना हुन्छ । यस्तो कुरा नेपाली प्राविधिकले भन्दा चीनियाँ प्राविधिकले वढी बुझ्ने भएको हुँदा यहाँ वढी लगन चीनियाँ प्राविधिकको भएको स्पष्ट देखिएको छ ।

नेपाली प्राविधिकहरू त कहाँवाट वढी कमिशन आउँछ वा बिहान- वेलुकाको आवश्यकता कसले पूरा गर्छ भन्ने चिन्तामा पूरा दिन विताएका हुन्छन् । यो कुरा कैलासमानसँग केही समय बिताउन थालेपछि मलाई बिस्तारै जानकारी हुन आयो ।

तल घटनास्थलबाट अर्को दुई जना कुल्लीको सहायताले घाइते केटालाई माथि ल्याइयो । खुट्टामा घाउ भएछ र केही रगत समेत वगेको हुँदा तुरुन्त प्राथमिक उपचार गर्नुपर्ने जरूरी देखी मिष्टर आङले क्याम्पमा लानुपर्ने राय व्यक्त गरे । यहाँ कैलासमानको जीप वाहेक अरू कुनै गाडी छैन । मिष्टर आङ कतै गाडी छ कि वा कतैबाट गाडी आइरहेछ कि भनेर टाढा- टाढा आँखा दौडाउँछन् । कतै गाडी नदेखेपछि कैलासमान-नजीकै आएर टुटेफुटेको अंग्रेजीमा भन्छन्- 'तपाईं कहाँ जाँदै हुनुहुन्छ ? यदि गाडी पाउनुभयो भने तुरुन्त पठाइदिनुहोस् ! यो घाइतेलाई क्याम्प लानुपर्‍यो ।'

यही जीप पठाए भइहाल्छ नि ! -भनी मैले भन्ने विचार गर्दागर्दै कैलासमानले तुरुन्त भनिहाले- 'मलाई चालीस नम्वरको कलभर्ट हेर्न जानु छ । त्यहाँ भएको डम्प ट्रक तुरुन्त पठाइदिन्छु । त्यसबाट यो घाइतेलाई क्याम्प पठाइदिनुहोस् ।'

कैलासमानले जीप दिने आवश्यकता महसूस गरेनन् । मैले केही बोल्न खोजे पनि बोल्न सकिनँ र मिस्टर आङले पनि-तिम्रो जीप लेऊ घाइतेलाई क्याम्प लान्छु- भन्न सकेनन् । कैलासमानले जाने इशारा गर्दै जीपतर्फ लम्किए, म पनि उनीसँग चुपचाप जीपमा बसी हिडें ।

म केही नबोली चुपचाप जीपमा हिंडिरहेको छु । कैलासमानले मेरो ध्यान उनीतर्फ खिंच्दै चीनियाँ मान्छेको बारेमा भन्दै जान्छन्- 'यी चीनियाँ मान्छेहरू काम- बाहेक अरू

केही हेर्दैनन्, बिहानदेखि बेलुकासम्म कामै-काम। म सरहको इन्जिनीयर, मिष्टर आङ कुल्लीसँग-सँगै बसेर काम गर्छ ।'

'यो त राम्रै हो नि !' म आफ्नो विचार भन्छु ।

'के राम्रो भन्छौ, इन्जिनीयर भएर पनि ढुङ्गा बोक्ने ?'

'होइन ! ढुङ्गा बोक्ने भनेको होइन !'

'यिनीहरू त विदेशमा आएका छन्, जे गरे पनि हुन्छ । हाम्रो इष्टमित्र नाता कुटुम्बले हामीले ढुङ्गा बोकेको देखे भने के भन्लान् ?'

'तिम्रो विचारलाई म बेठीक भन्न पनि सक्दिनँ !' - कैलासमानसँग म बहस गर्न चाहन्नँ ।

कैलासमान आफ्नो भनाइलाई निरन्तरता दिन भन्दै जान्छन्,- 'इन्जिनीयरको त कुरा छोड' हाम्रो त कुल्लीको नाइकेले पनि ढुङ्गा बोक्ने र सावेल चलाउने काम गर्दैनन् ।'

कैलासमानको कुरा मलाई कुनै नौलो लाग्दैन । हाम्रो समाजको बनावट नै यस्तो संकीर्ण विचारले भरिपूर्ण भएर बाँचेको छ, जसलाई ठूलो - सानो, उच्चो - होचो, धनी-गरीब र जान्ने नजान्ने समूहको लपेटाले गाँजेको छ । स्वतन्त्र, स्वच्छ र शोषणमुक्त समाज स्थापनाको लागि यहाँ पथप्रदर्शकको खाँचो छ र सही नेतृत्वको आवश्यकता छ ।

म यी सबै मेरा मनमा उब्जेका विचारहरू कैलासमानलाई सुनाउन सक्दिनँ, फेरि सुनाएर पनि के फाइदा ? न उनले बुझ्छन्, न बुझेर यसको अमल नै गर्छन्! वेकार बहस मात्र बढाएर किन समय नोक्सान गर्नु ! त्यसैले मुखले मैले केही नबोली निर्माणाधीन बाटो, बाटोमा कार्यरत कामदार तथा कामको जिम्मा बोकेका नाइके अनि ठेकेदारलाई हेर्दै र नियाल्दै अगि बढिरहेको छु ।

मेरो एकाग्र चित्तलाई झस्काउँदै कैलासमान बोल्छन्– 'यो नौबिसे-पोखरा राजमार्ग कसरी आयो, तिमीलाई थाह छ ?'

'हो ! थाह छ !'

'के थाह छ, भन त ?'

'चीन सरकारले हाम्रो देशको विकासको लागि कोर्न थालेको पूर्वाधार को रेखा हो ।

'तिम्रो देशको विकासको लागि मात्र होइन, उसको राजनीतिक उद्देश्य परिपूर्तिको लागि मुख्य हो !' उनले बुझेसम्मको कुरालाई भन्दै जान्छन्– सुनौली-पोखरा राजमार्ग भारत सरकारले बनाएको हुँदा चीनियाँ सीमाबाट पोखरा जोड्ने सबैभन्दा नजीक बाटो यही भएकोले यो बाटो चाँडो बनेको हो । होइन भने योभन्दा महत्त्वपूर्ण हाम्रो लागि पूर्व-पश्चिम राजमार्ग छ ।

यसै सन्दर्भमा उनी भन्दै जान्छन्– 'हेर ! कुनै पनि देशले सहयोगभन्दा आफ्नो स्वार्थलाई बढी ध्यान दिएको हुन्छ, भारत सरकारले सहयोगस्वरूप निर्माण गरिदिएको त्रिभुवन राजपथ पूर्ण सैनिक र युद्धका दृष्टिकोणले निर्माण भएको तिम्रो आँखा - अगाडि

स्पष्ट छ । त्यसैले हाम्रो विकासभन्दा उनीहरूको राजनीतिक स्वार्थ बढी हुन्छ, प्रत्येक यस्ता सहयोगहरूमा, जुन कुरालाई हामीले बुझ्न सक्नुपर्छ !'

कैलासमानको विचार खण्डन गर्नुपर्ने देखिदिनँ, त्यसैले म सुन्दै जान्छु । उनको भनाइमा ठूला देशहरू जुनसुकै सिद्धान्तको आधारमा स्थापना भएका हुन्,साना देशको लागि ती साम्राज्यवादी शक्तिपुञ्ज हुन्,जुन शक्तिको आडमा साना र गरीब मुलुकलाई आफ्नो पिछलग्गू र मुखापेक्षी बनाउने प्रयत्न गरिरहेका हुन्छन् ।

यस्तै राजनीतिक र व्यावहारिक कुरा गर्दै हामी हिंडिरहेका छौं । म केही कुरामा उनको समर्थन गरिरहेको छु भने केही सुनि मात्र रहेको छु । म उनीसँग विवाद गर्नुभन्दा त्यहाँका परिवेशलाई नियाल्न व्यस्त छु । एकाएक हामी एक ठाउँमा रोकिन्छौं । मोटरबाट सबै ओर्लन्छन् र म पनि ! कैलासमान काम गरिरहेको ठाउँमा नगई केही टाढा उभिएको एक जना सफा लुगा लगाएका व्यक्तितर्फ बढ्छन्, उनी पनि इन्जिनीयर कैलासमानसँग नजीकिन दौडेर आउँछन् ।

म कलभर्टको काम गरिरहेको क्षेत्रतर्फ हेर्न पुग्छु । कलभर्टको बनावट र चीनियाँ प्रविधिको बारेमा म जानकारी लिन चाहन्छु । यस- बारेमा बताउने वा विस्तृत जानकारी दिने त्यहाँ कोही छैनन् । कैलासमान बडो चिन्तित अनुहारमा हातलाई यता र उता लम्काउँदै ती व्यक्तिसँग कुराकानी गरिरहेछन् ।

पछि थाह भयो ती यस कलभर्टका ठेकेदार रहेछन् । दिउँसोको खाना तिनै ठेकेदारको पाहुना भएर खाने कार्यक्रम रहेछ । हामी सबै ठेकेदारको क्याम्पमा गयौं ।

इन्जिनीयरको सत्कार गर्न पाएकोमा ठेकेदार कलानाथ बडो खुशी देखिन्छन् । अत्यन्तै मीठो बोली बोल्ने र इन्जिनीयरको अगाडि प्रायः दुवै हात जोल्ठ्याइनै रहने कलानाथ काममा नोक्सान भएको र कैलासमानले मद्दत गरे केही नोक्सान उक्सने गुनासो पोख्दै भन्छन् । - 'यी चीनियाँहरूले खोतली खोतली कति सिमेन्ट छ, कति डण्डी छ भनेर हेरेर बर्बाद गरिसके ! हिजो पूरा भत्काउनुपऱ्यो ! हजुरले विचार नगरी भएन !'

'ठीक छ ! म हेर्छु'- कैलासमान हाकिमी पारामा ठेकेदारलाई सान्त्वना दिन्छन् ।

योजना क्षेत्र भए पनि खाना- पिनामा कुनै कमी थिएन । दुई किसिमको मासु, बियर र व्हिस्की सबै व्यवस्था थिए । कैलासमानले खानाको साथमा बियर पिए, तर व्हिस्कीको बोतल भने साँझलाई हुन्छ भनेर ड्राइभरलाई जीपमा राख्न लगाए । केही क्षणको बसाइपछि हामी त्यहाँबाट हिड्यौं ।

दिनभर जस्तो घुमेर साँझ नपर्दै क्याम्पमा आइपुग्यौं । हामी आइपुग्दा क्याम्पमा त्यति मान्छे थिएनन् । जति साँझ छिप्पिदै गयो क्याम्पको वातावरणमा रमाइलो छाउन थाल्यो । चीनियाँहरूको क्याम्पबाट जेनेटरको आवाज सँगसँगै क्याम्प र क्याम्प- वरपर बिजुली बत्ती बल्यो । सबै नै साँझको कार्यक्रमको तरखरमा लाग्न थाले ।

चीनियाँको क्याम्पभित्र हरेक साँझ फिल्म देखाउने गरिने रहेछ । साँझ सबै खानपिन गरेर फिल्म हेर्न जाने इच्छा भएकाहरू उता क्याम्पमा जम्मा हुने रहेछन् । त्यही

कार्यक्रम-अनुसार हाम्रो साँझको कार्यक्रम पनि निश्चित गर्न कैलासमान मसँग सोध्दछन्- 'साँझ चीनियाँ फिल्म हेर्ने हो ?'

'के फिल्म देखाउँछन् ?'

'यही चीन र चीनियाँ-सम्बन्धी !'- कैलासमानले सरल ढङ्गले बताउँछन् । मैले चीनियाँ फिल्म हेर्न जाने आफ्नो राय व्यक्त गरेपछि त्यही अनुसार चाँडै खाना खाने कार्यक्रम तय भयो । हामी खाना खाएर चीनियाँ क्याम्पतर्फ लाग्छौं ।

क्याम्पको एक छेउमा वरपरका गाउँलेहरू करीब एक सय जवान जति जम्मा भइसकेका रहेछन् । खुलारूपमा देखाउने फिल्म कार्यक्रम वास्तवमा चीनियाँहरूको मनोरञ्जनको लागि देखाइने गरेको रहेछ । हामी पुगेपछि पर्दा र प्रोजेक्टरको लगभग मध्य भागमा आठ दश ओटा मेच राखियो र हामीलाई त्यहीं बस्न भनियो ।

हामी गएर बसेपछि चीनियाँहरू पनि आए -- 'निहाउ ! वानसाँङ हाउ !'- साँझको अभिवादन बोल्दै हाम्रो छेउको मेचमा बस्न आए । केही बेरमै फिल्म शुरू भयो ।

चीनियाँ भाषाको फिल्म मैले बुझ्ने त कुरा नै भएन । गाउँलेहरूले सधैं हेर्ने भएकाले भाषा नबुझे पनि बुझ्न सक्छन् होला । नबुझेको र चीनियाँ फिल्म पहिलोपटक हेर्न थालेको हुँदा मलाई असजिलो लाग्न थाल्यो ।

शायद, मलाई लागेको असजिलो बुझेर होला कैलासमानले मलाई फिल्मको बारेमा विस्तार बताउन थाले-- 'यो कथा करीब सन उन्नाईस सय सत्ताईसको हो, जब माओत्से तुङ्ले किसान र मजदूरलाई एककट्ठा गरी क्रान्तिकारी लाल सेना खडा गरी क्रान्ति शुरू गर्न लागेको हो ।'

बल्ल मैले भेउ पाएँ । अब अलि बुझ्न थालें । कैलासमान विस्तारै भन्छन्-- 'हेर ! पहिलो सेनाको भर्ती हुनान प्रान्तका किसानहरू, खानी मजदूरहरू र क्वामिङ्ताङ विद्रोही दल जस्ता तीन स्रोतबाट भयो । यसै गरी फिङ्स्याङ, ल्युयाङ र लोलिङ्का किसान समुदायबाट र वाङ्वेइको विद्रोह गरी आएका उहानका किल्ला रक्षकहरूमध्येको ठूलो समूह लाल सेनामा सम्मिलित भयो ।'

फिल्ममा देखाइएको युवक माओत्से तुङ मैले चिन्न थालें । एकाएक उनलाई सिपाईहरूले पक्रन्छन् । अनि तिनलाई ठोक्दै र मुन्ट्याउँदै लान्छन् र धेरै दुःख दिन थाल्छन् । तर युवक माओ रत्ति पनि गलेका हुँदैनन् । शायद, उनलाई सजाय दिने कुनै योजना हुँदै छ ।

कैलासमान मार्फत म केही स्पष्ट हुन चाहन्छु । उनी विस्तारै भन्छन्- 'माओत्से तुङ हानयानका खानी मजदूरहरूलाई संगठन गर्न लागिरहेको बखतमा क्वामिङ्ताङ्का सिपाईहरूले पक्राउ गरेर उनलाई ज्यानै मार्ने योजना अनुसार लिएर गइरहेको अवस्थामा उनी सिपाईको पञ्जाबाट फुत्केर भाग्छन् र जंगलमा लुकेर दिन बिताउँछन् । मुश्किलले ज्यान जोगाएर पहाडको ढुङ्ग्यान बाटो हुँदै एउटा किसानको घरमा शरण लिन पुग्छन् ।'

म छर्लङ्ग फिल्म बुझ्दै छु । माओ किसानको एक घरमा शरण लिन गएर आफ्नो कमजोरी र लाचार अवस्था बताउँछन् । उनको सहयोगबाट उनी अर्को जिल्लामा पुग्छन् त्यसपछि उनकै संगठन-भित्रको सिपाई-समूह भएको स्थानमा पुगेर पुनः शक्तिवान् हुन लागेको म अनुमान गर्न थाल्छु ।

वास्तवमा हो रहेछ, जब कैलासमानले भने– 'युसातु' लाई सेनाको कमाण्डर र आफू अध्यक्ष भएर फेरि अर्को संगठन भयो ।

'हो ! म बुझ्दै छु ।'- मैले बिस्तारै जवाफ दिएँ । 'माओको सेनाले क्वामिङ्ताङ सेनाको विरोधको विपत्ति खप्दै किसान-विद्रोहको पक्षमा आफूलाई अगाडि बढाउँदै गयो । यो संग्राममा युसातुको साथै कैयौं जवानहरू क्वामिङ्ताङ सेनामा प्रवेश गरे र कैयौं क्वामिङ्ताङ सेनाहरू माओको सेनामा प्रवेश गरे ।'- यो फिल्ममा देखाइएको कथा हो ।

अन्त्यमा माओत्से तुङ्को सर्वत्र विजयको घोषणा गर्दै देशका किसान, मजदूर र गरीबको एकमात्र मित्र माओत्से तुङ हो भनेर फिल्म अन्त हुन्छ -यो कैलासमानले दिएको संकेतको आधार हो ।

सबैतर्फ वत्ती बल्छ । प्रोजेक्टर चलाउने अर्को फिल्म हाल्न व्यस्त हुन्छन् । त्यहाँ म मिष्टर आङलाई पैल्याउन खोज्छु , देख्दिनँ । सबैको अनुहार एकै दिखिने ती चीनियाँहरूलाई भाषाको कारणले म केही भन्न सक्दिनँ ।

मसँगै एक जना अंग्रेजी बोल्ने चीनियाँ मान्छे आएर वस्न खोज्दै मलाई 'हेलो' भन्छन् । मैले पनि उनीसँग अंग्रेजीमा बोल्न थाल्छु । यसैबीच कैलासमानले मेरो परिचय उनीसँग गराउँछन् । उनी दोभाषे रहेछन् । म- सँगै आएर बसेकोमा मलाई खुशी लाग्यो ।

दोस्रो फिल्म शुरू हुन्छ । यो फिल्म पनि माओत्से तुङ्सँग सम्बन्धित रहेछ । मैले टडकारो जानकारी पाएँ ।

माओले सेनाको बीचमा काम गरिरहेको र सेना संगठन गरिरहेकोसम्म मैले बुझें । पछिको कुराको लागि मैले दोभाषेलाई सोधें । उनले मलाई फिल्मसम्बन्धी विषयवस्तु सम्झाउँदै भने- 'यो चिङ्काङ्सान क्षेत्रमा कार्यरत माओको बारेमा देखाउन चाहेको छ । वाङ्चुओ र यानवेन छाई यी दुई जना लाल सेनामा सम्मिलित भएर धेरै शहरहरू कब्जा गरे र क्वामिङ्ताङ्का सेनाहरूलाई पराजित गरे । यी दुई वीरहरूको अथक प्रयासबाट सेनाको संख्या पनि बढ्यो । पछि तिनीहरूको नियतमा शंका उत्पन्न भएपछि सेनाकै समूहले तिनलाई मृत्युदण्ड दियो ।'

यहाँ मलाई दुःख लाग्यो-ती दुई पुरुषले लाल सेनाको लागि लड्दालड्दै मृत्यु हुनुपर्‍यो किन ?- यो प्रश्नको जवाफ म कोसँग मागूँ !

सानो सानो टुक्राको फिल्म हुने हुँदा प्रत्येक आधा आधा घण्टामा फिल्म बदल्नुपर्छ । यसैबीच हामी आपसमा कुराकानी गर्ने मौका पनि पाउँछौं । मसँगै बस्न आएका दोभाषेसँग मेरो परिचय हुन्छ । उनको नाम ल्युस्याउ रहेछ ।

फिल्म शुरू भयो । यसको भूमिकाबारेमा मैले ल्युस्याउलाई नै सोधें, अनि उनले बिस्तारै व्याख्या गरे- 'यो क्रान्तिको शुरूको कुरा हो, फूच्यानमा घटेको घटनाबारे देखाइँदै छ । लिलिसान एउटा विचारक र क्रान्तिकारी योद्धा थिए । उनको जन्म हुनानमा भए पनि फ्रान्समा गएर अध्ययन गरेर फर्केका हुँदा कम्युनिष्ट नेताको रूपमा आफ्नो नेतृत्वलाई हानखाओ र सांघाईमा राम्रो ढङ्गले विस्तार गरेका थिए । उनले 'लिलिसान वाद भन्ने छुट्टै विचार प्रस्तुत गरिरहेका थिए । यो विचार किसान र मजदूर- हितको लागि गलत साबित भएकोले त्यसलाई लाल सेनाद्वारा दबाइयो ।'

लिलिसान वादका समर्थकहरूले गाउँगाउँमा गएर केही खानदानी व्यक्तिहरूका घरमा पसी लुटमार गर्ने आतङ्क मचाउन लागेको र मजदूर र किसानलाई हात लिएर आपसमै आक्रमण गराउन थालिएको देखिन्छ ।

मलाई ल्युस्याउले बिस्तारै भन्दै जान्छन्- 'त्यस बखत गृहयुद्धमा व्यस्त फङ यु स्याङ र च्याङ्काइसेक- माझ भएको तनावको फाइदा उठाउन लागेका लिलिसानको कार्य- नीतिले ठीक नभएको र मुलुकको परिस्थिति- अनुसार नभएको हुँदा लाल सेनाले 'लिलिसान वाद' लाई दबाउनुपरेको हो ।

फिल्म हेर्दाहेर्दै मैले विचार गरें– यस्ता जोशपूर्ण फिल्म हेरेपछि दिनभरको कामको थकाइ मेटिने र मन-मस्तिष्कमा नयाँ जोश भरिनेछ र भोलिको लागि फेरि काम गर्ने स्फुर्ति बढ्नेछ ।

यसैबीच मिष्टर आङ आइपुग्छन्– 'निहाउ !' को औपचारिकता निभाउँदै हामीसँगै आएर बस्छन् र भन्छन्- 'दिउँसोको त्यो कुल्ली केटाको खुट्टा भाँचिएको रहेछ । उपचारको लागि पोखरा अस्पताल पठाएँ ।'

'ए ! खुट्टा नै भाँचिएछ !' - मैले आश्चर्च प्रकट गरें ।

मिष्टर आङ्ले घटनाको बारेमा भन्दै क्याम्पको चीनियाँ डाक्टरले खुट्टा भाँचिएको निश्चय गरेपछि पोखरा अस्पताल पठाउनुपरेको जानकारी दिएर उनले कुल्लीलाई क्षतिपूर्ति केही दिन सकिन्छ कि भनेर कैलासमानसँग सोधे । तर कैलासमानले बडो हलुको ढङ्गबाट उनलाई जवाफ दिए– 'कसले दिन सक्छ क्षतिपूर्ति ? हामीसँग त्यस्तो दिने व्यवस्था नै छैन ।'

'त्यो त मलाई पनि थाह छ' यदि तपाईंले चाहनुभयो भने ठेकेदारबाट केही रकम दिलाउन सक्नुहुन्छ नि !'

कैलासमानले यो घटनालाई चिन्तायोग्य ठान्दैनन् । कुराको विषयलाई अर्कोतर्फ मोड्न खोज्छन् । यसै- बीच फिल्म शुरू हुन्छ ।

लहलहाउँदो धानखेतमा किसानहरू हाँसेको र समूह समूह भई संगीतको धुनमा नाचेको दृश्य आउन थालेको छ । फलफूलका बोटहरू लटरम्म फलले लच्केको र किसान आफ्नो श्रमको फल देखेर रमाएको दृश्यले चीनमा भएको विकासको अड्कल लगाउन

सजिलो भएको छ । यो फिल्म ग्रामीण विकास- सम्बन्धी भएको हुँदा अनेकानेक गाउँले किसानहरूको जीवनस्तर उठेको बारेमा जानकारी दिएको रहेछ ।

दर्शकमध्येको एक जनाले हामीले सुन्न सक्ने स्वरमा आफैसँग भन्छन्– 'देश भनेको त चीन पो रहेछ ! त्यस्तो बाली ! त्यस्तो रमाइलो वातावरण ! सबै हँसिला सुकिला ! अहो ! कस्तो राम्रो !'

यहीं वरपरको गाउँले देखिने ती दर्शक फिल्म हेरेर आफै - भित्र रमाएका छन् र आनन्दित भएका छन्, र चीनको विकासले उनको मनःस्थितिमा गहिरो प्रभाव पार्न थालेको अनुभव गर्न सकिन्छ । गाउँमा मरी मरी खेती गर्दा पनि जरजर र सुख्खा देखेको आफ्नो खेतवारी सम्झेर होला उनले चिच्याएको । सबैले उनलाई हेर्न थाले र हामीले पनि त्यही मान्छेतर्फ ध्यान दियौं । यत्तिकैमा फिल्म समाप्त हुन्छ ।

बिजुली बत्ती झलमल्ल बल्छ । सबै आ-आफ्नो ठाउँबाट उठ्छन् । गाउँलेहरू क्याम्पबाट जान थाल्छन् र हामी पनि उठेर हिड्ने तरखर गरिरहेका हुन्छौं । यत्तिकैमा चीनियाँ दोभाषेले मलाई आफ्नो क्याम्पतर्फ जाने संकेत गर्दै भन्छन्- 'हाम्रो तर्फ पनि हेरौं !'

हाम्रो ग्रूपका साथीहरू अलि अगाडि बढ्छौं । क्याम्पको मध्यभागमा भएको एउटा घरमा टड्कारो सबैले देखिने गरी ठूलो साइजको 'माओत्से तुङ' को फोटो टाँगिएको रहेछ । त्यही घरको बाहिरी भागमा रहेका मेचहरूमा हामी बस्न पुग्छौं । हामीलाई त्यहाँ राखेपछि ल्युस्याउ केही क्षणको लागि हामीसँग छुट्टिन्छन् । कैलासमानसँग म बिस्तारै आफ्नो अनुभव व्यक्त गर्छु- 'यो क्षेत्र त भिन्दै देखिन्छ नि !'

'चीनियाँहरूको बस्ने स्टाइल हाम्रो भन्दा अलग हुन्छ ।' - कैलासमान भन्छन् ।

'कस्तो रमाइलो वातावरण !' म रमाइलो मान्दै फेरि भन्छु ।

'तिम्रो यो पहिलो दिन हो र चीनियाँ रहन-सहन तिमीलाई नौलो मात्र लागेको हो । हरेक नौलो वस्तुले मान्छेलाई क्षणिक आनन्द दिन्छ ।' उनले अनुभव बताए ।

मैले पनि त्यही अनुभव गरें, जो उनले बोले । यो नौलोपनले नै मलाई रमाइलो लागेको हुन सक्छ । यहाँको वातावरण नै पूर्ण चीनियाँ शैलीमा सजाइएको छ । पूरा क्याम्पमा चीनियाँहरू मात्र बस्ने हुँदा पनि यो सानो 'चाइना टाउन' नै जस्तो मलाई अनुभव भइरहेछ ।

ल्युस्याउसँग एक जना मान्छे आए र हामी बसेको नजीकै आइपुगे । कैलासमानलाई 'निहाउ' को औपचारिकता पूरा गर्दै मेरो नजीक आइपुगे । ल्युस्याउले उनको परिचय दिए, मैले पनि उनीसँग हात मिलाएर औपचारिकता पूरा गरें । उनी त्यस क्याम्पका कमाण्डर रहेछन् । उनले मलाई 'माओको फोटो भएको लकेट' मेरो कोटमा टाँगिदिए र मैले पनि स्वीकारें । अनि उनले चीनियाँ भाषामा मलाई सम्बोधन गर्दै केही बोले, तुरुन्तै दोभाषे ल्युस्याउले नेपाली भाषामा दोहऱ्याए- 'शायद, तपाईं यो योजना घुम्न आउनुभएको होला ! हामी तपाईंलाई स्वागत गर्छौं र हाम्रो तर्फको कुनै सहयोग छ भने हामी गर्न तयार छौं ।'

हो ! म घुम्न आएको ! तपाईंहरूसँग भेट्न आएको !'-- मैले तुरुन्तै भनें ।

फेरि उनले आफ्नो भाषामा बोले र ल्यु साउले दोहऱ्याए- 'तपाईंसँग भेट्न पाउँदा ज्यादै खुशी लागेको छ । क्याम्पको सबै चीनियाँ साथीहरूको तर्फबाट म तपाईंको स्वागत गर्छु । हामी दुई देशका जनता अत्यन्तै घनिष्ठ मित्र हौं !'

यस्तै ज्यादै नै औपचारिक र कूटनीतिक भाषामा ती कमाण्डरले बोले र मैले पनि त्यसै अनुसार आफ्नो प्रतिक्रिया जनाएँ । केही क्षणपछि हामी चीनियाँ क्याम्पबाट सबै चीनियाँ साथीहरूसँग बिदा भएर आफ्नो क्याम्पतर्फ आयौं ।

एउटा सानो घर, जहाँ आएका पाहुनाहरूलाई राख्ने व्यवस्था गरिएको रहेछ । म पनि त्यही कोठामा पुगें । कैलासमानसँगै एक जना युवक पनि म बस्ने कोठामा पसे । ती युवक यहीं काम गर्ने एक कारिन्दा रहेछन्, करीव पच्चीस वर्ष उमेर अनुमान गर्न सकिने ती युवकको नाम खगराज रहेछ । खगराजको छातीको वायाँ कुनामा माओको लकेट टाँसिएको देखें, जुन मेरो छातीमा पनि छ । उनले पनि मेरो लकेट हेरे । उनले केही बोलेनन् र मैले पनि केही भनिनँ । केही क्षणपछि उनी कोठावाट निस्किए ।

अब कोठामा म र कैलासमान मात्र छौं । कैलासमान चीनियाँको वारेमा कुरा उक्काउँदै भन्छन्– 'चीनियाँहरू कति वाठा ! तिमी राजधानीवाट आएको मेरो साथी भनेर थाह पाएपछि क्याम्प कमाण्डर भेट्न आयो ! वडो मीठो मीठो कुरा गरेर आफ्नो प्रभाव पार्न खोज्यो !'

'किन क्याम्प कमाण्डर अरू कसैसँग भेट्दैनन् ?'-- उनीसँग म प्रश्न गर्छु ।

कहाँ भेट्ने ! उ त यो क्याम्पको राजा हो ! उसको वोली कसैले काट्न सक्दैन र काट्नु हुँदैन पनि ! त्यहीं भित्रको चीनियाँ मान्छेले उ-सँग वोल्न तह अनुसार जानुपर्छ !'

'के भनेको तिमीले ?'

देख्दा तिमीले एउटै देखे पनि त्यहाँ पनि काम - अनुसारको पद छुट्टिएको छ । इन्जिनीयर, ओभरसियर, मेशीन अप्रेटर, ड्राइभरको साथै सिकर्मी, वज्रकर्मी जस्ता दक्ष कामदारदेखि भान्से र औषधी उपचार गर्ने डाक्टर समेत छन् !'

'सबैले एउटै किसिमको लुगा लगाएको देखिन्छ नि !'

'त्यही त यिनीहरूको विशेषता हो ! यिनीहरूले लगाउने गरेको लुगा युनिफर्म हो, जसलाई 'माओसुट' पनि भनिन्छ । भावनात्मक रूपले समान देखिने र देखाउन यो पोशाकलाई शासक वर्गदेखि किसानवर्गसम्म प्रख्यात गराइएको हो ।'

'यो त राम्रो कुरा हो नि !' पहिरनमा समानता भएकोमा म ताडीफ गर्छु ।

'समानता- देखाउने वस्तु होइन, गरिने व्यवहार हो ! म यिनीहरूको बानी बेहोराबाट यिनीहरू समान छन् भन्ने कुरा कहिल्यै मान्न तयार छैन । कारण, मास्कोमा पनि समानताको नारामा हुने असमान व्यवहारलाई मैले भोगेको छु ।'

कैलासमान सोभियत रूसबाट इन्जिनीयरिङ्को डिग्री लिएर आएका हुँदा र उनी आफै कम्युनिष्ट विचारका भएका हुँदा समानताको बारेमा उनलाई राम्रो ज्ञान छ । उनी

कम्युनिष्ट विचारबाट प्रभावित छन् नै, तर हाल यो विचार-प्रति कुन हदसम्म उनको अडान कायम छ, मैले बुझिसकेको छैन । आज दिनभरिको उनीसँगको उठ-बसबाट भने कम्युनिष्ट-प्रतिको उनको मोह भङ्ग भएको म अनुभव गरिरहेछु ।

चीनियाँ क्याम्पमा केही महीना अघि घटेको एउटा घटना- बारेमा मलाई भन्छन्– 'हेर ! एउटा डिग्री प्राप्त इन्जिनीयरलाई यो कमाण्डरले बाँधाको व्यवहार गरेको मेरै आँखाले देखेको छु । यिनीहरूको बानी कस्तो रहेछ भने, यिनीहरूलाई जुन कुरा मन पर्‍यो आँखा चिम्लेर त्यसको पछि लाग्ने र जुन कुरा मन परेन त्यसको जरै उखेलेर फाल्ने रहेछन् । लिफाँङ नाम गरेको त्यो इन्जिनीयरलाई यी कमाण्डरले यसरी पेले कि तिनले न एक क्षण हाँस्न सके न मन लागुन्जेल रुन नै सके, महीनौंको एकलोपनपछि बन्दीको रूपमा काठमाडौं हुँदै वेजिङ पुर्‍याइए । मलाई अहिले पनि सम्झना छ कमांडरको बारेमा उनले भनेको वाक्य यो गोठालो, मान्छे होइन, शैतान हो, त्यसैले योसँग न विवेक छ न बुद्धि, मान्छेसँग मान्छे जस्तो व्यवहार गर्नुपर्छ, पशु जस्तो होइन! - लिफाँङ अलि थिचिएर बस्न नसक्ने प्रकृतिको भएको हुँदा कमाण्डरसँग उनको कहिल्यै सम्झौता भएन ।'

कैलासमानले यस्तै चीनियाँ क्याम्पका अनेकानेक कुराहरू सुनाउँछन्, जो उनलाई मन परेको थिएन । मेरा लागि यी सबै नौला अनुभव भएको हुँदा मेरो चाख यसतर्फ वढेकै छ तापनि रात धेरै ढलिसकेको हुँदा दुवै हामी आराम गर्ने निर्णयमा पुग्छौं र कैलासमान आफ्नो कोठातर्फ लाग्छन् ।

भोलिपल्ट विहान मेरो कोठामा चिया आइपुग्छ र केही बेरपछि खगराज पस्छन् । उनलाई मेच देखाउँदै वस्नको लागि भन्छु । उनी अप्ठेरो मान्दै मेचमा टुसुक्क वस्छन् । उनको हिसावमा म कम्युनिष्ट प्रचारक देखिएँछु, कारण मेरो छातीमा माओको फोटो झुण्डिएको हिजो राम्ररी देखेका थिए । यो उनले विस्तारै कुरा शुरू गरेपछि मैले वुझें । फेरि मैले 'यही हो र यही हुँ' भन्न उनले मसँग केही सोधेका पनि छैनन् । बरु उनले विस्तारै मलाई सोधे– 'हिजोको फिल्म कस्तो लाग्यो ?'

'कुन दृष्टिकोणले तपाईंले सोध्नुभएको ? मनोरञ्जन वा अरू कुनै ?'- उनीसँग प्रश्न गरें ।

'मनोरञ्जनको साथै अरू दृष्टिकोणले पनि !'- उनको जिज्ञासा मेरो अगाडि तेर्सिन्छ ।

फिल्ममा कम्युनिष्ट सिद्धान्तभन्दा माओ विचारधाराको श्रेष्ठता र अपरिहार्य आवश्यकता-बारेमा दिएको छनक स्पष्ट देखिन्थ्यो भने नौलो जनवादको लागूपछि भएको प्रगतिबारेमा पनि देखाइएको थियो । त्यसैले त्यो फिल्म प्रदर्शनमा मनोरञ्जनभन्दा प्रचार बढी भएको अनुमान गर्न सकिन्थ्यो । त्यसैले मैले खगराजको दृष्टिकोण बुझ्न चाहें र उनीसँग नै मैले प्रश्न गरें – 'तपाईंलाई कस्तो लागेको छ? तपाईं त धेरै दिनदेखि यस्ता फिल्महरू हेर्दै हुनुहुन्छ !'

उनले पनि यही नै हो भनेर किटान-साथ भन्न सकेनन् । अलि अन्कनाएर उनले मलाई बताउने कोशिश गरे– 'यसबाट मैले चीन-सम्बन्धी ज्ञान हासिल गरेजस्तो लाग्छ ! साथै, चीनियाँ क्रान्तिको बारेमा पनि !'

'अनि अरू के बुझ्नुभयो ?' -- म पुनः प्रश्न गर्छु ।

'चीनियाँ लाल सेनाको बारेमा बुझें ! चीनियाँ साँस्कृतिक क्रान्तिका बारेमा बुझें ! अनि माओले उठाएको दुःख र कष्टको बारेमा बुझें र अब विकास भइरहेको चीनको बारेमा बुझ्दै छु !'- खगराज सरल ढङ्गले आफूले बुझेका कुरा मलाई बताउँछन् ।

चीनियाँ क्रान्ति र चीन- सम्बन्धी जो कुरा तपाईंले बुझ्नुभयो, के त्यो फिल्मको माध्यमद्वारा मात्र बुझ्नुभएको हो ?'

'हो ! मैले फिल्म र दोभाषे चीनियाँ मान्छेबाट पनि धेरै कुरा थाह पाएँ! मलाई त त्यही राजनीतिक व्यवस्था मन पर्‍यो ।'- यो भनेर उनी मसँग धेरै नजीकिए । उनले अनेकानेक प्रश्न गरे र मैले जानेका कुरा बताउँदै गएँ । उनले मसँग कम्युनिजम-बारेमा जानकारी प्राप्त गर्न केही प्रश्न गर्ने आग्रह गरे र मैले जानेको उत्तर दिने निश्चय गरें र भनें-- 'सोध्नुहोस् !'

'कम्युनिजम भनेको के हो ? - उनले उत्सुकतापूर्वक सोधे ।

'कार्लमार्क्सका अनुसार कम्युनिजम भनेको सर्वहाराको मुक्तिको सिद्धान्त हो !'- मैले जानेको कुरा जवाफ दिएँ ।

'अनि कस्तालाई सर्वहारा भनिन्छ ?'-- उनको जिज्ञासा बढ्छ ।

'सर्वहारा समाजको त्यो वर्ग हो, जो आफ्नो जीविकाको लागि आफ्नो श्रमशक्ति बिक्री गर्न बाध्य हुन्छ र आफ्नो श्रम-बिक्री बाहेक बाँच्नको लागि अरू कुनै साधन हुँदैन ।'

'सर्वहाराको उत्पत्ति कसरी भयो त ?'

'यूरोपको औद्योगिक क्रान्ति नै सर्वहाराको उत्पत्तिको स्रोत हो । जब मिल मजदूरहरूलाई मिल मालिकले गर्न थालेको शोषणले पराकाष्ठा नाघ्यो, मजदूरहरू आर्थिक रूपले जब शोषित भए, त्यही वर्ग सर्वहारा कहलियो ।'

'बुर्जुवा भन्नाले के बुझाउँछ ?'-- उनी साम्यवादमा प्रयोग हुने शब्दको व्याख्या खोज्छन् ।

'यसको मतलब आधुनिक पूँजीपतिवर्ग हो र अनुदार एवं परम्परावादी विचार राख्ने निम्न-पूँजीपति वर्ग पनि हो, जो सर्वहाराको श्रमको आधारमा बाँचेको हुन्छ ।'

'कार्लमार्क्सका बारेमा केही मलाई बताइदिनुहुन्छ कि ?'- उनी मबाट धेरै कुरा जान्न कोशिश गरिरहेका छन् । मैले पनि जानेको कुरा भन्नुमा कुनै आपत्ति मानिनँ र भन्दै गएँ ।

कार्लमार्क्स सन् १८१८ मा जर्मनीका मध्यमवर्गीय यहुदी परिवारमा जन्मेका हुन् र तेईस वर्षको उमेरमा भौतिकवाद विषयमा डाक्टरेट डिग्री प्राप्त गरेका थिए । त्यसपछि उनले पत्रकारिता जीवन शुरू गरे । त्यस बखत यूरोपेली देशहरूमा औद्योगिक कारणले गर्दा पूँजीवादको विकास एकतर्फ भइरहेको थियो भने श्रमिकवर्गको अवस्था दयनीय हुँदै गइरहेको थियो । उनी श्रमिकवर्गको पक्षमा समाचार संकलन र प्रचार गर्न थालेपछि उनीमा एउटा अभूतपूर्व विचारको उत्पत्ति भयो र जुन विचारलाई इङ्गल्याण्डका एक पूँजीपति फ्रेडरिक एञ्जेल्सले साथ दिए, यसैको फलस्वरूप सन् १८४८ मा 'कम्युनिष्ट पार्टीको

घोषणा पत्र प्रकाशित गरेर विश्व - जन - समुदायमा कम्युनिजमको परिचय दिलाए र यही नै मार्क्सवादको रूपमा बाँचिरहेको छ ।'

मेरो भनाइलाई उनले बडो गम्भीरतापूर्वक सुनिरहेका छन् । मेरो भनाइ रोकिन नपाउँदै उनी मलाई अर्को जिज्ञासा राख्छन् - 'लेनिनवाद- बारेमा केही बताइदिनुहुन्छ कि ?'

'सन् १९१७ को रूसी साम्यवादी क्रान्तिको सफलता लेनिनकै नेतृत्वमा भएको थियो । विश्वमा सर्वप्रथम कम्युनिष्ट पार्टीलाई सत्तामा पुऱ्याएर मार्क्सवादलाई विश्व- सामु सुपरिचित गराउन लेनिन नै समर्थ भएका थिए । लेनिनलाई आधुनिक साम्यवादी दर्शनका शिल्पकार भनिन्छ । रूसी साम्यवादी दल वोल्सेभिक पार्टीको प्रमुख नेताको रूपमा क्रान्ति-पूर्व र पश्चात् लेनिन-ले अपनाएको कार्यनीति र निभाएको भूमिका नै लेनिनवादको स्वरूप तयार भयो । लेनिनले आफ्नो ओजस्वी-पूर्ण व्यक्तित्व र दृढताको आडमा मार्क्सवादी धारणालाई केही मोडहरू दिए पनि मूल तत्त्वलाई नछोईकन परिमार्जन गरे । साम्यवादी दर्शनलाई राजनीतिक दिशा दिए । उनले पार्टीलाई कसरी संगठन गर्ने वा दलको कस्तो स्वरूप र संगठन हुनुपर्छ, कसरी नेतृत्व विकास गर्नुपर्छ आदि सैद्धान्तिक रूपमा व्याख्या र व्यावहारिक रूपमा प्रत्यक्ष कार्य गरेर देखाए । यही क्रान्ति गर्ने तरीका र उनले दिएका विचारधाराहरू नै लेनिनवाद हो !'

यसै-बीच कैलासमान कोठाभित्र पस्छन् । हामी दुवै मौन रहेर उनको आगमनको कारण जान्न चाहन्छौं । उनी दिउँसोको कार्यक्रम मिलाउन पसेका रहेछन् । उनले भने– 'म अहिले काममा जान्छु र लन्च टाइममा आइपुग्छु । खाना साथैमा खाउँला, तबसम्म तिमी दमौली बजार घुमेर आऊ ।'

उनको प्रस्तावलाई मैले स्वीकार गर्दै भनें --'कति ? बाह्र बजेसम्म आइपुग्छौ ? हुन्छ ! म यसो बजार घुमेर बाह्र बजे यहीं आइपुग्छु ।'

यही कार्यक्रम निश्चय गरेर कैलासमान जान्छन् । म पनि खगराजसँग दमौली बजार घुम्ने योजना मिलाउँछु । खगराजको पनि फुर्सद नै रहेछ, त्यसैले उनले मलाई साथ दिने भए ।

बिहानको कामबाट फुर्सद लिएर हामी दुई दमौली बजार घुम्न निस्कन्छौं । दमौली बजार नयाँ बस्ती हो । बन्दिपुरबाट जिल्लाको सदरमुकाम भरखरै यहाँ सरेको हुँदा बजारमा विशेष चहलपहल छ । गाउँका मान्छेहरू किनमेल गर्न टाढा-टाढाबाट आउने हुँदा बजार चलेको देखिन्छ । तर नयाँ बस्ती भएको र घरहरूको निर्माण र बाटोघाटोको पनि नवनिर्माण हुन लागेको हुँदा त्यत्ति व्यवस्थित देखिंदैन ।

खगराज मलाई भन्छन्- 'तपाईंले रामराजलाई चिन्नुहुन्छ ?'

'खै ! नाम त सुनेको जस्तो लाग्छ !' उनको प्रश्नको जवाफ दिंदै भनें ।

'तपाईंले पक्कै चिनेको हुनुपर्छ !'- खगराजको विश्वास म- माथि ओइरिन्छ ।

'हुन सक्छ !'- म यहाँभन्दा बढी भन्न चाहन्नँ ।

'जाने हो ? रामराज महीनौंदेखि यहीं आएर बसेका छन् ! तर उनी भूमिगत छन्, सरकारलाई र अरू कसैलाई पनि थाह छैन । केवल म र हाम्रो क्याम्प कमाण्डर जानरोन लीलाई मात्र थाह छ'-- उनी भन्दै जान्छन् ।

'हुन्छ ! भेटौं न !' - उनीसँग म सहमति प्रकट गर्दछु ।

उनी र म एउटा सानो घरको पहिलो तल्लामा पुग्छौं । कोठा बन्द अवस्थामा छ । खगराजले आफ्नो नाम लिएपछि कोठा खुल्छ । कोठाको मान्छेले हामीलाई भित्र आउन इशारा गर्दै आफू कोठाकै एक कुनामा रहेको एउटा सानो बिछ्यौनामा बस्न पुग्छन् । हाम्रो औपचारिक चिना जानी हुन्छ । उनी रामराज रहेछन् । कम्युनिष्ट सिद्धान्तका अनुयायी र अझ बढी माओ विचार धाराको प्रचारक रहेछन् । नेपालमा नौलो जनवादी व्यवस्था शुरू गर्ने योजनाका अगुवा रहेछन् । हाम्रो कुरा शुरू हुन्छ । खगराजले मलाई पनि साम्यवादी विचारको भनेर परिचय गराएपछि रामराज मलाई नौलो जनवादको पक्षमा आउन जोड गर्छन् ।

कोठामा सानो माओको फोटो झुण्डिएको छ । चीन - सम्वन्धी अंग्रेजी, हिन्दी र नेपालीका पुस्तकहरू पनि धेरै छन् । हिन्दीको 'चीन सचित्र' को त ठेली नै छ । कोठाको वातावरणले सोझै अनुमान गर्न सकिन्छ कि चीन पक्षबाट यिनलाई ठूलो सहयोग प्राप्त भएको छ । खगराज मलाई सोद्धछन्- 'तपाईं कसको नेतृत्वमा साम्यवादी प्रचारमा लाग्नुभएको छ ?'

'त्यसो त मेरो कोही नेता छैन ! म मेरो स्वयम्को नेता हुँ ।' – मैले भनें ।

'यहाँले ठीकै भन्नुभयो ! हामी कम्युनिष्टहरूमा लगन र कार्य आकर्षण स्वस्फुरित हुन्छ ! यो हुनुको कारण आफूले देखे - भोगेको असमानता र शोषण-विरुद्धको विद्रोह हो ! यही मुक्तिको लागि कार्यरत रहँदा कम्युनिष्ट भइने हो !'-- मीठो भाषामा रामराजले मेरो भनाइलाई समर्थन जनाउँछन् ।

म क्याम्पमा बसेको कुरा चाल पाएपछि चीनियाँ क्याम्प कमाण्डरसँग भेट भए-नभएको कुरा पनि उनले मसँग सोद्धछन् । हिजो साँझ भेट भएको र उनको व्यवहार राम्रो लागेको कुरा पनि म उनलाई बताउँछु । रामराजले मलाई बीचैमा प्रश्न गर्छन्- 'अनि के तपाईंले केही राजनीतिक कुरा पनि गर्नुभयो ?'

'अहँ ! केही भएन !' - मैले उत्तर दिएँ ।

'फेरि पछि भेट गर्ने कार्यक्रम तय भएको छ कि ?' उनले पुनः प्रश्न गरे ।

'छैन !' – भन्दै मैले सोचें, यिनले किन कोट्याई कोट्याई सोधिरहेका छन् । यही शंकाको आडमा म उनलाई भन्छु– 'शायद, आज साँझ भेट्ने कार्यक्रम मिल्ला कि !'

अब उनी शंकारहित भएर भन्छन्– 'यी कमाण्डर राजनीतिक नेता हुन् र यिनको सहयोगको आवश्यकता तपाईं महसूस गर्नुहुन्छ भने भेट्नुहोस्, राम्रै हुन्छ ।'

'यी बाटो बनाउन आएका चीनियाँ टोलीका कमाण्डर के प्राविधिक होइनन् ?'- मेरो अबोधता रामराजको अगाडि पेश हुन पुग्छ ।

मेरो कुरा सुन्नेबित्तिकै उनी सतर्क हुन्छन् र मसँग झस्कन्छन् । साथै, मेरो प्रश्नको उत्तर दिने पनि आँट गर्न सकिरहेका छैनन् । यसै बीचमा खगराजले मौनता भंग गर्दै भन्छन्– 'अहिले कार्यरत कुनै पनि चीनियाँ टोलीको नेता अप्राविधिक नै हुने गरेका छन् । दोस्रो नेता मात्र प्राविधिक र सम्बन्धित कार्यको जानकार हुने गर्छ ।'

रामराजले कुराकानीको सन्दर्भ नै मोडेर अर्कोतर्फ लान खोज्छन् । तर खगराजको विश्वासले मलाई रामराजसँग निकटता कायम गर्न कोशिश गरिरहेको द्वन्द्वको बिन्दुमा म आफूलाई अनुकूल बनाउने प्रयास गर्न थाल्छु र भन्छु– 'यहाँ चीनियाँहरूको काम गराइ र काम- प्रतिको लगन देखेर चीनमा कस्तो विकास भएको होला भनेर अनुमान गर्न सजिलो भएको छ ! यो सबै माओको नौलो जनवादको परिणति हो ।'

'ठीक भन्नुभयो !'– लामो सास लिएर रामराजले मेरो भनाइमा समर्थन जनाउँछन् ।

'चीनियाँ मान्छेहरू हिड्दा सँगै, खाँदा बस्दा सँगै ! कति रमाइलो ! कस्तो एकता देखिएको ! कस्तो एउटै देखिएको !' म आश्चर्य प्रकट गर्दै भन्छु ।

'यही त नौलो जनवादको उपज हो ! नयाँ चीनको परिचय हो ! जुन हाम्रो देशमा पनि भित्र्याउन हामी सम्पूर्ण कम्युनिष्ट विचार अनुयायी लालायित छौं !'- रामराज अन्तःकरण खोलेर मेरो अंगाडि राखिदिन्छन् ।

'मान्छे-प्रति पशुसमान व्यवहार र स्वार्थपूर्तिको लागि गरिने अत्याचार कसरी भएको छ ? त्यो मैले बुझेको छु । त्यसको अन्त्य हुनुपर्छ मानव समाजमा र हाम्रो समाजमा पनि ! कम्युनिष्टको सिद्धान्तको बारेमा धेरै कुरा त मलाई थाह छैन, तर समानता नै मुख्य हो भन्ने मलाई लागेको छ, सुनेको छु र बुझेको छु । यही समानताको आवश्यकता छ यहाँ ।'- खगराज आफू-भित्रको अनुभव पोख्छन् ।

म सुनिरहेछु । रामराज फेरि दोहऱ्याउँछन्– 'पूँजीपतिवर्गका अधिनायक तन्त्रको मातहतमा निर्मित स्वार्थी एवं निरंकुश समाजको उन्मूलन गर्नु र पूँजीपतिवर्गले लिएको बाटोलाई फेर-बदल गरी नयाँ जनवादी व्यवस्थाको थालनी गर्नु आजको आवश्यकता प्रमाणित भएको छ । यही आवश्यकताको लागि आम-सहभागिता जुटाउन हामी कार्यरत छौं । हामी सफलताको बिन्दु-छेउबाट गुज्रिरहेका छौं । हामी आशावादी छौं !'

'निःस्वार्थ इच्छा फलीभूत हुन्छ'- म आफ्नो विचार व्यक्त गर्छु ।

'स्वार्थ सामूहिक र राष्ट्रिय हुनुलाई निःस्वार्थ नै भनिन्छ'– उनी सतर्कता जनाउँछन् ।

'हो !' भन्न नपाउँदै खगराज भन्छन्– 'नेताहरूले गर्ने हरेक कार्य सामूहिक हुने हुँदा ती काम - कार्यवाहीलाई स्वार्थवश भएको भन्न मिल्दैन ।'

म दुवैको भनाइलाई आफ्नो प्रतिक्रिया जनाउँदिनँ र सहमति पनि ! म उनीहरूका तर्क सुन्दै जान्छु । दुवैको अनुहारलाई नियाल्दै म अनभिज्ञ रूपमा उनीहरूको सामु प्रस्तुत भइरहेछु ।

रामराजले एकाएक राज्य-व्यवस्था-सम्बन्धी आफ्नो विचार व्यक्त गर्दै भन्छन्- 'आधुनिक राज्यहरूको तथाकथित जनवादी व्यवस्थामा पूँजीपतिवर्गको अस्तित्व मेटिएको

देखिए पनि त्यही वर्गको प्रभुत्व जमिरहेको देखिन्छ । सर्वसाधारणमा राहतको बदला उही उत्पीडन र असन्तोष व्याप्त रहन्छ । त्यसैले आमूल परिवर्तनको खाँचो वा आवश्यकता छ ।

बीचैमा च्वाट्ट खगराज बोल्छन्- 'माओको विचारको आधारमा निर्माण हुन लागेको रमाइलो र स्वर्गीय आनन्दले भरिपूर्ण समाजको स्थापना भएमा हाम्रो समाजका हरेक सदस्य कत्ति रमाउने थिए होलान् ?'

फेरि खगराजको अनुभवभन्दा अनुमान बोल्छ-- 'चीनियाँ साँस्कृतिक क्रान्तिले मान्छे-मान्छेलाई समानताको विन्दुमा जुटेर एउटा नौलो सम्बन्ध स्थापना गर्न समर्थ भएको छ । यो साँस्कृतिक क्रान्ति माओको मस्तिष्कको उपज भए पनि आज सम्पूर्ण चीनमा भएको प्रभावकारी कार्यान्वयन, हाम्रो देशको लागि स्वागतयोग्य र अनुकरणीय सावित हुन थालेको छ ।'

'ठीक भन्नुभयो !'- रामराज समर्थन जनाउँछन् ।

'मेरो मौनताले खगराजको भनाइलाई समर्थन जनाएको देखेपछि उनी आफ्नो विचारलाई पुष्टि दिन भन्छन्-- 'हाम्रो गाउँघरको गरीवी कुन स्तरमा गुज्रिरहेछ तपाईं हामी सबैले देखेकै छौं । आज रूढिवादी र कट्टरपन्थीहरूको बोलबाला छ हाम्रो समाजमा । यसको अन्त नभएसम्म समानताको खोजी गर्नु आकाशे खेती गर्नु मात्र हो ।'

'त्यसैले त भनेको !'- बीचैमा कुरा काट्दै रामराज भन्छन्-- 'आजको व्यवस्थित समाज रचना नै किसान र मजदूरको शोषणको मूल कारण हो ! समाजमा रहेको पूँजीपतिवर्गको अधिनायक तन्त्रको समाप्ति र सर्वहारावर्गको उत्थान नभएसम्म हामी कम्युनिष्ट संघर्षको बाटो छोड्नेछैनौं । सामन्तीहरूको छातीको रगत नै हामी कम्युनिष्टको असल पेय पदार्थ हो भन्ने साबित गराउनुपरेको छ ।'

रामराज अत्यन्तै जोस्सिदै मलाई सम्बोधन गर्दै भन्छन्- 'हरेक सत्ता परिवर्तन बन्दूकको मोहरीमा अडेको हुन्छ । त्यसैले अधिकार मागेर होइन खोसेर लिन सक्नुपर्छ । यो हामी कम्युनिष्टले कहिल्यै भुल्न नहुने सूत्र हो ।'

रामराजको यो जोशपूर्ण भनाइले हामी दुवैको शरीरमा उमङ्ग आउँछ र नयाँ जोश भरिन्छ । हामी दुवै उनको निर्भीक अनुहार हेरिरहेका छौं । हामी उनीसँग केही बोल्न र केही सोध्न सकिरहेका छैनौं । उनी साम्यवादका बारेमा मलाई भन्दै गए, मैले उनको भनाइलाई नकार्न कोशिश पनि गरिनँ बरु होमा हो मिलाउँदै उनका धेरै धेरै विचारहरू सुन्दै गएँ । रामराजको कोठामा बसेको दुई घण्टा बितिसक्दा पनि हामी दुवैलाई पट्यार लागेको छैन ।

धेरै बेर भएको हुँदा फेरि भोलि आउने समय लिंदै हामी रामराजको कोठाबाट निस्कन्छौं । हामी बजारको बाटो हुँदै क्याम्पतर्फ लाग्छौं ।

'तपाईंलाई रामराजजी कस्तो लाग्यो ?'- खगराज मलाई हिड्दाहिंड्दै प्रश्न गर्छन् ।

मैले आफूले जे बुझें र अनुभव गरें त्यही उनलाई सुनाउँदै भनें- 'रामराजजी एक जना सच्चा कम्युनिष्ट हुन्, त्यसमा पनि माओ विचारधाराको अनुयायी रहेछन् र उनीसँग नेतृत्व लिन सक्ने गुण प्रचुर मात्रामा भएको मैले अनुभव गरें । उनी साँच्चि नै नेता हुन लायक रहेछन् । म उनीसँग प्रभावित भएँ ।'

'साँच्चि नै !'- मेरो कुरा सुनेर खगराज रमाए र भने- 'म उहाँकै नेतृत्वमा काम गर्छु !'

'ठीक छ ! गर्दै जानुहोस् !'- म-प्रतिको उनको विश्वासलाई मैले सम्मान गरें ।

खगराजले रामराजको बारेमा मलाई बताउँदै गए, मैले सुन्दै गएँ । हामी दुई यस्तै गफ गर्दै गर्दै क्याम्पमा पुग्छौं । कैलासमान समेत अरू साथीहरू पनि हामीलाई दिनको खानाको लागि कुरेर बसेका रहेछन् ।

क्याम्पमा म पुगेपछि खानाको तयारी भयो र हामी सबैले एकैपटक दिनको खाना खायौं । कैलासमान मेरो विहानको घुमाइको बारेमा सोध्दछन् । म उनलाई बजार घुमेको र घुम्दासम्म उनैको कारिन्दा खगराजले साथ दिएको कुरा बताउँछु । मलाई साथ दिएकोमा कैलासमान खगराजलाई 'धन्यवाद' व्यक्त गर्छन् ।

हामी यस्तै रमाइलो वातावरणमा खानापिना खाई पोखराको लागि तयारीमा हुन्छौं । कैलासमानले मलाई त्यही राजमार्ग-योजनाको जीपमा पोखरासम्म पुग्र्याउने व्यवस्था गर्छन् । कैलासमान समेत म पोखराको लागि त्यहाँबाट निस्कन्छौं ।

=★=

# - ४ -

चीनको गुवाङ्चाउमा वर्षमा दुईपटक व्यापारमेला सञ्चालन गरिन्छ । त्यस मेलामा चीनमा उत्पादित वस्तुहरूको प्रदर्शन गर्ने र देशभित्र-बाहिरका सामान खरीद गर्ने खरीददारहरूलाई सामान बेच्नु त्यस मेलाको मुख्य उद्देश्य हो । यो मेलामा विश्वका सबैजसो राष्ट्र खास गरी चीनका मित्र राष्ट्रहरूका खरीददारहरू भाग लिने गर्दछन् । शुरू-शुरूमा हाम्रो देशबाट सरकारी स्तरका व्यापारी निगमले मात्र भाग लिन्थे भने अहिले आएर निजी क्षेत्रका व्यापारीहरूले पनि भाग लिन थालेका छन् ।

यो उन्नाईस सय. असीको दशक हो । गुवाङ्चाउमा संचालन हुने व्यापार मेलामा भाग लिन मलाई पनि निमन्त्रणा आएको हुँदा चीन जाने भिसा मैले पनि प्राप्त गरें । त्यस व्यापार-मेलामा भाग लिन जाने नेपालीहरूमध्ये एक जना मेरो मित्र गगनप्रसादसँग म जाने निर्णय गरें । गगनप्रसाद र मैले चीन जाने कार्यक्रम निश्चय गर्‍यौं ।

चीन जाने निश्चय भएपछि म विशेष खुशी भएको छु । त्यो बन्द देशको दर्शन गर्ने मेरो ठूलो धोको थियो, जो अहिले पूरा हुन लागेको छ । गगनप्रसाद र म, हामी दुवै मेलामा भाग लिन जाने तयारीको लागि केही दिनदेखि व्यस्त छौं । केही दिनको व्यस्ततापछि हामीलाई आवश्यक पासपोर्ट, भिसा , टिकट र विदेशी मुद्रा आदि जुटाउन समर्थ भएका छौं । हामी कार्यक्रम अनुसार काठमाडौं- हङ्कङ प्लेनमा र हङ्कङ गुवाङ्चाउ ट्रेनद्वारा जानेछौं ।

पहिलो चीन-यात्रा भएको हुँदा चीन गएर आउनेहरूले मलाई अनेकानेक कुराहरू सिकाए-यस्तो भयो भने यो गर्नु ! यो भयो भने यस्तो गर्नु ! आदि आदि, जति म अरूको कुरा सुन्छु, मनमा आतेस लाग्छ । त्यसैले अरूको कुरा नसुन्ने र जे परिआउँछ बेहोर्ने निश्चय गर्छु ।

हामी निश्चित कार्यक्रम अनुसार काठमाडौंबाट हङ्कङ प्लेनद्वारा पुग्यौं । भोलिपल्ट बिहान आठ बजेको ट्रेनको टिकट भएको हुँदा सबैरै होटलबाट निस्कनुपर्ने भएकोले साँझ यताउता कतै गएनौं ।

बिहान आठ वजेको रेल छुट्ने समय भएको हुँदा सात बजे नै कोलुन स्टेशन पुग्ने तरखरमा लाग्यौं र समयमै रेलस्टेशनमा पुग्यौं । नभन्दै रेल ठीक आठ वजे नै छुट्यो, सेकेण्डको पनि फरक नगरेर । यो रेल चीन सरकारको रहेछ । हङ्कङ्मा बसेपछि एकै पटक तीन घण्टामा गुवाङ्चाउ पुग्राउने एक्सप्रेस रेल अत्यन्तै सुन्दर र आरामदायी टु वाइ टु को कुर्सी र एक छेउबाट अर्को छेउसम्म जान सकिने व्यवस्था र भित्रै खाना-पिना, खान मिल्ने रेष्टुराँ समेत भएको रहेछ ।

कोलुन स्टेशनबाट छुटेको रेल मोङ्कक, कोलुङ्टन हुँदै तीन किलोमिटर लामो सुरुङबाट पार गरिसकेपछि पनि हङ्कङ्को न्यूटेरिटरीका शहरहरू हुँदै लोउ पुग्छ । लोउ स्टेशन हङ्कङ्को अन्तिम स्टेशन हो, त्यहीं चीनको सीमा छ । सीमा पार गर्नेबित्तिकै सेन्जन शहर आउँछ ।

मलाई सम्झना छ, केही वर्ष-अघि यही सेन्जन शहरलाई मैले हङ्कङ्को एउटा छेउबाट दूरविनले हेरेको थिएँ । आज म प्रत्यक्ष दर्शन पाइरहेछु रेलबाट । म त्यही कुरा गगनलाई दोहऱ्याउँछु र शहर राम्ररी हेर्ने भन्छु । शहरी क्षेत्र भएको हुँदा रेल ज्यादै मन्द गतिमा हिंडिरहेको छ । हामी दुवै शहरका होचा र लाम्चा घरहरू र सफा-सुन्दर सडकहरू हेर्न व्यस्त छौं । अनायास गगन बोल्छन्- 'हेर ! यो शहर त हङ्कङभन्दा राम्रो जस्तो छ !'

म उनको भनाइलाई समर्थन जनाउँदै भन्छु -- 'त्यहाँ र यहाँको वातावरण फरक छ । साथै, यो शहर निर्माणाधीन छ । यो शहरलाई दाँज्न अझै केही समय पर्खनुपर्छ ।'

'अझ बन्दै छ !'- उनी आश्चर्य प्रकट गर्छन् ।

'उः हेर न ! सबैतर्फ त बन्दै छन् !'- औंल्याउँदै निर्माण भइरहेको स्थल उनलाई देखाउँछु र भन्छु- 'यो चीनको स्वतन्त्र आर्थिक क्षेत्र घोषित एरिया हो !'

करीब पन्ध्र मिनेटपछि शहर समाप्त हुन्छ ! गाउँहरू शुरू हुन्छन् । के गाउँ भन्ने ? सबै साना-साना शहर जस्तै देखिने, गाउँका वरपरका खेतबारी, साग-सब्जी र अन्न-खेतीले टम्म भरिएको देखिन्छ । यी हरिया फाँटहरूमा प्रायः किसानहरू पनि काम गरिरहेका देख्छौं, गगन मलाई प्रश्न गर्दै जान्छन् । मैले बुझेसम्म र अनुमान गरेर भए पनि उनलाई बताउँदै जान्छु । उनले चीनमा प्रगति भएको सुनेका मात्र थिए, देख्न पाएकोमा जान्न र बुझ्न उत्सुकता छ नि । हाम्रो अनुहार मिल्ने यात्रुहरू हामी देख्दैनौं । कुनै यात्रुले कसैलाई नियालेको वा हेरेको पनि देखिंदैन । सबै आ-आफूमा मस्त र व्यस्त देखिन्छन् ।

बेला-बेलामा चीनियाँ युवतीहरूले ट्रलीमा केही माल बेच्न ल्याउँछन् । सामानको स्वाद हामीसँग नमिल्ने हुँदा त्यसतर्फ ध्यान पनि दिंदैनौं । खानेकुराहरू पनि ल्याएको देखिन्छ ।

करीब तीन घण्टाको दौडाइपछि हामी गुवाङ्चाउ आइपुग्छौं । रेलबाट उत्रिएर इमिग्रेशन र कस्टम पार गर्दै स्टेशन-बाहिर निस्कन्छौं । दर्जनौं होटलका प्रतिनिधिकार्यालय स-सानो स्टल बनाएर क्रमबद्ध बसेका रहेछन् । सस्तो-महँगो सबै किसिमको होटेल देखिए ।

हामीले निर्णय गर्‍यौं व्यापार मेला स्थलको नजीक जुन होटेल छ, त्यसैमा बस्ने निर्णय गरेर होटेल डङफङमा बस्ने निर्णय गर्‍यौं ।

प्रतिदिन एक कोठालाई करीब यु०एस० डलर दुई सय तिर्नुपर्ने होटेल हामीलाई केही महँगो लाग्यो, हामीसँग अर्को विकल्प पनि त थिएन, फेरि होटेलका चार्जहरू लगभग उस्तै नै भएको हुँदा हामीले अनिवार्य रूपमा स्वीकार्नुपर्‍यो । जब हामी होटेल पुग्यौं र होटेलका बारेमा विस्तृत जानकारी लियौं र सामान काउन्टरमा राखेर होटेलका केही भाग घुमेपछि हमीले थाहा पायौं-यो होटेल मात्र नभएर स-सानो शहर रहेछ । जहाँ सबै किसिमका आवश्यकीय सरकारी सम्पर्क कार्यालयहरू, व्यापारिक नियोगका प्रतिनिधि कार्यालय, सबै किसिमका सामान पाउने बजार, बैंक, हुलाक समेत आधुनिक सहुलियत प्राप्त संचार माध्यम, विभिन्न परिकार पाइने दशवटा रेष्टुराँ, मनोरञ्जन स्थल, खेल खेल्ने कभर्ड हलदेखि स्विमिङ पुल र चीनियाँ संस्कृति झल्कने सुन्दर बगैंचाहरू व्यवस्थित रहेछन् ।

हामी कोठामा गएर सामान राख्छौं र व्यापारमेलाको लागि आफ्नो नाम दर्ता गर्न त्यही होटेलको एउटा हॉलमा पुग्छौं । त्यहाँ विभिन्न देशका भाषा बोल्ने चीनियाँ युवक युवतीहरू आफ्नो टेबुलमा कार्यव्यस्त देखिन्छन् । कुन टेवुलले कुन भाषा बोल्ने हो त्यो टेबुलमा लेखिएको छ । हामी अंग्रेजी भाषाको बोर्ड टाँङिएको टेबुलमा पुग्छौं र आफ्नो पालोको प्रतीक्षामा छेउमै उभियौं ।

नाम दर्ता गर्‍यौं, मेलाको लागि प्रवेश- पत्र प्राप्त गर्‍यौं । साथीको आग्रह- अनुसार दोभाषे पनि बन्दोबस्त गरियो दुई दिनको लागि । दोभाषेको लागि शुल्क पनि त्यहीं अर्को कोठामा बुझायौं र दिउँसो तीन बजेपछि मेला घुम्न जाने कार्यक्रम निश्चय गर्‍यौं ।

'हेलो ! म तपाईंहरूको दोभाषे हुँ'- एउटी युवती अंग्रेजीमा बोल्दै हामीतर्फ हात मेलाउन आइपुग्छिन् । हामी यतिखेर मेलाको लागि तयार भएर होटेलको लविमा यताउता गरेर दोभाषेलाई कसरी भेट्ने ? भनेर सोचिरहेका थियौं ।

'ए तपाईं नै हो !'- भन्दै मेलामा अहिलै जाने र काम शुरू गर्नुपर्ने कुरा बताउँछु । उनी पनि तयारी नै भएकी हुँदा हामी तीनै जना मेलाको लागि प्रस्थान गर्छौं ।

मेला-स्थल नजीकै भएको हुँदा कुरा गर्दै बिस्तारै मेला- स्थलमा पुग्छौं । मेलाभित्र ती दोभाषेलाई जान दिएन । हामीलाई साँझ ६ बजे लिन आउने भन्दै उनी फर्किन्, हामी मेलाहॉलभित्र पस्यौं ।

मेला बाह्रवटा हॉलमा फिजिएको रहेछ र प्रत्येक हॉलमा चार तल्ला भएको हुँदा कोठा जेलिएको - मेलाभित्रको नक्शा बुझ्न नै समय लाग्यो। चीनमा उत्पादन भएका निर्यातयोग्य-वस्तुहरूको प्रदर्शन र बिक्री गरिने भएकोले भीड हुनु स्वाभाविक हो ।

भाषाको समस्याले गर्दा अंग्रेजी बोल्ने मान्छे फेला परे पनि कमसे कम दुई तीनपटक नदोहोर्‍याई एकले अर्काको उच्चारण बुझ्न गाह्रो भएको छ । यही समस्या आउला भनेर गगनले दोभाषेको बन्दोबस्त गरेका थिए । उनी भन्छन्- 'दोभाषेलाई हामीले दुइ दिनको दुइ सय एफ०इ०सी० तिरेका छौं । तर काममा भने लिन पाइएन ! के भएको यो ?'

साँच्चिकै हाम्रो अगाडि समस्या छ । सबै आ-आफ्नो कामना व्यस्त व्यक्तिलाई के सोध्ने र उनीहरूले हामीलाई के जवाफ दिने ! हामी अलमलमा परेर बसेका छौं ।

'के गर्ने, नयाँ ठाउँमा यस्तैं हुन्छ !'- म उनलाई सम्झाउने कोशिश गर्छु । नक्शा बुझेर होइन, नबुझेर पनि मेला घुम्न थालौं भन्ने निश्चय गरेर हामी दुवै उद्देश्यहीन मेला घुम्न शुरू गर्छौं ।

गगन अप्ठेरो मान्दै भन्छन्- 'कता जाने पहिले त्यो निश्चय गरौं न!'

'आज यसै सरसर्ती- घुमौं ! भोलि काम गरौंला !' - मैले उनलाई सम्झाएँ ।

'होइन ! हामीसँग आज र भोलि बाहेक समय छैन ! अलमलिएर के गर्ने ?'- उनी चिन्ता व्यक्त गर्छन् । वास्तवमा उनी दक्ष व्यापारी भएको हुँदा उनी हतारिएका छन् ।

'ओह ! कति राम्रो पंखा ! साँच्चै नै चीनियाँ सामान राम्रो छ ! कसो ?'- म उनलाई स्टलतर्फ औंल्याउँदै उनको राय बुझ्न खोज्छु ।

'यहाँ हेर त ! टेलिफोन सेट, अनि टेलिभिजन ?'- उनी आफूतर्फ मेरो ध्यान आकर्षण गर्न चाहन्छन् । हामी दुवैको खोजी आ-आफ्नो किसिमको छ ।

म सामान हेर्दै धेरै टाढा पुगिसकेछु । गगन त्यतै अलमलिएका छन् । समय -समयमा हामी जुट्ने गरे पनि जब प्रदर्शित सामानले हाम्रो मन खिच्छ तब हामी एक अर्कासँग टाढा हुन थाल्छौं । यस्तै हुँदाहुँदै हामी ठूलो चोकमा पुग्छौं जहाँ मोटर, मोटर साइकल, ट्र्याक्टर, पावरटिलर र निर्माण सम्बन्धी हेविइक्विवमेन्टस्हरू राखिएका छन् ।

यो चोकको खुल्ला वातावरणमा रहेको सबै अटोमोवाइलका मिशीनहरू एक एक नियालेर हेर्छौं । गगनलाई पावरटिलर मन पर्छ र भन्छन्- 'हाम्रो देशको लागि यो सानो ट्र्याक्टर राम्रो हुन्छ !'

'ठीक भन्यौ !'- म सही थाप्छु ।

गगनले स्टलमा गएर कुराकानी गर्ने र मूल्य निर्धारण गर्ने राय व्यक्त गर्छन् । म उनलाई पन्ध्र मिनेटपछि त्यहीं भेट्ने निश्चय गरी अर्को स्टलमा जान्छु । म नयाँ वस्तुहरू हेर्दै गएँ, तर फर्कन सकिनँ' अल्मलिएँ । पछि गगनलाई छोडेको स्टलमा पुग्दा त उनलाई भेट्न सकिनँ । अब गगन कुन बाटो निस्किए, थाहा हुन सकेन । नक्शा हेर्छु पाँचओटा ढोका रहेछ । हामी पसेको एक नम्बरको भएको हुँदा त्यहीं जाने निश्चय गरें । ६ बजिसकेकोले मेला छुट्न थालेको छ । त्यही भीडमा म पनि बाहिर निस्किएँ । तर त्यो तीन नम्बरको ढोका रहेछ । फेरि भित्र पसेर एक नम्बरको ढोकाबाट निस्किँदा त गगन र दोभाषे सँगै रहेछन् । हामी तीनै जना होटेलमा पुग्यौं । होटेलको लविमा बसेर केही क्षण कुरा गरेर भोलि बिहान भेट्ने निश्चय गर्दै हामी आफ्नो कोठाभित्र लाग्यौं ।

'रेष्टुराँमा खाना आठ बजेभित्र खाइसक्नुपर्ने रहेछ !'- कोठामा आएर होटेलको नियम पढेर गगन भन्छन्- 'बिहान सातदेखि नौसम्म ब्रेकफास्ट तीनवटा रेष्टुराँमा पाइने रहेछ । दिउँसोको लन्च बाह्रदेखि दुइसम्म चारओटा रेष्टुराँमा ! कुरा बुझ्यौं । अब अलमलिने काम नगर !'

'हुन्छ, अव तयारी हौं !'

यु०एस० को रेट के पायौ ?- गगन यु०एस० र स्थानीय मुद्राको अन्तर जान्न चाहन्छन् ।

'एक यु०एस्० को तीन सय पचास एफ०इ० सी० दियो'- विहान मुद्रा साट्दा पाएको भाउ बताएँ ।

'एफ० इ० सी० भनेको फरेन एक्सचेन्ज सर्टिफिकेट् रहेछ । यही हो त यहाँको स्थानीय मुद्रा !'

होइन ! यो त विदेशीको लागि मात्र हो । यहाँको मुद्राको नाउँ त 'रेमिवी' हो ! तर रुपियाँलाई 'युआन' भन्छन् ।

'किन यस्तो द्वैत मुद्रा प्रचलनमा आएको त ?'

'यो चीनियाँ नियम हो !'

हामी दुवै खाना खान कोठावाट वाहिर निस्कन्छौं ।

साँझ झमक्क परिसकेको कुरा हामी एउटा बगैंचामा निस्केपछि मात्र हामीलाई थाह हुन्छ । रातको समयमा विभिन्न बत्ती र पानीको हिंडाइमा जोल्ठिएर मधुर ध्वनिमा निस्किरहेको संगीतले एकतर्फ नौलोपनको परिचय दिइरहेको छ भने अर्कोतर्फ पानीको फोहरामा मिस्सिएर रंगीन वातावरण फिंजाइरहेको छ । हरेक कोणमा पृथक् अस्तित्व भरिएर कुनैभन्दा कुनै कम नभएको आभास दिन समर्थ बगैचाका हरेक टुक्राले हामीलाई अल्मल्याउँदै रहेको छ ।

'क्या स्वर्गीय वातावरण !'- अचानक गगनको ओठबाट फुस्किन्छ ।

'वास्तवमा ! साह्रै रमणीय रहेछ'- उनको भनाइलाई पुष्टि दिन्छु ।

'कति समय ? कति मिहिनेत र कति खर्च लाग्यो होला यो बनाउनलाई ?' गगन आफ्नो व्यापारिक हिसाब लगाउँछन् ।

'दिमाग लगाउनेको पो तारीफ !'

यस्तो यस्तै बगैचाको कुरा गरेर हामी घण्टौं त्यहाँ अल्मलिन्छौं र बगैचा नजीकैको रेष्टुराँमा पस्छौं ।हामीलाई त्यहाँ भाषाको समस्या हुन्छ । धेरै बेर कुरेपछि एक जना अंग्रेजी जान्ने मान्छे आइपुग्छन् र हाम्रो भनाइ-अनुसारको खाना मगाइदिन्छन् । हामी आफ्नो स्वादले खान नपाए पनि खानुपर्ने हुँदा खान्छौं । मगाएको खाना त्यत्तिकै छोड्नुपर्दा गगन भन्छन्- 'त्यसैले दोभाषे चाहिएको हो ! भोलि त दोभाषेसँग खानुपर्छ है !'

हामी साँझको खाना सकेर कोठामा जान्छौं र आराम गर्छौं ।

भोलिपल्ट ठीक समयमा उठेर ब्रेकफाष्ट गर्न रेष्टुराँमा जान्छौं र मेलामा जान तयार भएर नौबजे होटेलको लविमा पुग्छौं, जहाँ हाम्रो शुल्क तिरेको दोभाषेलाई भेट्छौं ।

'हिजो हामीलाई धेरै समस्या पर्‍यो भाषाको कारणले ! तपाईं हुनुभएको भए वेस हुने थियो !' दोभाषेलाई सम्वोधन गर्दै गगन भन्छन् ।

'मलाई भन्नुभएको भए सात साढे सातसम्म त म वसिहाल्थें ! के भयो र त्यस्तो ?'- उनी जान्न चाहन्छिन् ।

गगन विस्तारपूर्वक व्याख्या गर्छन् । साँझ खाना छोड्नुपरेको र आफू भोकै रहेको बेहोरा समेत सम्झाएर बुझाउँछन् । म पनि उनलाई भाषाको कारणले बिहोर्नुपर्ने समस्या-बारेमा जानकारी दिलाउँछु । उनी आफूले भ्याएसम्म हाम्रो मद्दत गर्ने कुरा दोहर्‍याई तेहर्‍याई हामीलाई विश्वास दिलाउन चाहन्छिन् । यो हाम्रो औपचारिक कुराकानी भइरहेछ ।

हामीलाई मेलामा जान हतार भएको हुँदा हामी तीनै जना त्यहाँबाट मेलाको लागि प्रस्थान गर्छौं । बाटोमा हामी आपसमा कुराकानी गरिरहेका छौं । हाम्रो चीन-यात्रा पहिलो भएको र यात्रामा आफू त्यत्ति सन्तुष्टि नरहेको कुरा गगन ती दोभाषेलाई बताउँछन् ।

'किन तपाईं शंकाको दृष्टिले हेर्नुहुन्छ ?'- दोभाषेले गगनसँग प्रश्न गर्छिन् ।

'होइन ! यो मेरो शंका होइन, मेरो समस्या हो ! तपाईं बुझ्ने कोशिश गर्नुहोस्, म एउटा यात्री हुँ र तपाईंको पाहुना हुँ, मतलब तपाईंको देशको पाहुना हुँ ! हरपल, हरक्षण तपाईंको मद्दत पाइनँ भने म केही गर्न सक्दिनँ ! अब कुरा बुझ्नुभो ?'- गगन आफूले हिजो पाएको दुःख - बारेमा दोभाषेलाई सम्झाउँछन् ।

'म सम्झन सक्छु तपाईंहरूको समस्या ! जब तपाईंहरू यात्रामा रहनुहुन्छ ! त्यसैले त हामी सहयोगको लागि छौं !'- बडो मीठो जवाफ दिन्छिन् ।

यस्ता औपचारिक कुराकानीले केही फल प्राप्ति हुँदैन । हाम्रो समस्या हामीसँग छ अनि ती दोभाषेको वाध्यता हामी बुझ्न सक्दैनौं । हामीले चाहेसम्म आज दिनभरि उनले हामीसँग हिंड्नुपर्छ, तर हामी मेलामा नै दिनभर गुजार्दै छौं भने उनको के आवश्यकता ! यो कुरा गगनले बुझेर पनि सम्झन सकिरहेको छैन । त्यसैले म बीचैमा कुरा काट्दै भन्छु- 'छोडिदेऊ ! दिउँसो लन्च टायममा यिनीसँग भेटौंला र खाना सँगै खाउँला ! हुँदैन ?'

यो कुरालाई गगनले सहमति दिन्छन् र दोभाषेले पनि ! यत्तिकैमा मेलाको एक नम्बर ढोका आइपुग्छ र हामी छुट्टिन्छौं, बाह्र बजे भेट्ने निर्णय गर्दै ।

बिहानको मेला, हरेक केबिनमा व्यापारीहरूको नेगोसेसन भइरहेछ । चिया ओसार्न खटिएका युवतीहरू कपमा चिया हाल्न व्यस्त छन् । सबै आफ्नो काममा हतारिएका छन् । हामी पनि त्यत्तिकै हत्तारिएका छौं । हेर्नुपर्ने इच्छा काँचै छ । काम पूरै बाँकी छ । हतार-हतार सबैतिर हेर्दै र अलमलिंदै एउटा हॉल पास गरेपछि हामी दुवैमा सल्लाह गर्छौं- 'हामी आ-आफ्नो काम गरौं । ठीक बाह्र बजे एक नम्बर ढोकामा भेटौं'- यही निर्णयमा हामी छुट्टिन्छौं । गगन एकतर्फ लाग्छन् र म त्यहीं अल्मलिन्छु । एक्लै म आफ्नो चाहनाको माल खोज्न थाल्छु ।

चीनियाँ उत्पादनका सामानहरू चाहे त्यो परम्परागत शैलीदेखि आधुनिक शैलीको हस्तकला दुवै थरी उत्कृष्ट भएको हुँदा विश्वबजारमा यसको माग बढ्ने निश्चय छ ।

त्यसैले नयाँ र पुरानो प्रविधिको संमिश्रणमा निर्मित अटोमोवाइल मेशीनेरी र पछिल्लो प्रविधिको उपज इलेक्ट्रोनिक उपकरणको उत्पादन हेर्दा यसको भविष्य उज्वल देखिन थालेको छ - यो मैले गहिरिएर अध्ययन गर्दा पाएको नतीजा हो ।

म आफ्नो व्यापारको क्रममा धेरै ठूलो अर्डर दिन नसके पनि स-सानो दुइटा माल बुक गर्छु । हेर्दाहेर्दै समय बित लागेको हुँदा म समयमै ढोका नम्बर एकमा आएर गगन र दोभाषेलाई कुरेर बस्छु ।

म उभिएको केही क्षणमै दोभाषे आइपुगिन् र भन्छिन्- 'हिजो तपाईं पछि हुनुहुन्थ्यो उहाँ अगाडि, आज तपाईं अगाडि !'

मैले हाँसेर जवाफ दिएँ- 'यही त जिन्दगी हो ! तपाईं यसलाई कसरी सोच्नुहुन्छ?'

'तपाईंको भनाइ के हो ?'- उनी मेरो भनाइबाट अल्मलिइन् ।

मैले बुझें ! यिनी उमेरकी कच्चा, फेरि भाषाको समस्या ! बुझ्न अप्ठेरो भयो, मैले- केही होइन 'जोक' गरेको हुँ ! पीर नगर्नुहोस् भनें । उनले मेरो कुरा बुझे पनि नबुझे पनि 'ओ०के०' भनिन् । हामी यस्तै कुरा गर्दागर्दै गगन आइपुग्छन् । हामी तीनै जना होटेलतर्फ लाग्छौं ।

लन्चको समय भएको हुँदा हामी होटेलमा गएर खानाको लागि रेष्टुराँमा पस्छौं । रेष्टुराँमा हामीले बोल्नुपर्ने आवश्यकता महसूस गर्दैनौं । हामीले खानाको लागि दोभाषेलाई भनिसकेका छौं । दोभाषेले खानाको अर्डर गर्छिन् ।

म बिस्तारै दोभाषेको नाम सोध्छु- 'तपाईंको नाउँ के हो ? हामीले सोध्नै बिर्सियौं ।'

'ओ! मेरो नाम चाङसच हो ! यो नाम तपाईंलाई गाह्रो भयो भने 'चार्ली' भन्न सक्नुहुन्छ !'

मैले मनमनै विचार गरें-अंग्रेजी भाषाको चार्लीभन्दा त चीनियाँ नाम नै राम्रो छ नि ! त्यसैले उनको नाम सम्बोधन गर्दै सोधें- 'चाङसच ! तपाईंको घर कहाँ हो ?'

मेरो बा आमाको घर त यहाँबाट धेरै टाढा छ, तर हाल यही शहरमा बस्छु'-- उनले जवाफ दिन्छिन् ।

'के तपाईंको बाबुआमा यहाँ छैनन् ? तपाईं एक्लै !' - गगन तुरुन्तै जानकारी लिन चाहन्छन् ।

'हो ! यस होटेलमा दोभाषेको काम गर्छु ! यो शहरमा एक्लै छु !'

खानापिना र बस्ने एक्लै ! यो उमेरमा !'- गगन आश्चर्य प्रकट गर्छन् ।

'यो चीन हो । यहाँ सबै एक्लै हुन्छन् । भनेको ठाउँमा काम पाइन्न ! कामको लागि आफ्नो ठाउँ छोड्नुपर्छ !'- उनी बिस्तारै गाँठो फुकाउँछिन् ।

'यदि तपाईं माइण्ड गर्नुहुन्न भने एउटा कुरा सोधूँ ?'- गगन नम्रतापूर्वक प्रश्न गर्छन् ।

'भन्नुहोस् न !'- चाङसच तुरुन्तै भन्छिन् ।

'दांभाये काम गरे- वापत तपाई कति कमाउनुहुन्छ ?'- गगन अठेरो मान्दै चाङसचलाई प्रश्न गर्छन् । यसकारणले कि उनले करीब दैनिक एक सय युआन तिरेका छन् ।

'मलाई पुग्ने म कमाउँछु !' चाङसचको औपचारिक जवाफ हामी सुन्छौं ।

उनको जवाफलाई हामी केही पूरक प्रश्न गर्ने पक्षमा छैनौं । खाना आइपुग्छ । खाना राम्रो छ, कारण हामीलाई मनपर्ने खानाका किसिम चाङसचलाई हामीले बताइसकेका थियौं । यो पटक हामी राम्रो गरी खाना खान्छौं ।

चाङसच खानाको स्वाद लिंदै हामीलाई सोद्धछिन्- 'खाना कस्तो छ ? ठीक छ !'

'एकदम ठीक छ !'- हामी दुवैको मुखबाट एकैपटक निस्किन्छ । सुनेर उनी हाँस्छिन्, उनी-सँगसँगै हामी पनि हाँस्छौं । स्वादिलो खाना र हँसाइले गर्दा चाङसच हामीसँग केही नजीकिन खोज्दै भन्छिन्- 'तपाईंहरूको नाउँ के हो ? तपाईंहरूको वासस्थान कहाँ हो ?'

हामी आ-आफ्नो परिचयकार्ड उनलाई दिंदै कार्डमा छापिएको ठेगाना-बारेमा भन्छौं । उनले पनि आफ्नो कार्ड दिंदै भन्छिन् - ' यो टेलिफोनमा कल गर्नुभयो भने तपाईंहरू मलाई पाउनुहुन्छ ।'

चाङसचसँग केही रमाइला कुरा, केही ठट्टाका बातचीत शुरू हुन थाल्यो । उनी पनि हामीलाई सजिलै महसूस गर्दै साथ दिन थालिन् । खाना खाएर उठ्दासम्म हामीहरू आपसमा साथीमा हुनुपर्ने समझदारी आ-आफूले स्वीकारिसकेका हुन्छौं । रेष्टुराँबाट निस्केर हामी मेला जाने तरखरमा लाग्छौं ।

आज हामीले मेलाको लाइट् ईण्डष्ट्रियल प्रोडक्स मतलब हल्का कारखानाका उत्पादन शाखामा जाने निर्णय गर्‍यौं । हॉल नम्बर आठको चारै तल्ला ओगटेको यो शाखा ज्यादै घुइँचो रहेछ । नाम मात्र हल्का कारखाना, तर सामान यति धेरै भेराइटी देखियो कि यही शाखालाई मात्र हेर्न पनि तीन चार दिन लाग्ने हामीले अनुमान गर्‍यौं । अब सँगै हिड्नुभन्दा छुट्टिएर हिंडेमा केही काम हुन सक्ने भएको हुँदा हामी एकेक्लै हिंड्यौं र काम शुरू गर्न थाल्यौं ।

म एउटै कोठामा पसेको एक घण्टा बितिसकेछ । सामान अत्यन्त राम्रा र सस्ता नै भएको हुँदा आवश्यक र अनावश्यक दुवै किसिमका सामानहरूमा ध्यान जाने र मूल्य सोध्न मन लाग्ने कारणले गर्दा एकै ठाउँमा लम्किरहेछ । चीनका उत्पादनका सामानहरूमा यो हल्का कारखानाका उत्पादित वस्तुहरूले विश्व-बाजारमा राम्रो ठाउँ लिएको हुँदा पनि यी सामानहरू प्रतिस्पर्धाको दृष्टिकोणले गर्दा राम्रै बनेका रहेछन् । धेरैजसो सामानहरू अन्तरराष्ट्रिय स्टाण्डरमै तयार भएको देखिन्छ । यी सामानहरूलाई हेर्दा चीनले औद्योगिक विकास क्षेत्रमा ज्यादै ठूलो उपलब्धि हासिल गरेको अनुमान गर्न सकिन्छ ।

प्राकृतिक स्रोत र साधनले सम्पन्न विशाल चीनले यस्ता मालहरू उत्पादन गर्दा आफ्नै देशको कोरा माल प्रयोग गर्ने गरेका छन् । कुनै कोरा माल नपुग भएमा वा

अनिवार्य आयात गर्नुपर्ने भएमा मात्र विदेशबाट आयात गरिने रहेछ । यस हिसावले हेर्दा चीन केही वर्षमै आर्थिक सम्पन्नताको शिखरमा पुग्नेछ । यो मेरो वर्तमान अनुमान हो ।

घुम्दै र हेर्दै आफ्नो काम पनि टुङ्गो लगाउँदै म अगाडि वढ्दै जान्छु । म हॉल नम्बर नौमा हस्तकलाका सामान प्रदर्शन गरेको स्थानमा पुग्छु । त्यहाँ पनि खरीददारहरूको भीड छ, त्यहाँ गोरा जाति ज्यादा देखिन्छन् । यी हस्तकलाका सामानको यूरोप र अमेरिकामा राम्रो बजार रहेछ । अत्यन्तै सुन्दर यी चीनियाँ हातले निर्मित सामानले जो कोहीको मन खिचिरहेको छ । म पनि सामानमा भुल्दै एक कोठाबाट अर्को कोठा नियाल्दै हिंड्छु ।

म हॉलबाट बाहिर निस्किदा त गगन र चाङसच ढोका-बाहिर मलाई कुरेर वसेका रहेछन् । म चाङलाई सम्बोधन गर्दै भन्छु- 'माफ गर्नुहोस् ! म ढीलो भएँ' अनि गगनलाई सोध्छु- 'कतिबेर भयो तिमी उभिएको ?'

'ठीक छ ! अबेर होइन ! तपाईंको साथी पनि भरखरै निस्कनुभा¯को !' चाङसच बिस्तारै त्यहाँको विवरण दिन्छिन् ।

हामी तीनै जना आफ्नो होटेलतर्फ लाग्छौं । गगन हिंड्दा-हिंड्दै मलाई सोध्छन्- 'तीमीले काम सक्यौ ?'

'सकें नै भन्नुपर्‍यो ! मेला घुम्न त सात दिनमा पनि सकिएला जस्तो छैन !'- मेलाको बारेमा म आफ्नो अनुभव व्यक्त गर्छु ।

हामी होटेलको कम्पाउण्डभित्र पस्छौं । त्यहाँ एक जना युवक हिंड्दा-हिंड्दै टक्क उभिएर चाङसचसँग कुरा गर्छन् । हामी पनि अडिन्छौं । हामीलाई हेर्दै चाङसचले -निपाअर-भन्छिन् र त्यो युवकले - निफाई - भनेपछि मैले अनुमान गरें, हाम्रो विषयमा त्यो युवकले सोध्यो र चाङसचले यिनीहरू नेपाली हुन् भनिन् । युवक हिंडेपछि गगनले मलाई सोधे- 'शायद यिनीहरूले हाम्रो विषयमा कुरा गरे कि क्या हो ?'

'हो ! त्यस्तै लाग्छ ! तर यिनीहरू भिन्नै जातिका रहेछन् !'- मैले अनुमान गरें ।

'चीनियाँ पनि कसरी भिन्दै जाति हुन्छन् ?'- गगनले आफ्नो जिज्ञासा प्रस्तुत गरे ।

'यहाँ एकै प्रान्तमा बस्ने चीनियाँ दश किसिमका छन्, दश जाति र दश भाषाभाषीका छन् । अनि यिनका संस्कृति र धार्मिक मान्यता पनि अलग- अलग छन्'- म गगनलाई बुझाउने कोशिश गर्दै, चाङसचलाई प्रश्न गर्छु- 'ती युवक जसलाई तपाईंले भेट्नुभयो, शायद ती युवक अलग ठाउँमा बस्ने र अलग भाषा बोल्ने जस्तो लाग्यो नि ?'

'हो ! तिनी क्वाङ्तङ-हुवा बोल्ने यही क्षेत्रको मान्छे हुन् । त्यसैले तिनीहरूको भाषाको उच्चारण गर्ने प्रक्रिया बेग्लै छ, जस्तो म फुटुङ - हुवा बोल्छु, मैले तपाईंलाई- निपाअर-भनें भने क्वाङ्तङ हुवा बोल्नेले-निफाई भन्छन् ।'- उनी भाषाको उच्चारण बारेमा हामीलाई सम्झाउने कोशिश गर्छिन् ।

'मैले त चीनियाँहरू एउटै होलान् भनेको ।' गगन बुझेको अनुभव गर्छन् ।

हामी डङफङ होटेलको विशाल लविमा पुग्छौं । हाम्रो हातमा भएको 'ब्रिफकेश' लाई होटेलको कोटामा राखेर आउन म गगनलाई अह्राउँछु । गगन ब्रिफकेश राख्न कोठातर्फ लाग्छन् । म र चाङसच लविको एक कुनामा रहेको सोफामा गएर वस्छौं ।

चाङसचलाई यो गुवाङ्चाउ शहरको वारेमा भन्न म आग्रह गर्छु । उनले शहरको वारेमा बताउँदै लिवरेसन अघि यो शहरमा अंग्रेजहरू बसोबास गरेको र उनीहरूकै प्रभाव परेको हुँदा यो शहरको नाउँ 'क्यानटन' रहन गएको बताउँछिन् । तर अहिले कोही पनि विदेशी यस शहरमा नभएको र पूर्ण चीनियाँहरू मात्र वसोबास गर्ने यस शहरमा पुराना पुराना धेरै स्थानहरू मास्सिएर नयाँ बन्न थालेको छ । यो शहर झन् विशाल हुँदै गएको र हाल चीनको नै आकर्षण केन्द्र बन्न पुगेको पनि उनी बताउँछिन् ।

'तपाईं यो शहरमा के आकर्षणले आइपुग्नुभयो त ?'- यो साधारण, तर जटिल प्रश्न उनको अगाडि थपक्क राखिदिन्छु ।

उनी तुरुन्तै केही भन्न सक्दिनन् र निहुरिएर विचार गर्न थाल्छिन् र म पनि केही नबोली केही क्षण उनको उत्तरको प्रतीक्षामा बस्छु । उनी बिस्तारी मुन्टो उठाएर अप्ठेरो मान्दै भन्छिन्- 'के आकर्षण भन्नु खै !'

'केही त होला ?'- म आफ्नै प्रश्न-माथि जोड दिन्छु । उनले अप्ठेरो मानेको अनुहार म छर्लङ्ग देख्न सक्छु । उनलाई भन्न पटक्कै मन छैन, त्यो पनि मैले बुझिरहेको छु । उनी अत्यन्तै भावुक हुँदै गइरहेकी छिन् । केही क्षणभरको मौनतालाई भंग गर्दै म झिनो स्वरमा भन्छु- 'माइण्ड नगर्नुहोस् ! तपाईंले भन्नुपर्छ भनेर म जोड दिन्नँ !'

'होइन ! तपाईंलाई भनेर वा नभनेर केही पर्ने त होइन । तर हामीले यस्ता कुराहरू विदेशीलाई भन्ने गरेका छैनौं, जो तपाईं मसँग जानकारी लिन चाहनुहुन्छ ।

'ठीक छ ! नभन्नुहोस् ! भन्नु नै पर्छ भनेर म जोड दिन्नँ !'- म फेरि दोहऱ्याउँछु ।

'तलब धेरै पाइन्छ भनेर म यो शहरमा काम गर्न आएकी हुँ, तर बेकार भयो !'- अनायास चाङसचको ओठबाट यो वाक्य फुस्कन्छ ।

सुन्नेबित्तिकै मेरो कौतूहल बढ्छ अनि मैले नचाहँदा नचाहँदै पनि उनको अगाडि मेरो प्रश्न तेर्सिन्छ- 'कस्तो बेकार भयो ?' - यसको जवाफ दिन नहुने वाध्यता रहँदा-रहँदै पनि उनी बिस्तारै भन्दै जान्छिन्- 'यहाँ तलब धेरै पाइन्छ भनेर आफ्नो 'होमटाउन' छोडेर आएँ ! पैसा त्यत्ति प्राप्त गर्न सकिनँ, जति मैले सोचेकी थिएँ ! यहाँ पनि त्यस्तै शोषण रहेछ जति हाम्रो प्रान्तमा छ । अब मैले एक वर्ष काम गर्नु नै पर्छ, जान आउन पैसा लाग्छ ! के गर्नु ?'

भन्दाभन्दै रोकिन्छिन् र लामो सास फेर्दै आफ्नो भनाइलाई लुकाउन यताउता हेर्न थाल्छिन् । लविको एक छेउदेखि अर्को छेउसम्म उनको आँखा दगुर्दा-दगुर्दै टम्म रसाएर आउँछ । म केही नबोली उनी र वरपरको वातावरण नियालिरहेको छु । उनी जुरुक्क उठेर ट्वाइलेटतर्फ लाग्छिन् ।

म पनि दुःखित भएँ । आफ्नै प्रश्नमाथि, म स्वयम्लाई पश्चात्ताप लाग्यो । अनि सम्झें - मानिसलाई कुनै पेन नियम वा सिद्धान्तले बाँध्न सक्दैन र मान्छे यन्त्र बन्न पनि सक्दैन । आखिर मान्छे, मान्छेको स्वभावमै फर्कन्छ! मान्छे, मान्छेसँग लुक्न सक्दैन चाहे स्वदेशी होस् वा विदेशी !

केही बेरपछि चाङसच बनावटी हाँसो ओठमा ल्याउँदै आइपुग्छिन् र सोफामा बस्दै भन्छिन्- 'माफ गर्नुहोस् है !'- उनी फेरि भन्छिन् -'मेरो होमटाउन' पुग्न रेलमा चार दिन चार रात लाग्छ ।'

'त्यत्ति टाढाबाट तपाईं काम गर्न आएको ? तपाईंको घरमा को-को छन् नि ?'

'बा, आमा, अनि एउटा भाइ छ । बा आमा दुवै फेक्ट्रीमा काम गर्नुहुन्छ र भाइ पढ्दै छ !'

'तपाईंको पढाइ सकियो ?'

'विदेश व्यापारमा डिग्री प्राप्त गरेकी छु र अंग्रेजी भाषाको 'टफेट' पास गरेकी छु । अब पढाइ सकियो नै भन्नुपर्‍यो ! यहाँभन्दा बढी पढ्ने इच्छा हुँदाहुँदै पनि नोकरी गर्न बाध्य हुनुपरेको छ । मेरा बा आमा ठूला मान्छे होइनन्, त्यसैले मैले योभन्दा उच्च शिक्षाको मौका पाउने त कुरा नै भएन ! अब केही पैसा कमाइयो भने भाइलाई पढाउनुपर्ला !' चाङसच अप्ठेरो नमानीकन भन्दै जान्छिन् ।

'के यहाँ पनि पढ्नलाई पैसा लाग्छ ?'- मैले नबुझेको हुँदा प्रश्न गर्छु ।

'प्रारम्भिक शिक्षा निःशुल्क हो ! त्यसपछिको शिक्षा- सम्बन्धमा प्रान्तीय सरकारले आ-आफ्नो हिसावले योजना लागू गरेको हुन्छ ! उच्च शिक्षाको लागि त पैसा तिर्नु नै पर्ने हुन्छ ! तर केही पहुँचवाला मान्छेहरू स्वदेशमा मात्र होइन विदेशमा पनि सरकारी खर्चमा पढ्न जाने गर्छन् !' - उनी यहाँको शिक्षाको व्यवस्था- बारेमा भन्छिन् ।

'माफ गर्नुहोस् ! म तपाईंको उमेर थाह पाउन सक्छु ?' – आफूलाई अप्ठेरो लाग्दालाग्दै पनि म बिस्तारै सोध्छु ।

'बाईस वर्षकी भएँ !'- यतिखेर नहिचकिचाईकन जबाफ दिइन् ।

'विवाह ?'

'यसको कुरा धेरै टाढा छ ! पहिले त मैले भाइलाई समर्थ बनाउनु छ । जसरी मेरा बा आमाले खाई नखाई पैसा जोगाएर मलाई पढाए, त्यसै गरी भाइले डिग्री प्राप्त नगरेसम्म मैले आफ्नो व्यक्तिगत जीवन-बारेमा सोच्ने कुरा नै छैन ।'- चाङसच अब कुनै कुरा गर्न पनि मसँग हिचकिचाइरहेकी छैनन् ।

उनी भन्छिन्- 'मेरो बा एक मिलमा क्लर्क छन् र आमा एउटा पंखा फेक्ट्रीमा मजदूर छिन् । दुवै आमा बाको कमाइबाट घर चल्छ र मलाई पढ्नसम्म पैसा मुश्किलले बचाउँछन् । आफ्नो शहरबाट उनीहरू बाहिर गएका छैनन् । उनीहरू भन्थे– छोरी, तिमीले कमाउन थालेपछि हामी प्रतिवर्ष चीनको एउटा नयाँ शहर घुम्न जाऔंला है- तर यो

उनीहरूको सपना मात्र रहने भएको छ । मैले कमाएर केही बचत गर्न नै सकेकी छैन । यही बीचमा भाइको पढाइ पनि मेरो सामु छ !' - लामो सास लिंदै आफ्नो भनाइ रोक्छिन् ।

'कति टाढा छ 'होमटाउन' तपाईंको ?'- उनीबाट फुट्न लागेको अन्तरलाई रोक लगाउन र प्रसंगलाई मोड दिन मैले सोधें ।

जिलिन प्रान्तको चाङ्चुन शहरमा हामी बस्छौं । त्यसभन्दा अगि त्यही प्रान्तको हनहुवा भन्ने सानो शहर-नजीकै एउटा गाउँमा हाम्रो घर थियो रे ! हामी, मतलब मेरा बा आमाले जहाँ काम पाए त्यहीं बस्ने व्यवस्था पनि भयो, त्यसैले हाल चाङ्चुनमै बस्छन् । शहर ठूलो छ, राम्रै छ ! - आफ्नो बाल्यकाल बिताएको शहर र आमा बा पनि बसेको ठाउँ-बारेमा भन्न पाउँदा उनी रमाएकी छिन् ।

'चाङ्चुन शहर त बेजिङ्बाट पनि उत्तर होइन र ?' - म यकीन हुन चाहन्छु ।

'हो ! पेचिङ्बाट एक हजार किलोमिटरभन्दा बढी पर्छ !'

'यति टाढा आएर काम गरेपछि तपाईंले राम्रो तलब र सुविधा पाउनुपर्ने होइन र ?'- फेरि मेरो प्रश्न उनको सामु तेर्सिन्छ, जुन कुरा उनी जवाफ दिन चाहँदिनन् ।

'पाउनु त पर्ने हो ! पाएकी पनि छु ! तर- !' उनी चुप रहिन् ।

हामी बसेको ठाउँमा गगन आइपुग्छन् र सँगै रहेको खाली सोफामा बस्छन् । उनी माथि कोठामा जाँदा घटेको घटना सुनाउँछन् । कुरा के भएछ भने उनको हातमा दुइटा ब्रिफकेश थियो, त्यसैले पोर्टरले कोठासम्म पुग्याउन गगनको हातबाट ब्रिफकेश लिएछ र कोठासम्म पुग्याएछ । अनि पैसा माग्न थालेछ, कारण अघिल्लो दिन त्यही पोर्टरले माल लाँदा गगनले पैसा झिकेर बक्स दिन खोज्दा अस्वीकार गरेको थियो । पछि दुई युआन दिएपछि मात्र हिंडेछ । यो घटनालाई मैले चाङसचको सामु बताएँ र सोधें - 'अघिल्लो दिन मेरो साथीले दुई युआन बक्स दिंदा नलिने र आज उसले मागेर किन लियो ?'

'यहाँ हाम्रो यो होटेलमा मात्र होइन पूरा चीनमा बक्स लिने वा टिप्स संकलन गर्ने चलन छैन । यदि कसैले यसो गर्‍यो भने नियम विपरीत गरेको ठहर हुन्छ र उसलाई कार्यवाही हुन्छ । हिजो उसको सामु कोही चीनियाँ मान्छे थियो होला !'- चाङसच भन्छिन् ।

'हो ! हिजो फ्लोर इन्चार्ज थिए !' गगन सम्झन्छन् ।

'बिचरा ! पोर्टरले एक दुई युआन लिनु पनि कुनै अपराध हो र ?' चाङसचसँग उनको विचार बुझ्न प्रश्न गर्छु ।

'त्यसो नभन्नुहोस् ! राज्यको जो नियम छ, प्रत्येक नागरिकले पालना गर्नुपर्छ! कसैसँग माग्नुको अर्थ आफू- भित्रको कमजोरीलाई नग्न प्रदर्शन गर्नु हो भने कसैको दयाको आश्रयमा बाँच्न चाहनु पशुत्व स्वीकार गर्नु हो ! मान्छे भएर बाँच्नको लागि मानवीय अनुशासन कायम राख्नुपर्छ जो राज्यले व्यवस्थित गरेको छ !' चाङसच बढी गम्भीर मुद्रामा राज्यको तलवदारी जनाउँछिन् ।

'यो पोटरहरूले कति तलब पाउँछन् ? जसले बक्स वा टिप्सको आशा राख्नुपर्दैन !'- गगन बीचैमा बोल्छेन् ।

'तलब त पचास युआन प्रति- महीना हो ! यसबाट उसलाई काफी पुग्छ! एक जनाले तीस युआनमा दुःखसुख खान सक्छ !' - कुराको दौरानको आवेशमा चाङसचको रहस्य खुस्कन्छ ! शायद उनी यो भन्न बाध्य भएकी वा भनेकोमा पछुताएकी छन्, उनी यसपछि केही भन्ने आँट गरिरहेकी छैनन् ।

'जम्मा पचास युआन एक महीना काम गरेको ?'- गगन आश्चर्य व्यक्त गर्दै भन्छन् 'यसको मतलब एउटा मान्छे एक महीनासम्म काम गरेर केवल करीब चौध डलर मात्र तलब पाउँछन् त ?'

गगनको प्रश्न चाङसचसँग हो । उनी यो प्रश्नको जवाफ दिन तयार देखिन्नन् । गगनले आफ्नो व्यापारिक दिमाग चाँडै नै प्रयोग गरेर चाङसच र मेरो सामु जटिल हिसाब राखिदिए, जो हामी दुवै त्यसको उत्तर वा प्रतिवाद गर्न असमर्थ छौं । हामी केही बोल्दैनौं ।

लविको बीचोबीच भागको एक छेउमा 'असीस्टेन्ट मेनेजर' भनेर टेबुलमा लेखिएको छ र त्यहीं एक जना स्मार्ट केटो नीलो रंगको सुटमा रातो टाइ लगाएर आएका आगन्तुकलाई जवाफ दिइरहेको छ । गगन त्यसलाई औंल्याउँदै सोध्छन्– 'त्यो स्मार्ट केटोले कति तलब पाउँछ ?'

त्यही करीब सत्तरी युआन प्रति-महीना !'- चाङसच तुरुन्त जवाफ दिन्छिन् ।

'त्यसो भए तपाईं त्योभन्दा कम तलव खानुहुन्छ ?'- म तुरुन्त प्रश्न गर्छु !

'होइन ! त्यत्ति नै हो मेरो पनि तलब !' चाङसच आफ्नो तलब स्पष्ट गर्छिन् ।

'यसको मतलब तपाईं प्रति-महीना बीस डलर मात्र कमाउनुहुन्छ !' - गगन तुरुन्त हिसाब गरी चाङसचलाई भन्छन् ।

'डिग्री होल्डरको तलब यसभन्दा बढी छैन यहाँ, तर हाम्रो प्रान्तमा त योभन्दा धेरै कम छ ।'- उनी सन्तोष व्यक्त गर्छिन् ।

चाङसच र हाम्रो बीचमा भएका धेरै बन्धनहरू टुट्दै गइरहेछन् । हामी एक अर्कासँग नजीक हुँदै छौं, उनी पनि खुल्दै आएकी छन् । विदेशीको सामु कति कुरा बताउने, कति कुरा नबताउने त्यो पनि राज्यले निर्णय लिएको हुन्छ र त्यही अनुसार यस देशको नागरिक चल्नुपर्ने हुन्छ-यो तथ्य चाङसचले भनेपछि मैले थाहा पाएँ । चाङसच यो भन्नुपरेकोमा पछुताएकी छन् । आफ्नो गल्तीलाई छोपछाप गर्न खोज्दै उनी भन्छिन्- 'यो कुरा मैले भन्न नहुने हो तापनि तपाईंहरूको आग्रहलाई टाल्न नसकेर भनेकी हुँ ।'

त्यसो भए तपाईंले दुई दिनमा कमाउने ज्याला तपाईंले नै पाउन तीन महीना काम गर्नुपर्छ ?- गगन आश्चर्य प्रकट गर्छन् । गगनले आश्चर्य मान्नु पनि अस्वाभाविक होइन, कारण यिनै चाङसचको लागि गगनले दुई दिनको दुई सय युआन तिरेका थिए, होटेल व्यवस्थापनलाई ! जबकि यिनले करीब तीन प्रतिशत भाग पाउने रहिछन् । यो

अन्तर कसैको लागि पनि पन्न सक्दैन, त्यसैले गगनले पुनः आफ्नो विचार व्यक्त गरे- 'यो हो भने यहाँ शोषणले पराकाष्ठा नाघेको देखियो! श्रमिकवर्गको शोषण-मुक्तिको लागि स्थापित सर्वहारावर्गको अधिनायकत्वमा राज्य सञ्चालन भएको मुलुकमा कामदारको कमाइ र चुक्ता मूल्यमा किन यस्तो अन्तर ? यहाँ कामदारहरू स्पष्ट शोषित भएको देखियो ।'

'होइन ! यसलाई शोषण नै हो भनेर भन्न मिल्दैन ।'- म आफ्नो विचार व्यक्त गर्छु ।

'एउटा मिल मालिकले मजदूरलाई कम पारिश्रमिक दिंदा त्यहाँ शोषण भएको ठहर भएर कार्ल मार्क्सले शोषण-मुक्तिको आन्दोलन चलाएका थिए, पछि जुन आएर राज्य सत्ता कब्जा गर्ने व्यवस्था साबित भयो । त्यसैले शोषण चाहे व्यक्तिद्वारा होस् या कुनै संस्थाद्वारा होस् वा राज्यद्वारा होस् त्यो शोषण नै हो, त्यसबाट मान्छेले मुक्ति पाउनुपर्छ भन्ने मलाई लाग्छ'- गगन आफ्नो अनुभव व्यक्त गर्छन् ।

हामी आफ्नो भाषामा कुरा गरिरहेको हुँदा चाङसच हामी दुवैलाई नियालिरहेकी छन् । हाम्रो कुराकानीमा आफ्नै विचारको अभिव्यक्ति भएको हुँदा उनलाई सुनाउनुपर्ने वा बुझाउनुपर्ने हामीले आवश्यकता देखेनौं । त्यसैले हामीले आफ्नै हिसाबले कुराकानी गरिरहन्छौं ।

साँझको खाना खान जाने वेला भएको छ । होटेल-बाहिरको रेष्टुराँमा खाने वा यही होटेल-भित्रको रेष्टुराँमा खाने निर्णय गर्न हामी चाङसचसँग सोधखोज गर्न थाल्छौं । उनको भनाइ अनुसार बाहिरको भन्दा भित्रकै रेष्टुराँ ठीक भएको राय व्यक्त गर्छिन् । यस - अनुसार हामीले होटेल- भित्रकै रेष्टुराँमा खाना खाने निर्णय गर्यौं । हामीसँग केही समय भएको हुँदा गगन बाहिर घुम्न जाने विचार व्यक्त गर्छन् । मलाई जान मन नलागेको हुँदा म चाङ्चसँग कुराकानी गरेर बस्ने आशय व्यक्त गर्छु । गगन बाहिर निस्कन चाङसचसँग वाटोघाटोको बारेमा सोध्दा उनी सम्झाउँछिन्- 'बाहिर धेरै टाढा नजानू ! यहाँ विदेशी एक्लै हिड्नु हुँदैन !'

'हुन्छ ! म यसो बाहिर हेरेर मात्र आउँछु ।'- यति भनेर गगन बाहिरतर्फ लम्कन्छन् ।

'के भनेको ? यहाँ विदेशीले एक्लै हिड्नु हुँदैन ?'- यो विषयको व्याख्या चाहन म उनलाई कोट्याउँछु ।

'हो, यहाँको नियम यस्तै छ ! त्यसैले हरेक होटेल सानो नगर जस्तो सबै सहुलियत युक्त बनाइएको छ, ताकि कुनै पनि विदेशी होटेलमा पसिसकेपछि बाहिरी आवश्यकता र आकर्षणबाट मुक्त रहोस् !'

'यो त मैले पनि अनुभव गरिरहेको छु !'

'फेरि बाहिर गएर पनि जाने कहाँ ? विदेशीले कुनै सानो लज वा सानो रेष्टुराँहरूमा गएर बस्न र खान मिल्दैन । साथै, कुनै चीनियाँ मान्छेको घर-डेरामा पस्न वा बस्न मिल्दैन । कुनै पनि चीनियाँ व्यक्तिले विदेशी मान्छेलाई अतिथि बनाएर बोलाउन वा घरमा राख्न मिल्दैन । अनि जाने कहाँ ?'

'यहाँ घुम्ने बजार छैन ?'- म आफ्नो उत्सुकता जाहेर गर्छु ।

'बजार त छ ! त्यो चीनियाँ मान्छेको लागि मात्र हो ! विदेशीहरूको लागि शहरमा तीन चार ठाउँमा 'फ्रेन्डशिप स्टोर' छन् । त्यही फ्रेन्डशिप स्टोर नै विदेशीको लागि बजार हो ! त्यहाँ पुग्न तपाईंलाई म जस्तो गाइडको जरूरत पर्छ !'

चाङसचको भनाइले चीन सम्बन्धमा अरू थप अनुभव मलाई प्राप्त भयो । उनको भनाइ-अनुसार विदेशीसँग निश्चित व्यक्ति बाहेक कुनै पनि चीनियाँ मान्छेले सम्पर्क राख्नु अथवा कुराकानी समेत गर्नु हुँदैन । यदि त्यस्तो गरेको थाहा भयो भने त्यो चीनियाँ मान्छे कार्यवाहीमा पर्छ । विदेशीको सम्पर्कमा आएको गाइडले रिपोर्ट दिनुपर्छ कि त्यो विदेशी कहाँ कहाँ गयो, कति खर्च गर्‍यो, के के खायो ? यति मात्र होइन, के कुरा गर्‍यो र कुन राजनीति विचारको हो भन्ने समेत जानकारी दिनुपर्ने रहेछ ।

चाङसचबाट यस्ता कुरा सुनेपछि मेरो मन पनि ढुक्क फुल्यो, अनि मैले बिस्तारै उनीसँग सोधेँ- 'के त हाम्रो पनि रिपोर्ट तयार गर्दै हुनुहुन्छ तपाईं ?'

'कुनै गलत व्यवहार देखियो भने गर्नैपर्ला !'- उनी ठट्यौलो बोली बोल्छिन् ।

'के यो सम्भव छ ? हरएक विदेशीलाई निगरानी गर्न ?'- म जिज्ञासा व्यक्त गर्छु ।

'नीति त राम्रो हो ! तर कहाँसम्म सफल हुन्छ, त्यो अध्ययनकै विषय हो! विदेशी-प्रति शत्रु-भाव चीनियाँ जनतामा कायम रह्‍यो भने यो नीति सफल हुन्छ । होइन, मान्छे मान्छे एक भइदिए भने चीनियाँ सरकारको नीति बेकम्मा साबित हुन्छ !'

'आखिर मान्छे त विश्वको जुनसुकै भू-भागमा बसेको भए पनि एउटै मानवीय प्रकृतिले जेलिएको हुन्छ । घाम र पानीमा ओत, खाली पेटमा खाना, दुःखमा आँसु र सुखमा हाँसो, यी सबै मान्छेका गुण हुन् जो कसैले पनि बदल्न सक्दैन !'

'तर चीनको नौलो जनवादले बदल्ने कोशिश गरिरहेको छ !'

'ठीक छ ! यो प्रयास हुन सक्छ प्रयोगको लागि ! सफलता यसबाट हासिल हुँदैन !'

गगन आइपुग्छन् । हाम्रो कुराकानी त्यत्तिकै रोकिन्छ, उनी आई सोफामा बस्नेबित्तिकै भन्छन्- 'हेर, बाहिर गएको त एक सय यु० एस० डलरको छः सय युआन पाएँ !'

'कहाँ ? कसरी ?'- गगनसँग सोधें ।

''ढोकाबाट बाहिर गएको त 'मनी चेन्ज-मनी चेन्ज' भने, कुराकानी गरें, बाटोको एक छेउमा गएर त्यो पैसा साट्ने केटाले मलाई छः सय दियो र मैले उसलाई एक सय यु० एस० डलर दिएँ ! अरू पनि धेरै रकम साट्न चाहन्थ्यो, तर मैले एक सय मात्र साटेर फर्किएँ ।'- गगन विस्तृत व्याख्या गर्छन् ।

यो कुरा जब चाङसचलाई मैले भनें, उनले त्रस्त स्वरमा भनिन्- 'यो ठीक काम भएन ! पुलिसले देखेको भए साट्ने दुवै जवानलाई कार्यवाही हुन्थ्यो । बाहिर त कालो बजारमा बढी रकम त पाइहालिन्छ नि !'

'यहाँ कालो बजार पनि छ ?'- यो नयाँ कुराको जानकारी लिन फेरि जिज्ञासा पोख्छु ।

'बैंकको रेटभन्दा बाहिरको रेट बहत्तर प्रतिशत बढी रहेछ'- गगन आफ्नो व्यापारिक हिसावले देखाउन खोज्छन् ।

'यत्रो ठूलो अन्तरको मतलब यहाँको अर्थ-व्यवस्था गिर्दो गतिमा रहेछ !'- फेरि गगनले दोहऱ्याउँछन् ।

'यो त हो !'- चाङसचले गगनको भनाइलाई समर्थन जनाउँछिन् ।

यसको अर्थ एउटा कामदारले प्रतिमहीना करीब यु०एस० आठ डलर मात्र आफ्नो पारिश्रमिक स्वरूप पाउँछ ! होइन त ?- गगन मलाई सम्बोधन गर्दै भन्छन् ।

साँझको खाना खान जाने वेला भएको हुँदा हामी होटेल-भित्रकै अरचार्ड रेष्टुराँमा खाना खाने निर्णय गरी रेष्टुराँतर्फ लाग्ने निर्णय लिन्छौं । साँझ झमक्क परिसकेको छ । रेष्टुराँका टेबुलहरू भरिंदै छन् । हामी पनि त्यस्तै टेबुल भर्ने क्रममा एउटा खाली टेबुलमा गई बस्यौं ।

खाना के खाने भन्ने कुरा विहानको लन्चमा पनि कुरा भएको र रेष्टुराँ आउँदा वाटोमा चाङसचसँग खानाको वारेमा कुरा गरिसकेको हुँदा मेनु हामीले हेर्नुपर्ने जरूरत सम्झेनौं । चाङसचले नै छः सात परिकारको अडर दिइन् ।

विजुलीको चम्किलो प्रकाश र व्यवस्थित सजावट र परम्परागत शैलीले सुसज्जित यो रेष्टुराँको जुनसुकै भागमा हेरे पनि आँखा त्यहीं टिकिरहन्छ । जति हेरे पनि नअघाइने अत्यन्तै सुन्दर यो रेष्टुराँमा काम गर्ने केटा र केटी सबै चुस्त र फुर्तिला देखिन्छन् । एकैनासे अंग्रेजी स्टाइलका टाइट फिटिङ लगाउने यी केटा र केटीहरूको उमेर बीस, वाईसभन्दा वढी नभएको अनुमान गर्न सकिन्छ । सबै कामदारहरू आ-आफ्नो काममा मन दिएर दौडिरहेका छन् ।

यो देखेर चकित हुँदै गगन प्रश्न गर्छन् चाङसचसँग- 'भन्नुहोस् यी केटाकेटीहरू यस्तै फुर्तीका साथ कति घण्टा काम गर्छन् र कति कमाउँछन्?'

'यिनीहरू हप्तामा छः दिन र प्रतिदिन आठ घण्टा खट्छन् ! महीनाको त उही पचासदेखि साठी युआन तलब पाउँछन् !'- अब चाङसच हामीसँग नहिचकिचाईकन भन्न थाल्छिन् ।

'एकनासे यी केटीहरू कसरी भए ?'- काम गर्ने केटीहरू एकै अनुहार, कद र वर्णको देखेर म चाङसचसँग जानकारी लिन चाहँदै सोध्छु - 'कसरी एउटै साँचोमा ढालेर तयार गरिएजस्तो मान्छे बन्दोवस्त गर्न सकेको ?'

मेरो भनाइ सुनेर उनी भन्छिन्- 'जुन ठाउँमा जस्तो मान्छेको आवश्यकता छ, त्यस्तै मान्छेको मात्र छनौट हुन्छ र कामको लागि दरखास्त गर्दा कद, तौल, उमेर र वर्ण समेत उल्लेख गर्नुपर्छ र व्यवस्थापनले तोकेको योग्यता पुगेपछि मात्र यस्ता होटेलहरूमा काम गर्न पाइन्छ । यस्तो होटेलमा काम गर्न धेरै मान्छे रुचाउँछन् । दश जवानको आवश्यकता छ भने सय जवानको दरखास्त पर्छ । त्यसैले साँचिकै कडा प्रतियोगिता हुन्छ ।

'प्रायः यो प्रान्तको भन्दा बाहिरकै मान्छे होलान् यहाँ !' - म अनुमान गर्छु ।

'निश्चय नै ! यत्र चीनको उत्तरी क्षेत्रका मान्छेहरू कार्यरत देखिन्छन् !' उनी पनि आफ्नो अनुमान प्रस्तुत गर्छिन् ।

'शायद ! लामो अवधिसम्म यिनीहरू यहाँ कार्यरत हुन सक्दैनन् होलान् !'- यो पनि मेरो अनुमान हो ।

'पक्कै हो ! बढीमा दुई वर्ष ! फिजिकल फिटनेस कायम गरेर अविवाहित रहे भने सात आठ वर्षसम्म त काम गर्छन् नै, तर उमेर ढल्केकाहरू यस्ता रेष्टुराँमा काम लाग्दैनन् !'- उनी आफ्नो अनुभव बताउँछिन् ।

'पछि के गर्छन् त यी रेष्टुराँमा काम गर्ने सुन्दरीहरूले ?'- चीनियाँहरूको लाइफ स्टाइल बुझ्न म चाङसचसँग प्रश्न गर्छु ।

'के गर्नु ? करीव पच्चीस वर्षको उमेरमा विवाह गर्छन् । शहरमा बसोबास गर्नेहरू मिल कारखानामा काम गर्न शुरू गर्छन् र गाउँमा बस्नेहरू कृषि-कार्यमा संलग्न हुन्छन् । जसरी पनि जीवन व्यतीत गर्नु न हो !' - उत्साहहीन बोलीमा चाङसच जवाफ दिन्छिन् ।

खाना आइपुग्छ ! टेबुलभरि खाना फिजिन्छ ! हामी तीनै जना आ-आफ्नो किसिमबाट खाना खान शुरू गर्छौं ! चाङसच चपस्टिकले फटाफट खान थाल्छिन् र हामी चम्चा-काँटाको प्रयोगद्वारा खाना शुरू गर्छौं । यो खाना गुआङ्डङ क्षेत्रको नभएर उत्तरी क्षेत्रको खाना रहेछ । लगभग हामीसँग स्वाद मिल्ने नै भएको हुँदा बिस्तारै खान्छौं । तर मन पराएर होइन, नखाइ नहुने भएर मात्र खान थालेका हौं ।

गगन र म दुवैलाई खानाले आकर्षण दिन सकेको छैन । हामीलाई खानाको भन्दा वरपरको सुन्दर वातावरणले धेरै खिचिरहेको छ । तर चाङसचले भने स्वाद लिएर खाइरहेकी छिन् । खानाको बीच-बीचमा खानाको स्वाद सम्बन्धमा उनी सोध्ने र प्लेट हाम्रो नजीक पार्ने काम गर्दै जान्छिन् । हामी पनि खाना स्वादिलो र मन परेको कुरा वेला-वेलामा बताएर औपचारिकता निभाउँछौं ।

गगन खानाको साथसाथै चाङसचको पनि तारीफ गर्छन् र भन्छन्- 'तपाईं नभएको भए हामीले राम्रो गरी खाना नै पाउँदैनथियौं र चीनको बारेमा हामीलाई केही पनि जानकारी हुँदैनथियो ।'

गगनको भनाइलाई हाँसेर मात्र उनले आफ्नो प्रतिक्रिया जनाउँछिन् । गगनले उनीसँग अंग्रेजी भाषाको उच्चारण र भाषाज्ञान-सम्बन्धमा कुरा गर्न थाल्छन् । उनी पनि गगनको हरेक प्रश्नको उत्तर दिइ नै रहन्छिन् । अंग्रेजी भाषा कहिलेदेखि बोल्न थालेको भन्ने गगनको प्रश्नको उत्तरमा उनी भन्छिन् जब उनी चार वर्षको उमेरमा स्कूल जान थालिन् त्यसै वर्ष उनलाई अंग्रेजी वाक्य सिकाइएको रहेछ- 'लङ लिभ चपरम्यान माओ'। बाल्यकालको बोली सुत्दा-उठ्दा, हिंड्दा-दगुर्दा र खाँदा खेल्दा रातोदिन बोलिने यो अंग्रेजी वाक्य उनका बा-आमाले पनि उनैबाट सिकेका रहेछन् । आजसम्म पनि उनका बा आमाले उनीसँग ठट्टा गर्नुपर्‍यो भने त्यही अंग्रेजी वाक्य बोल्ने गरेका रहेछन् जुन छोरीको दुधे ओंठबाट उनीहरूले सुनेका थिए । यही प्रसंगमा चाङसच आफ्नो बाल्यकाल सम्झँदै भन्छिन्- 'लङ

लिभ चियरम्यान माओ !' प्रत्येक वर्ष हजारौंपटक बोल्दै दश वर्षसम्म बोलिसक्दा पनि यसको मतलव अथवा सही अर्थ थाह थिएन, जब म पन्द्र वर्षकी भएँ र विदेश व्यापार पढ्न शुरू गरें तव मात्र मलाई यसको अर्थ थाहा भयो ।

'जुन बोली तपाईंले दश वर्ष वोल्नुभयो, के त्यो वुझ्दै नवुझी बोल्नुभयो ?'- मेरो प्रश्न उनको भनाइमा प्रतिक्रिया हो ।

'हो ! वोलियो ! यहाँ सबै कुरा बुझिएर वोलिंदैन । बोल्नुपर्ने कुरा बुझ्नु हुँदैन र बुझेर फाइदा पनि छैन ! जुन बोल्नुपर्छ त्यो बोल्नुपर्छ !'- गम्भीर स्वरमा चाङसचले यहाँको स्थिति जाहेर गरिन् ।

हाम्रो बीचमा कुराकानी नटुङ्गे पनि प्लेटहरूमा खाना रित्तिसकेको हुँदा अब हाम्रो लामो बसाइ छैन । कार्यक्रम - अनुसार भोलि बिहान नौ बजे होटेल छोड्नु छ र दश बजे रेल समात्नु छ । हाम्रो चीन हेर्ने धोको छेउ पनि कोट्टिएको छैन । झन् उत्सुकता बढ्दो छ ।

हाम्रो कार्यक्रम चाङसचलाई म सुनाउँछु । गुआङ्चाउ शहर घुम्न र हेर्न नपाएको र पछि आउँदा घुम्ने कुरा पनि उनलाई म सुनाउँछु । पछि आउँदा कुन होटेलमा बस्दा ठीक होला भन्ने प्रश्नको उत्तरमा उनी भन्छिन्- 'तपाईंहरू अरू होटेलमा पनि बस्न सक्नुहुन्छ, तर पैसा सबैतिर उस्तै हो ! यो व्यापार मेला नभएको समयमा होटेल केही प्रतिशत सस्तो हुन्छ ! यो तपाईंहरूको खुशीको कुरा हो । यो होटेल पनि कुनै नराम्रो त होइन !

'होइन ! होटेल त अत्यन्तै राम्रो छ ! अनुभवको लागि अरू होटेलको बारेमा पनि जानकारी लिउँ कि भनेर ! अरू कुरा होइन !' - गगन अप्ठेरो मान्दै भन्छन् ।

'यदि हामीहरू अर्को होटेलमा बस्यौं भने तपाईं त्यहाँ आउन सक्नुहुन्छ ? हाम्रो दोभाषे कामको लागि !' म चाङसचसँग सोध्छु ।

'अहँ ! आउन सक्दिनँ किनभने म यो होटेलको तलब खाने कर्मचारी हुँ ।'

'बिहान बेलुका वा छुट्टी लिएर पनि !'

'अहँ, यदि होटेलमेनेजमेन्टलाई थाहा भयो कि मैले उनीहरूको आदेश बेगर आफू-खुशी कुनै काम गरें भने मलाई पनिसमेन्ट हुन्छ र नोकरीबाट हात धुनुपर्छ !'

'यसको मतलब चौबीसै घण्टा तपाईं यिनीहरूको दास हो !'

'यो कार्य जिम्मेवारी र अनुशासन सम्झनुहोस् या दासता ! जहाँ म काम गर्छु त्यहाँको नीति नियमको मैले पालना गर्नु नै पर्छ !' - यो भनाइले चाङसचले आफ्नो काम-प्रति सन्तुष्टि जाहेर गर्छिन् ।

हामी पछि भेट्ने वचन लिने दिने गर्दै रेष्टुराँबाट उठ्छौं ! रात धेरै भइसकेको हुँदा चाङसचसँग बिदा हुँदै हामी आफ्नो कोठातर्फ जान्छौं ।

विहान घाम लागेको छैन । हतार-हतार स्टेशनमा पुगेर कस्टम र इमिग्रेशनको कार्य समाप्त गर्छौं । रेल स्टेशनमा लागिसकेको रहेछ । बोगी नम्बर र सीट नम्बर खोज्न केही समय लाग्यो ।

ठीक समयमा रेलले प्लेट फर्म छोडेर गुआङ्चाउ शहरको बीचबीच हुँदै अगाडि बढ्न थाल्यो, म रेलको झ्यालबाट शहरका अग्ला होचा घरहरूलाई नियाल्दै शहरको रमाइलो वातावरणमा हराउँदै गएँ ! त्यस्तै गगन पनि चुपचाप रेलको संगीतमय आवाजमा मग्न भएर झ्याल-बाहिरका दृश्यहरू नियाल्दै गए, हामी दुवैको हेराइमा आ-आफ्नो पन छ, उनी मसँग बोलिरहेका छैनन् र म पनि उनीसँग गफ गर्ने मनःस्थितिमा छैन ।

हेर्दाहेर्दै शहर छुट्दै जान्छ । गाउँका ससना रंगी- विरंगी घरहरू देखिन थाल्छन् । यी घर- भित्रको कथा मलाई पढ्न मन लागिरहेको छ । अनि यी हरिया फाँटहरूको अन्तर-व्यथा पनि मलाई बुझ्न मन लागिरहेको छ । यस्तै यस्तै चाहना र सपनाको मधुर कल्पना-भित्र रुमलिदै म र म बसेको रेल क्षितिजसँग सम्झौता गर्ने वेगमा चीनको सीमा पार गर्न खोज्दै छ ।

=★=

- ५ -

चार महीनापछि फेरि चीनको भ्रमण निश्चय गर्नुपरेको छ । कारण, गगन र मैले गुवाङ्चाउको मेलामा अडर गरेको सामान इन्स्पेकसन गर्नु र सामान चाँडो चलान गर्नुहो । यो पटक यात्रा बडो लामो तय भएको छ । हामी गुवाङ्चाउ शहर हुँदै फुचाउ प्रान्तको फुज्यान शहरमा दुई दिन बस्नेछौं, त्यहाँबाट जियाङसी प्रान्तको नानचाङ शहर जान्छौं र एक दिन त्यहाँ बसेर चीनको प्रमुख शहर सांघाई पुग्नेछौं, त्यहाँ सात दिन बस्ने कार्यक्रम छ । यो पटकको चीनको यात्रा बीस दिनभन्दा बढी हुने निश्चित देखिन्छ । गगन र मैले मिलेर यो कार्यक्रम तयार गर्‍यौं । एकपटक चीन पुगिसकेको हुँदा हामीलाई त्यत्ति अत्यास लागेको छैन ।

काठमाडौं चीनियाँ दूतावासबाट भिसा पाउन सकिएन र हङ्कङ गएर टुरिष्ट भिसा लिने निश्चय गरी हामी दुवै हङ्कङ्को लागि प्रस्थान गर्‍यौं । हङ्कङ पुगेको भोलिपल्ट चाइना ट्राभल सर्विस एजेन्सीमा टुरिष्ट भिसा सप्लाई गर्‍यौं । दुई चार प्रश्न सोधपुछपछि भिसा पाउने र नपाउने निर्णयको लागि भोलिपल्ट पाँच बजे मात्र सम्पर्क राख्नको लागि भनियो । भिसाको पर्खाइमा पूरा दुई दिन हङ्कङ्मा बस्नुपर्‍यो ।

भाग्यवश हामीलाई भिसा प्राप्त भएको जानकारी त्यत्तिखेर हामीले पायौं, जुन समयमा हामी ट्राभल एजेन्सी अफिसमा पुग्यौं । हामीसँग भीसा दरखास्त गर्ने अस्सी प्रतिशतले भिसा पाएनछन्‌ र भिसा पाउने बीस प्रतिशतमा हामी दुई पनि परेछौं । सुन्नेबित्तिकै हाम्रो खुशीको सीमा रहेन र हामी चीन यात्रा- बारेमा बढी जानकारी लिन हतारिन थाल्यौं ।

त्यहींबाट होटेल रिजर्भेसन र हवाई जहाजको टिकट लिए बेस हुने र अरू कष्ट उठाउनु नपर्ने कुरा त्यहाँ काम गर्ने कर्मचारीबाट हामीले सल्लाह पायौं । त्यसै अनुसार गुवाङ्चाउ, फुचाउ, नानचाङ र सांघाई-सम्मको हवाई टिकट लियौं र ती शहरहरूमा बस्ने होटेल समेत बुक गर्‍यौं । यस बापत लाग्ने शुल्क यु०एस०ए० डलरमा भुक्तानी दियौं । अब सांघाईसम्मको यात्राको लागि हामी ढुक्क भयौं ।

हामी भोलिपल्ट नै रेलद्वारा गुवाङ्चाउ पुग्ने र एक दिन गुवाङ्चाउमा डङफङ होटेलमा बस्ने निश्चय गरेका छौं । हामीले त्यही सल्लाह गर्‍यौं-यो पटक गुवाङ्चाउ शहर र साइड सिन हेर्ने र दोभाषे त्यहीं चाङ्सचलाई नै वन्दोवस्त गर्ने-यसमा हामी दुवैको सहमतिभयो ।

कति मान्छेलाई हामी चीन जाँदै छौं वा जान लागेको भनेर सुनाउन पाउँदा हामीलाई आनन्द प्राप्त हुने गरेको छ । जसले यो कुरा सुन्छन् तिनीहरूको लागि पनि यो साधारण कुरा नभएकोले एक्कासि-ए ! सरकारी निम्तोमा हो कि ? वा कुनै सेमिनारमा भाग लिन जान लागेको हो कि ? वा औषधिउपचार गर्न जान लाग्नुभयो ? आदि आदि प्रश्नहरू सुन्नुपर्थ्यो र त्यसको जवाफ हामीले दिनुपर्ने भएको छ । यी प्रश्नहरू नेपाली, भारतीय, पाकिस्तानी, अफगानी, बृटिश वा चीनियाँ सबै जातिका व्यक्तिहरूले सोधे, जसलाई हामीले आफ्नो चीन-यात्राको कुरा सुनायौं ।

छोपिएको वस्तुको जानकारी अझ चाँडो चाहिन्छ, यो मानवीय प्रवृत्तिले सबै जातिलाई गाँजेको हुन्छ । हङकङमै बस्ने धेरैजसोलाई चीनको बारेमा जानकारी छैन । जसलाई पुरानो चीनको जानकारी छ, नवचीनको बारेमा स्पष्ट जानकारी छैन, अनि जसले नयाँ चीन देखेको छ, त्यसलाई पुरानो चीनका बारेमा केही थाहा छैन । त्यही जानकारी पाउन त मान्छे उत्सुकताका साथ यात्रा तय गर्छ अनि इतिहासका पानाहरूमा रुमलिन पुग्छ ।

निश्चित कार्यक्रम-अनुसार हामी गुआङ्चाउ पुग्छौं । डङफङ होटेलमा पहिले पनि बसेकै हुँदा यसपटक हामीलाई सजिलो लाग्यो । होटेल रिसेप्सनमा गएर कोठा लियौं । दोभाषे हामीलाई जरूरत भएर नै दोभाषे वन्दोबस्त गर्ने कुरा गर्‍यौं । पहिलो यात्राको दोभाषे चाङ्सचलाई नै खटाइ पाउन अनुरोध गर्‍यौं, तर उनी बुक भइसकेकी रहिछन् । हामीलाई अर्को एक जना दोभाषे बन्दोबस्त गरिदिए ।

हामी कोठामा गएर सामान थन्क्याएर फेरि लविमा आइपुग्यौं । हाम्रो लागि खटिएकी दोभाषे हामी नजीकै आएर अंग्रेजी भाषामा भनिन्- 'हेलो ! मेरो नाम लिल्ली हो ! म तपाईंहरूको दोभाषे हुँ !'

बड़ी फूर्तिली, अग्ली र सलक्क मिलेको शरीर भएकी हँसिली र गोरी, बीस बाईस वर्ष उमेर अनुमान गर्न सकिने युवती देखेर गगन भनिहाल्छन्- 'यो चीन सुन्दरीहरूको शहर हो कि क्या हो ?'

मैले गगनले आश्चर्यका साथ व्यक्त गरेको उद्‌गारलाई चासो नै नदिएर, दोभाषेको नजीकै गएर हात मिलाएर औपचारिकता पूरा गरें र उनीसँग सोधें- 'तपाईंको चाइनिज नाम के हो नि ?'

'तपाईंलाई गाह्रो हुन्छ उच्चारणमा र फेरि बिर्सिनुहुन्छ । त्यसैले लिल्ली नै ठीक छैन र ?'- उनले बडो हँसिलो अनुहारमा व्यक्त गरिन् ।

'भन्नुहोस् न !'

'त्यसो त मेरो वास्तविक नाम लियाङ ली हो ! विदेशीहरूको लागि यो बड़ो अप्ठेरो छ । लियाङ ली भन्नु र लिल्ली भन्नुमा फरक पनि त्यत्ति छैन, त्यसैले विदेशीहरूले नाम सोद्धा लिल्ली नै भन्ने गरेकी हुँ । तपाईंहरूलाई पनि लिल्ली नै भन्न सजिलो हुँदैन र ?'- उनी आफ्नो भनाइलाई पुष्टि गर्दै नाउँको बारेमा व्याख्या गर्छिन् ।

'कुरा त तपाईंको ठीक हो ! तर मलाई अंग्रेजी नाउँभन्दा तपाईंको वास्तविक नाउँ नै सजिलो लाग्छ र राम्रो पनि लाग्छ !'

'हो ! तपाईं पहिलो विदेशी हुनुहुन्छ, यो कुरा गर्ने !'

गगन बीचैमा कुरा काट्दै भन्छन्-'आज दिनभर फुर्सद छ ! भोलि फुचाउ जानु छ, त्यसैले आज गुआङ्चाउ घुम्ने कार्यक्रम राख्नुपर्‍यो !'

उनको प्रस्ताव मनासिब भएको हुँदा कार्यक्रम तय गर्न लबिको एक छेउमा राखेको एक सोफामा बस्न जान्छौं, र गुवाङ्चाउको बारेमा संक्षेपमा जानकारी पाउनको लागि हामी दोभाषे लियाङ लीलाई अनुरोध गर्छौं ।

यो शहरलाई 'फ्लावर सिटी' भनिंदो रहेछ- मतलब पुष्पवाटिका । गुआङ्चाउ दक्षिण चीनको सबैभन्दा ठूलो र सुन्दर शहर करीब एक हजार स्क्वायर माइलमा फैलिएको रहेछ । राजनीतिक, आर्थिक र सांस्कृतिक दृष्टिकोणले यो शहरलाई चीनको मुख्यालय शहर मानिदो रहेछ । यो शहरको वातावरण र हावापानी बाह्रै महीना लगभग एकै किसिमको हुने हुँदा पनि यो शहरको महत्त्व अझै बढेको रहेछ – यो दोभाषे लियाङ लीबाट हामीले सुन्यौं ।

यो शहरको ऐतिहासिक पक्षबारे गगनले जान्न खोज्दा लियाङ ली भन्छिन्- 'यस शहरको इतिहास एक्काईस सय वर्षभन्दा अगाडिदेखि व्याख्या भएको देखिन्छ । चीनको हान वंशीय राजाहरूले शुरूमा यो शहरलाई राजधानी बनाएर यस शहरको कला र संस्कृतिको विकास गरेका रहेछन् । त्यसैले यो शहर अत्यन्तै पुरानो संस्कृति बटुलेर राख्न सफल भएको छ । विभिन्न राजवंश र विदेशी शक्तिले यो शहरलाई आ-आफ्नो किसिमबाट प्रयोग गर्दै आए ।' - भन्दै उनी भन्दाभन्दै एकछिन रोकिन्छिन् र भन्छिन्- 'मलाई त्यत्तिसाह्रो इतिहास र चीनियाँ संस्कृतिको बारेमा थाहा छैन ।'

अनि तपाईं त इतिहासकै कुरा बताउँदै हुनुहुन्छ ! फेरि थाहा छैन भन्नु-हुन्छ !'- म उनलाई शहरको बारेमा भन्ने निरन्तरता कायम गर्न जोड दिन्छु।

मेरो कुरा सुनेर उनी मुख छोपेर हाँस्छिन् । हामी दुवै उनैको नौलो अनुहार हेरिरहन्छौं । उनी बिस्तारै मुखबाट हात पन्छाउँदै हातले नकारात्मक संकेत गर्दै भन्छिन्- 'तपाईंहरूले मेरो भनाइ बुझ्नुभएन ! मेरो भनाइ हो- म इतिहासको विद्यार्थी होइन र इतिहासको डिटेल म जान्दिनँ ।'

'अनि के पढेको नि तपाईंले ?'- गगन सर्लक्क उनको अगाडि प्रश्न राखिदिन्छन् ।

'बिजिनेस एडमिनिष्ट्रेशनमा माष्टर डिग्री प्राप्त गरेर दुई वर्ष अंग्रेजी भाषाको अध्ययन पूरा गरेकी छु ।'- सरल किसिमबाट उनी उत्तर दिन्छिन् ।

'अनि व्यापार प्रशासन पढेकी तपाईं किन यो दोभाषे काम गरिरहनुभएको त ? आफ्नो पढाइ- अनुसार तपाईंले काम पाउनुभएन ?'-- गगन आफ्नो जिज्ञासालाई अगाडि बढाउँछन् ।

म बीचमै गगनको कुरा काट्दै लियाङ लीसँग प्रश्न गर्छु--'यो शहरको अरू महत्त्व-बारेमा बताउनुहोस् !'

'ए ! हामी अर्कोतर्फ लागेछौं !'- उनको ओठबाट एक मुस्कान फुस्कन्छ । म र गगन दुवै उनको अनुहारमा केन्द्रित हुन पुग्छौं ।

'चीनको इतिहासमा छिन वंशीय राजतन्त्रको अन्त्य गर्न यही शहरबाट बिगुल फुकियो र क्वामिङ्ताङ र कम्युनिष्टहरूको बीच भएको पहिलो सम्झौता पनि यही शहरले गर्ने सौभाग्य पाएको हो, यस हिसाबले यो शहरको महत्त्व विशेष छ ।'- उनी यो वाक्य नटुङ्गिँदै गम्भीर हुन पुग्छिन् ।

यो शहरको बारेमा गगन र म दुवैले एक एक गरी सोध्दै गयौं । लियाङ लीले आफूले जानेको जति बताउँदै गइन् । उनले पहिले नै भनेकी थिइन् कि उनी इतिहास-बारेमा ज्यादा जान्दिनन् । तर उनीसँगको कुराकानीले उनले यथेष्ट जानेको हामीले अनुभव गर्यौं । जति हामीले जानकारी पाए पुग्थ्यो, त्योभन्दा बढी हामीले यस गुआङ्चाउ शहरका बारेमा जानकारी पायौं ।

दक्षिण चाइनाको प्रमुख व्यापारी शहर मानिने यो गुआङ्चाउमा हामी पहिले आए पनि चीनियाँ माल सामान प्रदर्शन-कक्षमा मात्र गएर फर्किएका थियौं । आज हामीसँग समय छ । साइट सीन र शहर घुम्ने कार्यक्रम बनाउन नै हामी सल्लाह गरिरहेका छौं । मेरो भनाइ ऐतिहासिक महत्त्वका स्थानहरू घुम्न जाउँ भन्ने छ भने गगनले पुरानो बजार, बन्दरगाह र रेल स्टेशन आदि व्यापारिक स्थलहरू घुम्न जाने राय व्यक्त गरिरहेका छन् ।

शहर ज्यादै ठूलो तर हामीसँग समय कम भएको हुँदा आज दिनभरिमा जति सकिन्छ त्यति ठाउँ घुम्ने निर्णय भयो र हामी दुवैको चाहना अनुसार-घुमाउन लियाङ ली मन्जूर भइन् । हामी अब होटेलको लविबाट बाहिर टेक्सी स्ट्याण्डमा निस्कन्छौं ।

एउटा टेक्सीलाई दिनभरि नै भाडामा लिने हाम्रो निर्णय - अनुसार लियाङ लीले टेक्सी बन्दोबस्त गर्छिन् । भाडा कति पर्छ, कहाँ कहाँ घुम्ने र कति समयसम्म घुम्ने हामीलाई केही थाहा छैन । उनले भाडाको तय गरेर हामीलाइ सुनाउँछिन्- 'यसले एक सय पचास युआन भनेको छ ! हुन्छ कि हुँदैन ?'

कति रकम ठीक हो भन्ने हामीलाई के थाहा ? पहिलोपटक चीनको शहर घुम्न निस्किएको । गगन र म मुखामुख गर्यौं, हामी दुवैले लियाङ लीले गरेको निर्णयलाई नबोलीकन समर्थन जनायौं ।

लामो जापानी कार शायद ६ सिलिण्डरको ठूलो इन्जिन भएको अनुमान गर्न सकिने अत्यन्तै राम्रो र बस्दा आनन्ददायक लाग्यो । कारको अगिल्लो सीटमा लियाङ ली बसिन्

र हामी दुवै पछाडिको सीटमा वस्यौं । आवाज रहित यो विदेशी कार हामीलाई लिएर गुआङ्चाउ शहरको सफा र चौड़ा बाटोमा चिप्लन थाल्यो ।

शहरका ठूला र अग्ला घरहरू औंल्याउँदै- यो फलाना होटेल त त्यो ढिस्कना होटेल भनेर लियाङ लीले भन्न थालेपछि गगन भन्छन्- 'यो होटेलै होटेलको शहर हो कि क्या हो ?'

'होइन ! वर्षको दुईपटक व्यापार-मेला यहाँ लाग्न थालेपछि स्वदेश र विदेशका व्यापारीहरू यस शहरमा आउन थाले ! त्यसैले यहाँ होटेलको संख्या बढेको हो ! अझै धेरै ठूला-ठूला होटेलहरू बन्दै छन् ।'- लियाङ लीले सरल किसिमबाट उत्तर दिन्छिन् ।

बाटोमा निर्माण कार्य जोड़तोड़का साथ भइरहेको देखिंदै छ । साधारण मोटर चल्ने बाटो पनि कंक्रिट ढलान गरेर बनाईंदै छ । मेरो दृष्टि निर्माण कार्यतर्फ नियाल्न थाल्छ, मान्छे र मेशीन बराबरी प्रयोग भइरहेका छन् । ठाउँ- ठाउँ फ्लाइ ओभर बाटोहरू निर्माण भइरहेका छन् भने केही ठाउँमा फ्लाइ ओभर बाटोबाट हामी चढेको कार गुज्रिरहेको छ । यस शहरको नयाँ भाग साँच्चि नै विकसित मुलुकका शहर सरह निर्माण भइरहेको मैले अनुभव गरें ।

'शहर त सुन्दर रहेछ !'- गगनले प्रत्यक्ष देखेको अनुभव व्यक्त गर्छन् ।

'हो ! सुन्दर छ ! यसलाई कायम गर्न कति हात लागेका छन् । देख्नुहुन्न ?'- लियाङ ली गर्वपूर्वक स्वीकार गर्दै यस-पछाडिको लगानीलाई औंल्याउँछिन् ।

बाटोको दुवै किनारमा हरिया रूखहरू र फुटपाथ र सडकको बीचमा रङ्गीचङ्गी फूलले भरिभराउ, चौडाइ कम भए पनि सडक सँगसँगै लम्बिएको बगैचाले चीनियाँ भाषामा 'लु' भनिने ठूला सडकले शहरको सौन्दर्यलाई जीवन प्रदान गरेको छ ।

बाटैमा रहेको 'पाँच भेडाको मूर्ति' कारबाट हिड्दा- हिंड्दै देख्यौं । यो पाँच भेडाको मूर्तिले चीनियाँ संस्कृतिलाई झल्काइरहेको कुरा लियाङ ली बताउँछिन् । केही छिनमै हामी गुआङ्चाउको आर्ट ग्यालरीमा पुग्छौं । ग्यालरीमा आएका नयाँ र पुराना दुवै किसिमका चित्रकला हेर्ने हामीले मौका पाउँछौं । लियाङ ली कलाप्रेमी रहिछिन् । उनले कलाबारेमा व्याख्या गर्दा आफू कलाको पारखी नभएको र गगनलाई पनि त्यत्ति मन पर्ने नभएकोले हामी यहाँ त्यत्ति रमाएनौं । तरपनि उनले अनेकानेक ख्यातिप्राप्त कलाकारका बारेमा सविस्तार भन्दै गइन् !

हाम्रो दोस्रो स्थान डा० सनयात सेन मेमोरियल हॉल जहाँ डा० सनयात सेनको जीवन - गाथा स्पष्ट झल्कने झाँकी प्रदर्शन गरिएको छ । डा० सनयात सेन नै ती प्रथम महापुरुष हुन् जसले चीनियाँ जनतालाई शोषण र उत्पीडनको विरुद्ध आवाज बुलन्द गर्न घच्घच्याए । क्रान्तिको बिगुल फुक्न सिकाए र नागरिक हकको हितको लागि पुरानो परम्परागत रीतिस्थितिको विरुद्ध धावा बोल्न अगुवाई गरे ।

यो कुरा मैले सविस्तार गगनलाई सुनाएँ । गगनले चीनका बारेमा अझ जानकारी लिन लियाङ लीसँग अनेक प्रश्न राखे । लियाङ ली गगनलाई सम्बोधन गर्दै भन्छिन्- 'सनॅ

१९११ मा चीनका छिनवंशीय राजालाई पदच्युत गराउनमा यिनी नै मुख्य व्यक्ति हुन् । शायद, यिनले राम्रो सहयोगी पाएका भए आज चीन विश्वमानचित्रमा अर्कै हिसावले चिनिन्थ्यो होला !'

डा० सनयात सेन १९११को महान क्रान्तिका नेता भएकाले मात्र महान हुन पुगेका होइनन्-आफूलाई विश्वको धारा अनुरूप ढाल्दै र जनसमूहका आवश्यकताहरू पूरा गर्दै, रूससँग एकता गर्ने, कम्युनिष्ट पार्टीसँग सहयोग लिने र दिने, किसान मजदूरहरूलाई मद्दत गर्ने भएकाले उनको व्यक्तित्व महान् हुन पुगेको हो भनेर माओले भनेका छन् ।

डा० सनयात सेनका बारेमा धेरैले धेरै कुरा भनेका छन्, लेखेका छन्। तर उनले गर्न खोजेका कार्यको बाधक त्यसं समयको विश्वभर नै चम्केको युद्ध नै कारण साबित भएको सबैले अनुमान गरेका छन् । अनि विश्व- साम्राज्यवादको विस्तारको क्रम नै उदारता र राष्ट्रियताको हत्या हुन पुगेको थियो । त्यस बखत चीनमा राजतन्त्र हटे पनि त्यसका अवशेष र विश्व- साम्राज्यवादीहरूको प्रभुत्व अन्त हुन सकेको थिएन । - यो लियाङ लीको भनाइसँग म सहमति जनाउँछु ।

समय हाम्रो खाना खाने भएको हुँदा गगन खाना खान जाने आफ्नो आशय व्यक्त गर्छन् । खाना खान जानेमा लियाङ लीले पनि सहमति जनाउँछिन् । हामी नजीकैको एउटा रेष्टुराँमा खाना खान जान्छौं ।

खानाको लागि गगनले लियाङ लीलाई राम्ररी सम्झाउँछन् । हामीले खान सक्ने परिकार र तरीका-बारेमा दोहऱ्याई तेहऱ्याई गगनले उनलाई सम्झाए । त्यसै अनुसार लियाङ लीले खाना अडर गरिन् ।

गगनले पहिलो यात्रा सम्झना गर्दै लियाङ लीलाई प्रश्न गर्छन्- 'तपाईंले चाङसचलाई चिन्नुभएको होला ! जसले पहिलो हाम्रो चीन- यात्रामा दोभाषेको रूपमा हामीलाई सहयोग गरेकी थिइन् ।'

'किन नचिन्नु ! उनी मेरै साथी हुन् ! आश्चर्य मान्दै उनी हामीसँग प्रश्न गरेर आफू स्वयम्मा एकीन हुन चाहिन्छिन्- 'ए ! चाङसचलाई पनि तपाईंहरूले चिन्नुभएको छ ?'

हामीले 'हो' भन्न नपाउँदै लियाङ लीले चाङसच-बारेमा भन्छिन्-'उनी बडो आत्मसम्मान चाहने केटी हुन् । उनी कसैको अगाडि पनि झुक्दिनन् । साथै आफ्नो पेशामा अत्यन्तै बलियो विश्वास बोकेकी छिन् ।'

'हामीलाई पनि त्यस्तै लाग्यो !' मैले उनको भनाइलाई पुष्टि गर्दै भनें ।

'केही समस्या भयो भने म उनीसँग नै वेला-वेलामा परामर्श लिने गर्छु । यस मानेमा उनी मभन्दा परिपक्व छिन् !'

'ए ! उमेर त तपाईंको र उनको उस्तै जस्तो लाग्छ !'

'उमेर त एकै हो ! तर स्वभाव र आँट त फरक हुन्छ नि !'

'अँ, यो त हो !'

'कुण्ड कुण्ड पानी र मुण्ड मुण्ड बुद्धि भन्छन्। भनाइ यिनको मनासिब हो। सबै मान्छे मेशीन जस्तो एउटै कलपुर्जाले संचालन हुन सक्दैन ! सबैको समस्या एउटै हुँदैन र चाहना पनि । यो प्रकृतिको उत्पत्ति एउटै प्रकारको मनःस्थिति बोकेको पनि हुँदैन । कसैको शरीरले जाडो खप्न सक्छ भने कसैकोले सहन सक्दैन। कोही पहाडको ऊँचाइमा बेरोकटोक गएर फर्कन्छ भने कसैलाई श्वास- प्रश्वास बढेर जाने बाटोमा पर्खाल खडा भइदिन्छ । कसैले नीडरताका साथ आफ्नो बाटो तय गर्छ भने कसैको शंकाले आफैलाई खाइदिन्छ।'

हो ! उनको भनाइ ठीक हो ! सबैको मनःस्थिति एक हुँदैन । चाङसच साँच्चै नै बलियो मुटु भएकी एउटी हिम्मती केटी हो । यो कुरा मैले अहिले निश्चय गरें ।

मलाई लाग्छ लियाङ ली पनि चाङसच जस्तै एक्ली छिन् र यिनको घर पनि यहाँ होइन । म आफूले अनुमान गरेकोमा विश्वस्त भए पनि आफ्नो सोचाइलाई मूर्तरूप दिन म उनलाई उनको घरको बारेमा प्रश्न राख्छु ।

'तपाईं आफै भन्नुहोस् वा अन्दाज गर्नुहोस् म कहाँकी मान्छे हुँ ? – उनी ठट्यौलो स्वरमा मलाई नै प्रतिप्रश्न गर्छिन् ।

उनको भनाइबाट नै थाहा भयो कि उनी यो प्रान्तकी होइनन् । साथै, उनको रूप, व्यवहार र बोलीले पनि उनी उत्तरी चीनकै मान्छे हुन् । तर अब कसरी भन्ने कि तिमी यही प्रान्त वा शहरकी हौ भनेर ! त्यसैले मैले उनीसँग फेरि प्रश्न गरें ।

'साँच्चै नै जान्न चाहेको हो ?'- रमाइलो अनुहार-सँगसँगै प्रश्न गर्छिन् र भन्छिन्. 'मेरो होम-टाउन हवई प्रान्तको डिङछिङ शहरमा हो, जुन ज्यादै ठूलो शहर चाहिं होइन, तर बेजिङ त्यहाँबाट नजीकै छ ।'

'त्यसो भए तपाईंले बेजिङमै पढेको होला ?'

'हो, बेजिङमै पढेको हो ।'

'राजधानी छोडेर तपाईं यहाँ किन आउनुभएको त ?'

'त्यहाँभन्दा बढी तलब र सुविधा पाइन्छ भनेर ! फेरि भन्नेबित्तिकै तुरुन्त काम पनि त पाइन्न । यो शहरमा आएँ- राम्रो काम पाइएला र पैसा धेरै पाइएला, तर बेकार भयो।'

'तपाईं राम्रो काम गर्दै हुनुहुन्छ । हामी जस्तो साथी बनाउँदै हुनुहुन्छ। के यो राम्रो होइन र ?'

'सन्तोष प्राप्त नभएर पनि मन बहलिएको छ । काम गर्दै छु । ठीकै छ'- यति भन्दाभन्दै लियाङ ली गम्भीर हुन पुगिन् । अनुहारमा परिवर्तन देखिन थाल्यो! हाँसो हराएजस्तो भयो ! हामी पनि उत्तिकै चिन्तित हुन पुग्यौं! त्यसैले केही प्रश्न गर्ने आँट गरेनौं।

हामीले बुझिसक्यौं-यहाँ आफ्नो परिवारसँग बसेर जीवन नचल्ने रहेछ! कामको खटनपटनगा र कार्य संलग्नताको आधारमा मुलुकभरि जो जहाँ पनि जानुपर्छ र काम गरेर बाँच्नुपर्छ । यही राज्यको नियम हो र यसलाई सबैले पालना गर्नुपर्छ ।

प्रसंग बदल्दै गगन प्रश्न गर्छन्- 'तपाईंलाई विश्व-भ्रमण गर्न मन लाग्छ ?'

'हँ ! के भनेको ?' -- उनी अत्तालिंदै सोद्धछिन् ।

'तपाईंलाई चीनको मुलुक-बाहिर जान मन लाग्छ ?'

'यही त मेरो जीवनको मुख्य चाहना हो !'

'के भनेको ?'- गगन आश्चर्य मान्दै लियाङ लीसँग प्रश्न गर्छन् ।

'हो ! मलाई एकक्षण पनि यो देशमा बस्न मन छैन र यहाँका मान्छे पनि मलाई मन पर्दैन ! किनभने विश्वको बारेमा धेरै जानकारी पाएकी छु ! मुख्यतः मेरो स्किलको यो मुलुकमा कदर छैन !'

'किन आफ्नो क्षमता-अनुसार काम पाइएको छैन र ?'

'जो म जान्दछु, त्यो काम मैले कहाँ पाएकी छु र ! पढाइ सिद्धिने-बित्तिकै मलाई एउटा ठूलो औषधी कारखानामा--जुन मेरै प्रान्तको सियाच्वाङ शहर छ-खटाइएको थियो । अंग्रेजी भाषा-सम्बन्धी धेरै काम त्यहाँ थिएन । मैले जानेको र पढेको विषय व्यापार प्रशासन शाखामा मलाई काम नलगाई औषधीको बट्टामा लेभल लागेको ठीक छ कि छैन भनेर जाँच गर्ने शाखामा खटाइयो । त्यहाँ मैले सय दिन पनि काम गर्न सकिनँ ! म मेरो जीवनलाई मेशीन बनाउन सक्दिनथिएँ ।'- उनी भन्दाभन्दै रोकिन्छिन् र लामो सास फेरेर एकछिन चुप लागेर बस्छिन् । भित्री मनको चोटलाई दबाउन प्रयत्न गरिरहेको हुँदा उनको अनुहारमा नरमाइलो हुन पुगेको छ ।

म केही नबोली चुप रहेर उनको अनुहारलाई नियालिरहेको छु । उनी यो कुरा भन्न नचाहँदा नचाहँदै पनि भन्नुपरेकोमा दुःखित छिन् ! हामी परदेशी, एक दिनको पाहुना ! हामीले उनलाई के गर्न सक्छौं र ? उनको दुःखपूर्ण कुरा सुनेर हामीले आफैमा चुकचुकाउने र आफैमा दुःखी हुने बाहेक अरू केही हुन सक्दैन, त्यसैले म उनीसँग कुनै प्रश्न गर्ने पक्षमा छैन । तर यसैबीच गगनले मौनतालाई भङ्ग गर्दै चिन्तित स्वरमा एउटा सानो प्रश्न लियाङ लीलाई राख्छन्- 'के त्यहाँ नोकरी छोडियो ?'

यो प्रश्नले एक्कासि लियाङ लीको अनुहारमा रौनक पैदा गर्‍यो र उनी बनावटी हाँसो हाँस्दै ठट्यौलो भाषामा गगनलाई जवाफ दिन्छिन्- 'त्यहाँ नोकरी नछोडेर औषधीको बट्टैको लेभल चेक गरिरहेको भए म तपाईंको अगाडि कसरी हुन्थें ? तपाईं ठीक त हुनुहुन्छ ?'

यो भनाइले गगन नाजवाफ हुन पुग्छन् । म पनि लियाङ लीको परिवर्तित अनुहार हेर्नमा नै व्यस्त छु । फेरि लियाङ लीले गगनलाई सम्बोधन गर्दै भन्छिन्- 'माइण्ड नगर्नुहोस् ! मैले ठट्टाको कुरा गरेको तपाईं बुझ्न सक्नुछुन्छ होला !'

'हो ! बुझिरहेको छु ।'- बिस्तारै जवाफ दिन्छन् । लियाङ ली बिस्तारै भन्दै जान्छिन्- 'राज्यले खटाएको ठाउँमा काम छोडेपछि काम पाउन ज्यादै गाह्रो हुन्छ । कामको खोजीमा

म धेरै घुमें । यो शहर र त्यो शहर भौतारिएँ ! कहीं काम पाइनँ । लुगा र जुत्ता थोत्रिए ! कैयौं दिन भोकै परें । आमाको लुगा लगाउन थालें । सम्झनुहोस्, मैले ती दिनहरू ज्यादै दुःखका साथ काटें।'

'किन तपाईंका वा आमा थिएनन् र ?'

'बा छैनन्, आमा छिन् । साथमा एउटी बहिनी र एउटा भाइ पनि छन् । आमा एउटा हस्तकलाको कारखानामा काम गर्छिन् ! बस्ने घरबाट कारखाना पन्ध्र किलोमिटरको दूरीमा छ । आमा प्रत्येक दिन साठी किलोमिटरको दूरी साइकलद्वारा पूरा गर्छिन् ! भाइ-बहिनी नहुर्केसम्म आमालाई धेरै नै दुःख छ!'

त्यहाँको नियमानुसार कारखानामा बिहान चार घण्टा र दिउँसो चार घण्टा जम्मा दिनको आठ घण्टा काम गर्नुपर्छ र मध्याह्नमा लन्चको लागि कहीं अढाई घण्टा त कहीं तीन घण्टा छुट्टी दिने चलनले गर्दा दिनमा आराम गर्ने वा आफ्नो व्यक्तिगत काम गर्न पाइने सहुलियत प्राप्त छ । यस हिसाबले विचार गर्दा मान्छे जुन काममा संलग्न हुन्छ, उसले त्यसभन्दा अर्को बारेमा बोल्ने र सोच्ने फुर्सद नै पाउँदैन । राज्यको लागि यो राम्रो व्यवस्था हो । यो नियम सबै क्षेत्रमा लागू छ ।

लियाङ लीकी आमा बिहान सात बजे खाना खाएर एक घण्टा अगाडि घरबाट निस्कने र साँझ सात बजे काम सकेर फर्कने गर्दिरहिछिन् । हुन त मध्याह्नको छुट्टीमा घर फर्किए पनि केटाकेटीलाई खाना खुवाउन मात्र आउने हुँदा छुट्टीको अधिकांश समय आउन र जान नै ठीक हुने रहेछ । उनलाई साह्रै नै दुःख छ – यो भनाइ लियाङ लीको हो ।

गगनले लियाङलीको बाको बारेमा सोद्धा उनी भन्छिन्- 'लिबरेसन यानी कि सन् १९४९ पछि मेरा बाले चीनियाँ रेड आर्मीमा जागीर खाए ! मेरा बा अत्यन्तै बलवान् र हिम्मती थिए । उनको कमाण्डरले उनलाई मेन लाइण्ड चाइनाभन्दा टाढा टाढा सीमा सुरक्षा र नयाँ स्थान कब्जाको लागि पठाउने गर्थे, नजीक हुँदा वर्षमा १५ दिन र टाढा हुँदा दुइ वर्षमा एक पटक एक महीना मेरी आमा बसेको ठाउँमा आउँथे । अहिले सात वर्ष भयो फर्केका छैनन् । मेरा बा इनर मङ्गोलियामा उठेको आन्दोलन दबाउन आजभन्दा सात वर्ष अगाडि गएका थिए । त्यसपछिको कुनै खबर आर्मीको तर्फबाट वाँ राज्यको तर्फबाट प्राप्त हुन सकेको छैन ।'

'त्यसरी खबर नर्गनुको कारण के हो ?'

'खै ! त्यो त थाह छैन ! विद्रोहीले मारेको भए हामीलाई खबर गर्थे भन्छन्!'

'यस्तो पनि हुन्छ ?'

'यहाँ यस्तै हुन्छ !'- नमीठो बोलीमा लियाङ ली भन्छिन् ।

हामीले अडर गरेको खाना टेबुलमा आइपुग्छ । अब हाम्रो ध्यान खानामा केन्द्रित हुन्छ । भोक लागेको हुँदा स्वादलाई हामीले त्यत्ति ध्यान दिएका छैनौं । म र गगन चम्चा काँटा प्रयोग गरेर खाना खान थालेका छौं भने लियाङ लीले चपस्टिक प्रयोग गरेकी छिन् । उनी खानाको स्वाद लिंदै भन्छिन्- 'चीनमा यात्रा गर्ने तपाईंहरूले चपस्टिकबाट खाना खान सिक्नुपर्छ ।'

उनको भनाइलाई साथ दिंदै हामीले चपस्टिक चलाउने कोशिश गर्‍यौं । उनले समाले तरीका सिकाइन् । तर यति सजिलै जानिने कुरा पनि होइन । त्यसैले हामीले खानाको लागि चम्चा काँटा नै प्रयोग गर्‍यौं । खाना खाँदा- खाँदै यसपछिको कार्यक्रम निर्धारण गर्ने कुरा चलाइयो । गगन पुरानो शहर हेर्न जाने भन्न थाले । हामीसँग समय काफी भएको र गाडी समेत भएको हुँदा अन्य रमाइलो ठाउँमा जाने मैले राय व्यक्त गरें । हामी दुवैको प्रस्तावलाई लियाङ लीले स्वीकार गरिन् र पहिले एक दुई ठाउँ जाने र त्यसपछि साँझ पुरानो शहर घुम्न जाने निर्णय भयो । त्यसै अनुसार खाना खाएर हामी निस्कियौं ।

हामीले कारद्धारा घुम्ने यात्रा जारी राख्यौं । सर्वप्रथम हामी चेनक्लेन टेम्पल गयौं । अत्यन्त सफा र रमणीय यो स्थान भरखर निर्माण गरिएको रहेछ । यसको महत्त्वभन्दा यहाँको सफाइ र कालीगडी हेर्न हामी व्यस्त भयौं । त्यस्तै बगैचाको बीचमा अत्यन्तै सुन्दर शैलीमा निर्मित गुआङसिआउ टेम्पलमा पनि पुग्यौं । त्यस्तै,- सिक्सबेनयान टेम्पल जुन प्राचीन चीनले निर्माण गरेको थियो--पनि हेर्‍यौं । घुम्दाघुम्दै वेला ढल्किसकेछ ।

कार्यक्रम अनुसार पुरानो शहर हेर्न गयौं । यो त साँच्चै नै पुरानो यूरोपेली शैलीमा निर्मित ठूला-ठूला भवनहरू देख्यौं । चौड़ा सडक, त्यसको दुवैतिर करीब बीस फुटको फुटपाथ, एउटै नाप नक्शाले निर्मित चारतले भवन, भवनको भूइँतल्ला करीब बीस फुट अग्लो र भवनको पहिलो तलाले ढाकेर बसेको हुँदा शहर हेर्न योग्य रहेछ । हामीले गाडीलाई छोडेर बजार हेर्दै एक साइडको फुटपाथबाट हिंड्न थाल्यौं ।

पसलहरूमा मान्छेको घुइँचो छ । साँझ भएकोले होला घुइँचो भएको, मैले अनुमान गरें । तर होइन रहेछ । यहाँ सबै दिन सबै समय भीड नै लाग्ने रहेछ । कारण, गाउँ-गाउँबाट किनमेल गर्न आएका र अर्को शहरवाट घुम्न आएका मान्छेहरूको भीड रहेछ । पसलमा हामी पनि पस्यौं । सबै मालको मूल्य देख्ने किसिमबाट लेखेर राखेको हुँदा किनमेल गर्न सजिलो लाग्यो ।

हामीले साना ठूला पसल हेर्दै गयौं । गगनले आफ्नो शङ्का निवारण गर्न सोध्दछन्- 'के यी पसलहरू व्यक्तिका हुन् वा राज्यका ?'

'यी सबै राज्यका हुन् !'

मान्छेहरू आफ्नै पसल जस्तो गरी मिहिनेतका साथ काम गरिरहेका छन् नि ?'

'गर्नुपर्छ ! नगरे यो पसलको जिम्मा लिएको मेनेजरले भोलि निकालि-दिन्छ । त्यसैले आफ्नो भन्दा बढी सम्झेर काम गर्नुपर्छ ! मेनेजरलाई खुशी तुल्याउनुपर्छ!'

'यहाँ व्यक्तिको पसल छैन ?'

'छैन भने पनि हुन्छ ! भए पनि सानो आफ्नो उत्पादनको सामान राज्यसँग पूर्वस्वीकृति लिएर मात्र बेच्न पाउँछ !'

हामी यस्तै यस्तै कुरा गर्दै अगाडि बढिरहेका छौं । ठाउँ-ठाउँमा पुलिसको पोष्ट छ । सडकमा पनि पुलिसहरू ट्राफिक कन्ट्रोलको लागि कार र मोटरसाइकलमा दगुरिरहेका छन् । फुटपाथमा हिंड्ने र सडकमा कुद्ने समेतले हामीलाई एकपटक हेर्ने गरेका छन् । हामी त्यहाँ गैर चीनियाँ मान्छे भएको-ले होला वा हामी जस्तो मान्छे नै नदेखिने भएकाले होला,

प्रायः हाम्रो नजीक आइपुग्ने मान्छेहरूले हामीलाई नियालेर हेर्ने अथवा कसै-कसैले मुख विगारेर हाँस्ने गरिरहेका छन् । यसबाट हामीलाई केही अप्ठेरो पनि महसूस भइरहेको छ।

यसरी बजार हेरेर हिंड्दा-हिड्दै हामी कल्चरल पार्कको ढोका-नजीकै पुगेछौं । हाम्रो कार पनि त्यहीं रहेछ । लियाङ लीले यो पार्कभित्र घुम्न जाने बारेमा हामीसँग सोधिन् । पार्क-भित्र घुम्ने हाम्रो सहमति पाएपछि ड्राइभरसित केही कुरा गरेर उनी फेरि हाम्रो नजीकै आइपुगिन् र हामी तीनै जना पार्कभित्र पस्यौं । पार्कमा केटाकेटीले खेल्ने विभिन्न मनोरञ्जनका आधुनिक उपकरणहरू जडिएका रहेछन् । बीच भागमा विशाल खुल्ला रंगमञ्च रहेछ । हरेक साँझ सात बजेदेखि दश बजेसम्म चीनियाँ लोक-संस्कृति झल्कने नाच-गान हुने रहेछ । साँझ पर्न थालेको हुँदा मञ्चको अगाडि मान्छेहरूको समूह झुम्मिन लागिसकेको छ ।

केटाकेटीले चढ्ने रेल र हवाइजहाज र करेन्टले चल्ने मोटरमा मान्छेको क्यू लागेको छ । शारीरिक प्रदर्शन देखाउने,- मोटर - साइकल कुदाउने र जादू देखाउने ठाउँमा पनि भीड छ । साँझको समय, खुला पार्क, मान्छेको आकर्षण हुनु स्वाभाविकै हो, घुम्दाघुम्दै एउटा पार्कको कुनामा पुग्छौं, जहाँ रङ्गीविरङ्गी फूलहरू फुलिरहेका छन् । यहाँ केही बेर बस्ने मैले आशय व्यक्त गरें । म र लियाङ ली एउटा मेचमा बस्यौं र गगन पार्कको अर्को भागमा घुम्न गए ।

मैले विस्तारै लियाङ लीलाई सम्बोधन गर्दै भनें- 'लियाङ ! चीन त मलाई रमाइलो लाग्यो ! यहाँको विकास देखेर म प्रभावित भएँ ! हुन त पुरानो चीन पनि कम त रहेनछ ! मलाई चीन-बारेमा केही जानकारी दिन सक्नुहुन्छ ?'

लियाङ ली मुस्कुराएर म-तर्फ फर्किन्छिन् र भन्छिन्- 'तपाईंले जो देख्नुभयो त्यो भन्नुभयो ! नयाँ वस्तुले मान्छेलाई आकर्षण गर्छ । बस, त्यही हो तपाईंमा परेको प्रभाव, मान्छेको भित्रको इमान र बेइमानी बाहिरी शरीर ढाकेको लुगा देखेर अनुमान गर्न सकिन्न ! त्यसैले राम्ररी चिन्नको लागि भित्रसम्म बुझ्ने कोशिश गर्नुहोस् ! जो तपाईंले देख्नुहुनेछ । अनि भन्ने गर्नुहोस् !'

लियाङ लीको भनाइमा उनी-भित्रको आक्रोश पोखिएको छ । उनको भनाइ मैले नबुझेको होइन ! तर मेरो सरल सोचाइ र भनाइलाई उनले मोड दिएपछि मैले-उनीसँग केही भन्ने हिम्मत गर्दिनँ । उनको कुरा सुनेपछि मैले आफ्नो प्रतिक्रिया हाँसेर मात्र दिएँ । उनी मतर्फ फर्केर भन्छिन्- 'तपाईंले चीनको बारेमा के जान्न चाहनुभएको ?'

मैले उनलाई राम्ररी सम्झाएर भनें- 'सन् १९४९ मा जब घोङ्चाङ्ताङ यानी कि माओको कम्युनिष्ट पार्टीले चीनको राज्य-सत्ता सम्हाल्यो, त्यो समयदेखि चीनको बारेमा विश्वजनसमुदायले केही थाह पाउन सकेन । चीन र चीनियाँ जनता विश्वको राजनीतिक, आर्थिक र सामाजिक प्रभावबाट अलग्गिए र एक्लिए । यसबाट क-कसलाई फाइदा पुग्यो र नोक्सानीमा को रहेछ ? यस्तै यस्तै, जानकारी लिन चाहेको हुँ !'

'तपाईं मलाई पढ्नुहोस् ! पूरा चीन म हुँ !'- लियाङ लीले अत्यन्तै भावुक स्वरमा मलाई भन्छिन् । 'हो! समाजको प्रत्येक सदस्यले त्यस देशको अवस्थाको प्रदर्शन गरिरहेको हुन्छ !'- मैले आफ्नो भनाइ नटुङ्ग्याउँदै गगन आइपुग्छन् र भन्छन्- 'हेर ! यहाँ धेरै बिग्रिएका केटीहरू रहेछन्'- गगनले आफ्नो भाषामा मलाई सम्बोधन गर्दै भन्छन् ।

'कसरी अनुमान गर्‍यौ ?'- म गगनलाई प्रश्न गर्छु ।

'तिमीहरूलाई छोडेर म एक्लै घुमिरहेको थिएँ । केटीहरू पछि लागेर टुटेफुटेको अंग्रेजीमा मसँग कुरा गर्न आए !'

'ठीक छ ! बस !' - बस !'- भनेर गगनलाई बसाएँ । यो कुरा हामीले हाम्रो भाषामा बोलेको हुँदा लियाङ लीले बुझ्न सकिनन् । तै पनि हाम्रो कुरा जानकारी पाउन उत्सुकता साथ कहिले गगनको र कहिले मेरो अनुहारमा हेरिरहिन्।

मैले यो कुरा लियाङ लीलाई भन्ने वा सोध्ने कुरा ठीक सम्झिनँ, त्यसैले मैले कुरामा मोड दिन लियाङ लीसँग भनें- 'त्यो खुला मञ्चमा कति वेलादेखि कार्यक्रम शुरू हुन्छ ? हामीले आज चीनियाँ कार्यक्रम हेर्ने विचार गरेका छौं कि छैनौं ?'

'हेर्ने हो भने शुरू हुने समय धेरै बाँकी छ !'- उनले उत्तर दिइन् ।

'हो, समय पनि बाँकी छ । कार्यक्रम हेर्ने नै हो भने या त समय घुमेर काट्नुपर्‍यो या त गफ गरेर । म केही भन्ने स्थितिमा भइनँ। यसैबीच गगनले बिस्तारै लियाङ लीलाई सम्बोधन गर्दै भन्छन्- 'यदि तपाईं माइण्ड् गर्नुहुन्न भने एउटा कुरा सोधूँ ?'

'सोध्नुहोस् !'

'के यहाँ बिग्रिएका केटीहरू पनि छन् ? मतलब शरीरको व्यापार गर्ने !'

'किन छैनन् ! जत्ति भए पनि छन् !'- निःसंकोच लियाङ लीले उत्तर दिइन् ।

'चीनमा यस्तो छ भनेर हामीले कल्पना पनि गरेका थिएनौं !'

'यो निमुखा र औसरहीनताको उपज हो !' – लियाङ लीले आफ्नो अनुभव बताइन् ।

'के तिनीहरूलाई सरकारले छाडा छोडेको छ ?'

'छाडा छोडेको पनि छैन र नियन्त्रण गरेको पनि छैन ! भनेजस्तो काम नपाएपछि मान्छेको मानसिकता बिग्रन्छ अनि समाजमा यस्तै विकृति पैदा हुन्छ!'

लियाङ लीको भनाइमा मेरो सहमति भएको हुँदा उनको भनाइलाई टाउको मात्र हल्लाएर सांकेतिक सहमति जनाउँछु । उनको बोलाइमा ओजन छ र परिपक्वता पनि देखिन्छ । विचारमा दृढता भएको पाइन्छ । उनले कुनै पनि विषयमा भन्दा स्पष्ट भन्ने गरेको मैले महसूस गरेको छु भने निर्भीकताका साथ आफ्नो विचारलाई व्यक्त गर्ने गरेको पनि अनुभव गरेको छु ।

हामी पार्क छोडेर होटेलतर्फ लाग्छौं । होटेलमा पुगेर टेक्सीलाई पेमेन्ट गर्छौं र लियाङ लीलाई सँगै खाना खाने अनुरोध गर्छौं । उनी भन्छिन्- 'यदि खाना खाने समयमा

मेरो आवश्यकता छ भने म बस्छु, होइन भने मेरो साथीलाई साँझ भेट्ने समय दिएकी छु । यदि तपाईंहरू अप्ठेरो मान्नुहुन्न भने म खानाको लागि साथ नदिऊँ कि ?'

गगनले ठट्यौलो पारामा लियाङ लीलाई छेडिहाले- 'साथी केटी हो कि केटा हो ?'

'केटा हो ! मेरो ब्वाय फ्रेन्ड !'

'साँझ क्लब जाने हो कि ?'

'वास्तवमा ठीक भन्नुभयो !'

'हामीसँग पनि चिनजान गराउने कि ?'

'हुन्छ !'- भन्दै लियाङ लीले एउटा कागजमा चीनियाँ भाषामा होटेलको ठेगाना लेखेर हामीलाई दिन्छिन् र भन्छिन्- 'तपाईंहरूलाई आउन इच्छा लाग्यो भने न्यूमेन ल्याण्ड होटेल चीनियाँ भाषामा सिनताती पिनहवा भन्छन् । यो कागजमा लेखिदिएकी छु, टेक्सी ड्राइभरलाई यो कागज देखाएपछि पुग्यादिन्छ । त्यो होटेलमा नाइट् क्लब छ, त्यहाँ आउनुहोस् ।'

'हुन्छ ! हामी पक्कै आउने कोशिश गर्छौं, बरु ठीक आठदेखि सवा-आठ बजेसम्म होटेलको लविमा कुर्नु है !'- भनेर गगनले कार्यक्रम निश्चय गरेको बेहोरा उनलाई भने।

मैले 'जाने र ?' भनेर सोधेको जवाफमा गगनले पुनः जाने राय व्यक्त गरे । त्यसपछि हामी आउने नै निर्णय गरेर लियाङ लीलाई विदा दियौं ।

अहिले साँझको छः मात्र बजेको छ । हामीसँग दुई घण्टा समय छ । हामीले साँझको खाना खाएर जाने निर्णय गर्‍यौं र साटेको पैसा सकिइसकेको हुँदा डलरबाट युआन साट्न बैंकतर्फ लाग्यौं ।

सटही काउन्टरमा लाइन रहेछ, हामी लाइनमा उभियौं । त्यही लाइनमा लागेको एउटा मान्छेले हामीलाई 'हेलो' भनेर सम्बोधन गर्‍यो, मैले पनि प्रति-उत्तरमा 'हेलो' भनेर औपचारिकता पूरा गरें । देख्दा चाइनिज देखिने त्यो भलादमीले हामीसँग अंग्रेजी भाषामा- 'तिमीहरू कुन ठाउँबाट आएका हौ ?' भनेर सोध्यो र हामीले जवाफ दिदैं उनका बारेमा पनि सोध्यौं । उनी चीनियाँ मूलका अमेरिकन नागरिक रहेछन् । सनफ्रानसिस्को शहरमा यिनको बसोबास रहेछ र तयारी पोशाकको व्यापारी रहेछन् । हामी दुवै थरी परदेशी भएको हुँदा बडो छोटो अवधिमा एक अर्काको जानकारी प्राप्त गर्‍यौं र नेमकार्ड आदान-प्रदान गर्‍यौं । कार्ड अनुसार यिनको नाम फिलिप चाङ रहेछ । मैले कार्डको नाम उच्चारण गर्दै उनीसँग सोधें- 'हो' भन्ने उनको प्रति-उत्तर सँगसँगै गगनले पनि काम सकिसकेका थिए । हामी फेरि पछि भेटौंला-भन्ने आशा व्यक्त गर्दै हामी आफ्नो कोठातर्फ लाग्यौं ।

भोलि फुच्यान प्रान्तको क्यापिटल सिटी फुचाउ जाने हवाइजहाज बिहान सबेरै छ । हामी सात बजे नै होटेल छोड्नुपर्ने हुँदा सामानहरू मिलाउँछौं र केही बेरपछि साँझको खाना खान रेष्टुराँतर्फ लाग्छौं ।

रेष्टुराँमा ज्यादै भीड छ । केही खाली टेवुलहरूमा 'रिजर्ब्ड' को बोर्ड टाँगएको छ । हेर्दै जाँदा चार छःओटा मेच भएको टेवुलमा पनि एक जना मान्छे बसेर टेबुल ओगटेको देखिन्छ । हामी अलमलमा पर्यौं । हामीले निधो गर्यौं - अर्को रेष्टुराँमा जाउँ भन्ने-त्यहाँबाट निस्किएर अर्कोमा पस्यौं । यहाँ पनि त्यत्तिकै भीड छ । खाली टेबुल खोज्न हामी अगाडि बढ्दै गयौं । एक्कासि मैले 'हेलो' को आवाज सुनें र यसो फर्केर हेर्दा त अघि भरखर भेट भएको फिलिप चाङ पो रहेछ ।

'के टेबुल खोजेको हो ?'- उनले सोधें ।

'हो !'

'भीड छ ! यदि चाहनुहुन्छ भने यही टेबुलमा बस्न सक्नुहुन्छ !'

'तपाईंको कोही साथी छैन ?'- भनेर सोध्दै मैले उनलाई भनें - 'तपाईंलाई अप्ठेरो लाग्दैन भने हामी बस्छौं !'

खुशी भएर उनले हामी दुवैलाई मेचमा बसाले । उनले आफ्नो खाना अडर गरिसकेका रहेछन् । हामीलाई मेनु दिंदै खाना अडरको लागि भने । हामीले आफ्नो आवश्यकता-अनुसार खाना अडर गर्यौं ।

फिलिप चाङ्को कुरा यहाँका चीनियाँहरूसँग मिल्दो रहेनछ । मतलब, एक अर्कासँग सशङ्कित रहेछन् । चीनियाँ नै भए पनि यिनको रहन - सहन र कुरा गर्ने तौर-तरीका पश्चिमेली जस्तो भइसकेको रहेछ । फेरि विदेशमा चीनियाँहरूलाई ओभरसीस चाइनिज भनेर यहाँका चीनियाँहरूले भिन्दै किसिमले बस्ने हेर्ने र व्यवहार गर्नाले गर्दा पनि फिलिप यहाँका चीनियाँहरूसँग सन्तुष्ट रहेनछन् । हामीसँग नजीक्किनुको कारण यही रहेछ ।

मैले व्यङ्ग्यात्मक शैलीमा उनीसँग प्रश्न गरें- 'तपाईंलाई मिष्टर फिलिप भनूँ वा मिष्टर चाङ ! आधा नाउँ अमेरिकन छ भने आधा नाउँ चाइनिज छ ! दुवै शब्दले तपाईंलाई सम्बोधन गर्दा मलाई अप्ठेरो लाग्छ ! भन्नुहोस् तपाईंलाई कुन नाउँबाट सम्बोधन गर्दा मन पर्छ ?'

मेरो कुरा सुनेर उनी एक छिनसम्म हाँसे अनि हाँसो सम्हाल्दै उनले सरल किसिमबाट भने- 'तपाईं बाठो हुनुहुन्छ ! तपाईं मलाई बुझ्ने कोशिश गरिरहनुभएको छ ! म भन्दिनँ ! तपाईंलाई जुन सजिलो लाग्छ त्यही नामले सम्बोधन गर्न सक्नुहुन्छु !'

हामी यस्तै यस्तै रमाइला कुरा गरेर एक अर्कासँग नजीक हुन खोज्दै छौं । करीब चालीस वर्ष उमेर भएको अनुमान गर्न सकिने फिलिप चाङ हाम्रो बारेमा जानकारी लिंन अनेकानेक प्रश्न गर्न शुरू गर्छन् । बोल्दा बोलीमा वजन र हँसिलो अनुहार मात्र होइनन् आफूमा लागेको कुरा तुरुन्त बोलिहाल्नुपर्ने रहेछ । यो अनुमान मैले त्यत्तिखेर गरें जतिखेर उनले गगनको कोटको कल्लर नमिलेको कुरा औंल्याउँदै कोटको कल्लर मिलाउन लगाए । उनको स्वभाव-बारेमा हामी जानकार भएपछि उनीसँग कुरा गर्न हामीलाई सजिलो हुँदै गयो ।

वर्तमान चीनको व्यवस्था र पुरानो चीनको अवस्था - बारेमा पनि हामी कुरा गर्न थाल्यौं । प्राचीन चीनदेखि मध्ययुगीन चीनको सभ्यता र सांस्कृतिक विकासका बारेमा चर्चा चल्यो । यिनलाई चीनियाँ संस्कृति वारेमा धेरै जानकारी रहेछ, शायद चीनबाट बाहिर बसेकोले होला आफ्नो जातीय संस्कृति, धर्म र चीनियाँ समाजको इतिहास यिनले अध्ययन गरेका । यिनको भनाइमा-चीनियाँ सभ्यता र संस्कृति अरूको भन्दा भिन्न छ र सर्वोत्कृष्ट छ ! यो जसले तुलनात्मक अध्ययन गरेको छ, त्यसले मात्र थाहा पाउँछ !

हामी पुरातन चीनका बारेमा छलफल शुरू गर्छौं । उनी भन्छन्- 'ईसापूर्व दुई हजार वर्षदेखिको इतिहास चीनमा मौजूद छ । जबकि यूरोप र अमेरिकालाई धर्म, संस्कृति र सभ्यताको अत्तोपत्तो थिएन । एशिया नै विश्व मानव सभ्यताको स्रोत हो ! चीन र भारत नै यसका अग्रणी हुन् ।'

'हाल चीनमा त कुनै धर्म र संस्कृति छैन ! होइन ?'- गगन उनीसँग प्रश्न गर्छन् ।

'हो ! नै भन्नुपर्‍यो ! चीनियाँ संस्कृति - क्रान्तिले प्राचीन चीनियाँ धर्म र संस्कृतिलाई सामन्तवाद र साम्राज्यवादको पृष्ठपोषक भनेर नयाँ चीनियाँ संस्कृति स्थापना गर्ने अभियान सञ्चालन गरेर इतिहास मेट्ने प्रयत्न गर्‍यो । पुरानो कला र संस्कृति मासिन थाल्यो । तर मासिन गाह्रो हुँदो रहेछ । अहिले पुनः प्राचीन कला संस्कृतिलाई पुनर्जीवन दिन करोडौं हातहरू जुटेका छन् । चीनियाँ धर्म संस्कृति र सभ्यताको यति लामो इतिहास चीनियाँ मान्छेको रगतबाट मेटिन सक्दो रहेनछ भन्ने कुरा वर्तमान तानाशाही सरकारका संचालकहरूले बुझे होलान् । किनभने तिनीहरू पनि चीनियाँ नै हुन् !'- भन्दाभन्दै उनी रोकिन्छन् ।

'चीनमा धर्मावलम्बीहरू छन् ?'- म उनीसँग आफ्नो जिज्ञासा जाहेर गर्छु ।

'सांस्कृतिक क्रान्ति यति डरलाग्दो थियो कि यति छोटो समयमा बयान गर्न सकिन्न ! युगौं युगदेखि स्थापित समाजको मूल्य र मान्यतालाई बन्दूकको मोहरीले परिवर्तन गर्न खोज्दा के हुन्छ ? त्यो तपाईंहरू नै अनुमान गर्न सक्नुहुन्छ ।'- भन्दै उनी एकछिन रोकिन्छन् र भन्छन्- 'हेर्नुहोस् ! मान्छेहरू मर्न तयार भए, तर धर्म छोडेनन् ! धेरै मरेर गए, आफ्नो धर्म र संस्कृतिको रक्षाको लागि क्रान्ति बन्द भयो, बाँचेकाले अहिले फेरि धार्मिक कृत्यहरू गर्दै छन् ।'

हामी उनको कुरा सुन्न व्यस्त छौं । उनी भन्दै जान्छन्- प्राचीन चीनमा विभिन्न धर्महरू थिए, पछि बौद्ध धर्म नै मुख्य धर्म भयो । त्यस्तै पुरानो धर्ममा अहिले पनि बाँचिरहेको धर्मको नाम हो- तावज्याव - यस धर्मले थाइ साङ लाउ जुइङ मतलब आकाशको राजालाई मान्छ, त्यो अदृश्य शक्ति, जसले यो भूमण्डललाई संचालन गरेको छ, त्यही नै ईश्वर हो भनेर मान्ने यो वर्ग मुख्य चीनको विभिन्न भागमा छरिएर बसेका छन् । यो धर्म मान्नेहरूले विवाह गर्नु हुँदैन र यिनीहरूलाई- 'ताउस' भनिन्छ ।

हामीलाई थाहा थिएन, चीनमा फेरि धार्मिक कार्यहरू संचालन भए भनेर ! फिलिप चाङ चीन आएर काम गर्न थालेको पाँच वर्ष भएछ । यहाँ आउन थालेपछि प्रायः चीनको सबै भूभाग घुमिसकेका रहेछन् । घुम्न त यिनी व्यापारको काममा घुमेका हुन्, तर यिनको

चाख-अनुसार प्राचीन चीनलाई चिन्ने कोशिश रहेछ । यिनले भने- चीनका बारेमा उनको अध्ययनको कारण- चीनबाट उनको परिवारको निर्वासित जीवन रहेछ ।

फिलिप चाङ तीन वर्षको हुँदा उनको बाबु र आमाले लिएर अमेरिका गएका रहेछन् । उनलाई अलि अलि मात्र सम्झना छ - हप्तौंको समुद्री यात्रा । चीनमा जन्मेको हो भनेर उनका बा आमाले भनेको बाहेक उनलाई केही थाहा छैन- यो उनको भनाइ हो ।

उनी आफ्नो बारेमा बताउँदै भन्छन्- 'आजभन्दा करीब एक सय वर्ष अगाडि मेरा हजुरबाले सांघाईमा एक हजार तान एउटै छतमुनि राखेर विशाल कपडा मिल स्थापना गरेका रहेछन् । त्यो सबै मेशीन त्यस समयमा जर्मनीबाट आयात गरिएको रहेछ । मिल यसरी चल्यो कि दश वर्षभित्र अरू तीन ठाउँमा मिल स्थापना गर्नुपर्ने भएपछि बेलायतबाट आधुनिक मेशीनहरू मगाई निङ्वो, उहान र जियाङ्सी शहरहरूमा मिल स्थापना गरेछन्। त्यतिखेरको चीनको हामी इनेगिनेको मील मालिक - मध्येमा रहेछौं । तर समय- चक्र कसले बुझ्ने र बुझ्न सक्ने । हामी चीनमा टिक्न सकेनौं र १९४८ मा बा आमाले मेरा अरू दुई जना दाज्यू र एक जना बहिनी लिएर बा आमा प्रशान्त महासागर पार हुनुभयो ।'

हामीले उनीसँग यसबारेमा कुनै कुरा सोध्ने हिम्मत गरेनौं, कारण उनले यो भन्दाभन्दै आफ्नो अनुहारमा चिन्ता पोखिएको र आँखा पनि रसाइसकेको उनलाई थाहा नै भएन । उनी चुप रहे र हामी पनि ।

टेबुलको मौनतालाई बिउँझाउँदै उनले अडर गरेको खानां आइपुग्छ । हामीलाई पनि खानामा साथ दिन आग्रह गर्छन् । हामी आपसमा यति नजीकिसक्यौं कि उनको आग्रहलाई टाल्न सकौं, यसै-बीच हाम्रो खाना पनि आइपुग्छ । हामी सबै खाना बाँडेर खान थाल्छौं ।

उनी आफ्नो कार्य-परिचय दिन्छन्- 'मेरा बा टेक्सटाइल विशेषज्ञ भएको कारणले हामीले रेडिमेड गारमेन्टको व्यापार शुरू गर्न सजिलो भयो ।'

'कहिलेदेखि यो व्यापार शुरू गरेको ?'

'बस् ! १९५० को शुरूदेखि नै बाले यो काम शुरू गरे ! सनफ्रान्सीस्कोमा पचास प्रतिशतभन्दा बढी चीनियाँ मूलका मान्छेहरूको बसोबास छ । ती सबै चीनबाट भागेर गएका हुन्,यो भाग्ने क्रम १९१० देखि शुरू भएको हो । यी भागेर गएका चीनियाँहरूलाई त्यहाँको सरकारले मद्दत गर्‍यो । मेरा बाले त्यस समयमा शून्यबाट व्यापार शुरू गरेका हुन् । तर आर्थिक दृष्टिकोणले विचार गर्दा हामी पुरानै अवस्थामा पुग्न लागिसकेका छौं'- भन्दै उनी भन्छन्- 'मान्छेको उन्नतिको लागि खुला वातावरणको आवश्यकता पर्छ! होइन र ?'

उनको प्रश्नलाई म 'येस्' बाहेक केही भन्दिनँ । गगन खानामा व्यस्त छन् । उनी समय-समयमा चपस्टिकबाट खाने अभ्यास गरिरहेका छन् । फिलिप चाङले पनि ढीलै खाएका छन् । उनलाई खानाभन्दा कुरा गर्न रहर बढेको छ ।

उनी एक्कासि मलाई सम्बोधन गर्दै भन्छन्- 'तपाईंलाई थाहा छ ? हामीले कपडा खरीद गर्दा हाम्रो नै मिलको कपडा किन्ने हामीले कोशिश गर्‍यौं र केही गारमेन्ट यहाँ

वनाउँथ्यौं त केही अमेरिकामा नै झिकाउँथ्यौं । म आएपछि त अरू ठाउँको कपडा किन्न नै छोडे । तर थाहा छ ? मील घाटामा चलेको छ भने हामी अत्यन्तै फाइदामा छौं । हुन त यो संयोग हो !'

'सत्य, सत्य नै हुन्छ !'- म उनको भावनालाई कदर गर्दै भन्छु ।

'यो कुराले मलाई नै अनौठो लागिरहेछ !' उनको विश्वास बोल्छ ।

नयाँ जानकारीको सँग-सँगै खाना पनि सकिन्छ । उनी खुशी भएर भन्छन्- 'यो खाना मेरो तर्फको हो !'

'होइन ! यसो नगरूँ !'

'मैले तपाईंहरूलाई मेरो टेवुलमा बोलाएको हुँ ! त्यसैले तपाईंहरू मेरा पाहुना हुनुहुन्छ !'

यति उनले भनेपछि हामीले केही भन्ने कुरै भएन । उनीलाई हामीले अहिले भरखर चिनेका हौं ! तर कुराकानीको दौरान यति तेज गतिमा भयो कि हामी वर्षौं पुराना साथी जस्ता भयौं । चीनियाँ चलन-अनुसार पाहुनालाई विशेषरूपमा मान गर्ने हुँदा उनले आफ्नो चलन जाहेर गरे । हामीले अन्यथा लिने कुरा पनि भएन ।

हामी रेष्टुराँबाट लवितर्फ आयौं । आठ बज्न लागिसकेको छ । हामी उनीसँग छुट्टिन हात मिलाउँछौं । उनी भोलि बिहानै सांघाई जाने रहेछन् । हामी पनि तीन दिनपछि सांघाई पुग्ने कुरा सुनाएपछि हामीलाई सांघाईको ठेगाना दिदैं भन्छन्- 'सांघाईमा जरूर भेट्नुहोला ! हामी रमाइलो गरौंला है !'

'हुन्छ !!'- को जवाफसँगै हामी उनीसँग छुट्टिन्छौं र लवि-बाहिर पुगेर न्यूमेन लाइण्ड होटेल जानको लागि टेक्सी समात्छौं !

नजीकै रहेछ । चाँडै नै पुग्यो । ढोकाको छेउमा लियाङ ली र एक जना केटा बसिरहेका रहेछन् । हामी टेक्सीबाट उत्रिएर उनीहरू-नजीकै पुग्यौं । लियाङ लीले आफ्नो साथीलाई चिनाउँदै भनिन्- 'मिष्टर चाउयाङ ! मेरा ब्वाय फ्रेन्ड हुन् !'

'हेलो ! हेलो !!' को उच्चारण- साथ हामी हात मिलाउँछौं ।

चाउयाङ अंग्रेजी जान्दा रहेछन् । उनले हामीसँग हाम्रो परिचय अंग्रेजी भाषामा माँगे र हामीले जवाफ दियौं । लियाङ लीले आज दिनभरि हामीसँगै घुमेको र हामी रमाइला मान्छे रहेछौं भनेकी रहिछन्- यो कुरा चाउयाङले भनेपछि हामीलाई थाहा भयो ।

एकछिन हामी उभिएर कुरा गर्दा थाहा भयो चाउयाङ र लियाङ ली एउटै प्रान्तका रहेछन् । अलि अलि नाता पर्ने भए पनि विवाह गर्न मिल्ने रहेछ । हाल यिनीहरू आ-आफ्नो अफिसले खटाएका डोमेट्रीमा बसेका हुँदा उनीहरू घर पाउनेबित्तिकै विवाह गर्ने निर्णयमा पुगेका रहेछन् । राज्यबाट घर पाउन ज्यादै कठिन छ । उनीहरूले एक वर्ष भएछ, घरको लागि निवेदन दिएको, तर आजसम्म पाएका रहेनछन् । निवेदन दुवैले आ-आफ्नो काम गरेको कार्यालय मार्फत गरेका छन् । जुनबाट चाँडो मिल्यो त्यही घर स्वीकार गर्ने पनि

यकीन गरेका रहेछन् । यसबाट थाहा भयो- यिनीहरूको विवाहको विलम्ब यिनीहरूकै राज्यबाट भएको रहेछ ।

चाउयाङ्ले जीनको कसिलो पाइन्ट र ज्याकेट लगाएका छन् । यिनी लियाङ लीको समान उमेरका देखिन्छन् र जोडी अत्यन्तै सुहाएको छ, मैले मनैमनमा यिनीहरूको रोजाइ ठीक भएको अनुभव गरें ।

चाउयाङ पत्थरमूर्ति निर्यात गर्ने कम्पनीमा काम गर्दा रहेछन् । मूर्तिहरू अमेरिका, बेलायत, फ्रान्स, जर्मनी र सिङ्गापुर निर्यात हुने रहेछ । त्यहाँ यिनी सेल्स रिप्रिजेन्टेटिभको काम गर्ने रहेछन् ! आज उनले पहिलोपटक यो नाइट्-क्लबमा लियाङ लीलाई निम्ता गरेका रहेछन् । यी कुराहरू सबै क्लबमा पुग्नुभन्दा अगाडि थाहा भयो ।

क्लबमा युवक-युवतीहरू आ-आफ्नो जोडीमा टेबुल - टेबुलमा बसेका छन् । हामी पनि एउटा टेबुलमा गएर बस्यौं । मैले लियाङ ली र चाउयाङ्लाई भनें- 'आज यहाँको बिल हामी पे गर्छौं ! तपाईंहरू जे चाहनुहुन्छ मगाएर खान वा पिउन सक्नुहुन्छ !'

उनीहरूले पनि खाना खाएर आएका हुँदा सफ्ट ड्रिंक मात्र गर्ने आफ्नो विचार व्यक्त गरे । पिउनुभन्दा नाच्ने उनीहरूको धोको रहेछ । हामी रमिते भयौं । संगीतको तालमा सबै युवक-युवती उठिरहेछन्, यताउता हिंडी रहेछन्। समय-समयमा नाचिरहेछन् अनि धेरै बेर नाचेपछि थकाइ मेट्न टेबुलमा आउने गर्छन् । केही खाने र पिउने क्रम पनि जारी छ । हामी पनि फ्लोरमा हल्लन पुग्छौं । यस कारणले कि हामी आफूलाई असभ्य देखाउन चाहँदैनौं ।

यस्तै संगीतमय साँझ संगीतको गुञ्जन र बिजुलीको झल्याकझुलुकमा दश बजिसकेको छ । हामी हिंड्ने तरखर गर्छौं । लियाङ ली र चाउयाङ हामीलाई बाहिर टेक्सीसम्म छोड्न आउँछन् । हामीलाई टेक्सी बन्दोबस्त गरिदिएर दुवैले एकै स्वरमा भन्छन्- 'फेरि भेटौंला, शुभ रात्रि !'- हामीले पनि उनीहरूलाई त्यही जवाफ फर्काउँदै भन्छौं- 'अग्रिम बधाई छ ! तपाईं हरूको जो डीलाई !'

=★=

# - ६ -

चाइना टाउन-यो नवनिर्मित चीनियाँ संस्कृति झल्कने सानो बजार हो । लामो र चौडा बाटो, त्यहाँ ढुङ्गा छापेको र चीन झल्कने किसिमबाट निर्मित बजार हामीलाई नौलो लागेको छ । सबै किसिमका सामान बिक्रीका लागि राखिएका छन् । हामी नौला वस्तुहरूको अवलोकन गर्दै अगाडि बढिरहेका छौं । यो सांघाई शहरमा हेर्ने र घुम्ने धेरै ठाउँ छ । पहिलो दिन हामी घुम्न निस्केका हौं ।

हामी फुचाउ र जियाङसी हुँदै हिजो बिहान सांघाई आइपुगेका हौं । हिंजो दिउँसो र आज बिहान आफ्नो काम सकिसकेका छौं । काम धेरै थिएन । सामान निरीक्षण गर्नु थियो, त्यो भयो । नयाँ कामको लागि भोलि बिहान भेट्ने कार्यक्रम छ । अहिले फुर्सदमा 'जेड बुद्ध' दर्शन गर्न भनेर यहाँ आएका हौं । ठाउँ अत्यन्तै रमणीय छ । ठूलो बगैचा, बीच-बीचमा पानीको नदी जस्तो खोल्सो ! तर्न पुलको व्यवस्था र पुराना शैलीका चीनियाँ कलाले भरिएको बगैचा मनमोहक छ ।

बगैचा पार गर्दै जाने बाटोमा मन्दिरहरू आउँछन् । हरेक मन्दिरमा बुद्धको विभिन्न औतारी रूप अंकित विशाल मूर्तिहरू स्थापना भएका छन्, र मूर्तिको अगाडि धूप बाल्ने ठूलो धुपौरो राखिएको छ । जहाँ मान्छेहरूले धूप बाल्ने गर्छन् । गुरुहरू कालो लुगा लगाएर डमरु र घण्ट बजाएर आफ्नो भाषामा बुद्धको स्तुति गर्दै छन् । मन्दिरैपिछे सयौंको संख्यामा काला पहिरन भएका गुरुहरू धर्म कार्यमा व्यस्त छन् ।

यस्तै मन्दिर पार गरी अन्तमा एक मन्दिर आयो । दुई तीन कोठाहरू पार गरेपछि 'जेड बुद्ध' को दर्शन पाइयो । बुद्धको मूर्ति सिंहमरमरमा कुँदिएको, करीब चार फुट लामो, दाहिने हातको सिरानी लगाएर गोडा खुम्च्याएर दायाँ नै कोल्टो परेर सुतेको, अत्यन्तै सुन्दर बुद्धको दर्शन पाइयो । मूर्तिको निधारमा लाम्चो खालको टपक्क टीका लगाएजस्तो 'जेड' जो मूल्यवान् ज्वाहरात हो - जडिएको छ । त्यसैले 'जेड बुद्ध' भनिएको होला । त्यो सुन्दर मूर्ति देखेपछि आस्तिक नास्तिक सबैले घुँडा टेकेर आफ्नो सिर झुकाउँछन् । कसैले जानेर र कसैले नजानेर भए पनि बुद्धको सामु नतमस्तक हुन्छन् किनभने त्यहाँ घुँडा टेकेर

शिर निहराउने थलोको व्यवस्था गरिएको, एक जनाले गरेको देखेपछि अर्कोले पनि गरिरहेकै हुन्छ, वा सुन्दर मूर्ति देखेपछि श्रद्धाले अनायास मान्छेको शिर निहुरिन्छ ।

दर्शन सकेर हामी बगैचा-बाहिर निस्कन्छौं त हामीलाई ल्याउने गाडी देख्दैनौं । हामीलाई हाम्रो सम्बन्धित कम्पनीले बिहान आउँदा मोटर दिएको थियो । हामीले सोचेका थियौं त्यो मोटर हामीलाई कुरेर बस्छ । तर त्यो हिंडिसकेछ । होटेल फर्कन तुरुन्तै टेक्सी पाएनौं, बिस्तारै हिंडेर जाऔं, जहाँबाट टेक्सी पाइन्छ त्यहींबाट चढौंला भन्ने विचारले अगाडि बढ्यौं । फुटपाथ र सडकको बीचमा फलामे बारले गर्दा टेक्सी रोक्ने वा टेक्सी चढ्ने कुरै भएन । अन्दाजको भरमा बाटो समायौं, एक घण्टा हिंडिसक्दा पनि हामीले टेक्सी पाएनौं ।

पहिले हामीले सोचेका थियौं-हिंड्दै जाँदा टेक्सी पाइहालिन्छ । त्यसलाई होटेलको कार्ड देखाइदियो भने होटेल पुर्‍याइदिइहाल्छ भन्ने साधारण विचार लिएर अगाडि बढेका हामी जति हिंडे पनि हामीले देखेको र चिनेको ठाउँ फेला पर्दैन र कुनै टेक्सी हाम्रो रोक्ने इशारामा रोकिंदैन । हिंड्दा हिंड्दा हामी दुवै थाकिसक्यौं । तिघ्रा र पिंडुँलामा कैंडा लागेर हिंड्न नसक्ने अवस्थामा पुगिसकियो । बाटोमा वा पसलमा अंग्रेजी बोल्ने र साधारण वाक्य जान्ने मान्छे पनि फेला पार्न सकेनौं ।

धेरै पछि हामीलाई होटेलमा टेलिफोन गर्ने र टेक्सी मगाउने विचार सुझ्यो हाम्रो दिमागमा ! अब हामी टेक्सी होइन टेलिफोन खोज्न पसल-पसल चहार्न थाल्यौं । टेलिफोन कहीं कतै छैन । एक दुई ठाउँमा टेलिफोन फेला पार्‍यौं, ताला मारेर राखेको छ । इन कमिङ कल मात्र आउने व्यवस्था मिलाइएको छ । त्यस्तो टेलिफोनबाट हामी टेलिफोन गर्न सक्दैनौं । तीन घण्टा बितिसक्यो हामी सांघाई शहरको फेरो मार्दै छौं । बल्ल-बल्ल सार्वजनिक हुलाकमा पुगेछौं र त्यहाँबाट हाम्रो होटेलमा फोन गर्‍यौं र भन्यौं- 'हामीलाई अंग्रेजी बोल्न जान्नेले चलाएको टेक्सी पठाउनुपर्‍यो !'

टेलिफोन अप्रेटरसँग सोधेर होटेलको रिसेपसनिस्टले भने- 'तपाईंहरू कतै नगई कुरिराख्नुहोस्, टेक्सी आइपुग्छ ।'

अब यताउता जाने पनि कुरा भएन । हिंड्दा हिंड्दा थाकिसकेका थियौं । छेउकै पसलको स्टुल मागेर बस्यौं । पसलमा काम गर्ने कामदारहरू हामीलाई हेरेर आपसमा कुरा गर्थे र रमाएर हाँस्थें । शायद हाम्रो बारेमा अनेकानेक अनुमान गरेर कुरा गर्न थालेका छन् । धेरै बेरको पर्खाइपछि टेक्सी आइपुग्यो । ड्राइभर टेक्सीबाट उत्रिएर हाम्रो नजीकै आएर अंग्रेजी भाषामा सोध्दछन्- 'तपाईंहरूले टेक्सी खोजेको होइन ?'

हामी अत्यन्तै खुशी भयौं । ड्राइभरसँग गएर हात मिलायौं । उसको अगाडि खुशी व्यक्त गर्दै मैले भनें- 'तपाईं अंग्रेजी जान्नुहुँदो रहेछ, हामीलाई खुशी लाग्यो !'

'होइन ! धेरै जानेको छैन ! अलि अलि सिक्दै छु !'

'तपाईंको नाम के हो ?'

'मेरो नाम लीसाउ तोङ हो, तर तपाईंहरूले मलाई ली भने हुन्छ !'

हामी मोटर- नजीकै पुग्छौं । गाडी मर्सिडिज बेन्च कार रहेछ, लामो सलक्क परेको, ६ सिलिण्डर पेट्रोल इन्जिन भएको यो कार महँगो र पेट्रोल धेरै खपत हुने विश्वका शौखीन व्यक्तिहरूले मात्र प्रयोग गर्ने गरेको कार टेक्सीमा चलेको देख्दा मलाई अचम्भ लाग्यो र सोधें– 'यहाँ पेट्रोल सस्तो छ कि क्या हो ?'

'ठीकै छ, प्रति -लिटर सात झाउ पर्छ !'- लीले तुरुन्त जवाफ दिन्छन्।

हिसाब गरी हेर्दा सस्तै रहेछ । दश झाउको एक युआन हो । एक लिटर पेट्रोल एक युआनभन्दा कममा पाइनु भनेको विश्वमा सबैभन्दा सस्तो पेट्रोल यहीं रहेछ । मैले मनमनै विचार गरें - त्यसैले त ६ सिलिण्डरको गाडी टेक्सीमा चलेको रहेछ ।

हामी गाडीको पछाडि सीटमा बस्छौं । हामी बसेको तोङपिङ हुवा माने सेन्ट्रल होटेलतर्फ गाडी अगाडि बढ्छ । आरामदायी मर्सिडिज कारमा फराकिलो र सफा सडकमा हामी चिप्लिरहेका छौं।

'तपाईंहरू कहाँ कहाँ घुम्नुभयो ?'- गाडी चलाउँदा- चलाउँदै लुकिङ ग्लासमा हेरेर ड्राइभरले हामीलाई सोध्छन् ।

'यहीं'जेड बुद्ध'अहिले घुमेर आएका हौं, अरू घुम्न बाँकी छ ।'

'तपाईंहरू घुम्न आएका हुनुहुन्छ कि व्यापारमा आएका हुनुहुन्छ ?'

'पहिलो व्यापार र दोस्रो घुम्न !'

'यी दुवै सहयोग मबाट तपाईंहरूलाई प्राप्त हुन्छ !'

यिनको यो भनाइ हामीलाई स्पष्ट भएन । गगनले पनि मसँग सोधे । त्यसैले मैले उनलाई उनको भनाइ स्पष्ट गर्न भनें । यिनको भनाइ अनुसार उनको टेक्सी रिजर्भ गरेर हामी सांघाई घुम्न सक्छौं र व्यापार गर्ने हो भने पनि उनले शहरका विभिन्न मान्छे चिनेका छन्, जसलाई चिनजान गराएर वा सम्बन्ध राम्रो स्थापित गराएर व्यापार गराउन सक्छन् ।

हामीले उनीसँग यसबारेमा छुट्टै सल्लाह गर्ने कुरा गर्यौं । उनी भन्छन्- 'यो शहरमा म जस्तो अनुभवी र अंग्रेजी जान्ने ड्राइभर पाउन सक्नुहुन्न !'

हुन सक्छ उनको भनाइ ठीक हो, तर उनले आफ्नो महत्त्व प्रदर्शन गरेर पैसा कमाउने दाउँमा लागेका छन् कि !

'किन अंग्रेजी जान्ने मान्छेले टेक्सी चलाउँदैन ?'- गगनले उनीसँग प्रश्न गर्छन् ।

'पढेको मान्छे टेक्सी चलाउन आउँदैन । ड्राइभरहरू साधारण मात्र पढे- लेखेका हुन्छन् । ड्राइभिङ काम गाह्रो छ !'

'तपाईंले कसरी अंग्रेजी जान्नुभयो त ?'

एउटा किताब देखाउँदै उनले भने- 'बिहान बेलुका र फुर्सतको समयमा यो किताब पढ्ने गर्छु र तपाईंहरू जस्तो विदेशीसँग बोल्ने अभ्यास गर्छु, यही नै मेरो स्कूल हो ।'

उनले यो भाषा पूर्णरूपले नजाने पनि कामचलाउ बोल्न जानेका छन् । शहरमा यति बोल्न जान्ने नपाएर आफूले भरखर दुःख पाइयो । यिनको भनाइलाई विचार गर्दै यिनको

टेक्सी हामीले लियौं भने दोभाषेको पनि जरूरत पर्दैन । यो विषयको सल्लाह हामी दुवैले गर्छौं र सांघाई बसुन्जेल यही गाडी भाडामा लिने निर्णय गर्छौं ।

लीलाई सम्बोधन गर्दै म सोद्धछु- 'यदि हामीले तपाईंको टेक्सी दिन-भरि लियौं भने कति भाडा पर्छ ?'

'होटेल मार्फत लिनुभयो भने दुई सय पचास युआन पर्छ ! सोझै मसँग लिनुभयो भने एक सय पचास युआन मात्र दिए हुन्छ । तपाईंहरूले होटेलमा तिर्दा एफ० इ० सी० तिर्नुपर्छ र मलाई रेमेवी भए भइहाल्छ । त्यो हिसाबले हेर्ने हो भने तपाईंहरूको एक सय मात्र एफ०इ०सी० खर्च हुन्छ । कारण, बजारमा एक सय एफ०इ०सी० को एक सय पचास रेमेवी पाइन्छ । त्यसैले मसँग सोझै कुरा मिलाएर गाडी भाडामा लिनुभयो भने तपाईंहरूलाई धेरै सस्तो पर्छ ।'- उनी फटाफट भन्दै जान्छन् ।

'यति सस्तो पेट्रोल छ । यति महँगो किन त ?'- गगन उनीसँग प्रश्न गर्छन् ।

उनी यसको जवाफ दिन रुचाउँदैनन् । उनी फेरि दोहऱ्याउँछन्- 'कहिल्यै पनि कुनै पनि चीजको होटेलबाट भाउताउ नगर्नू वा बन्दोबस्त नगर्नू, बाहिर सोझै सम्पर्क गर्दा आधाभन्दा बढी सस्तोमा कुरा मिल्छ । यहाँको नीति नै छ-'विदेशीलाई सकेसम्म चर्को भाउ लगाएर असूल गर, ताकि धेरै दिन टिक्न नसकोस् ।'

हामी यस्तै कुरा गर्दागर्दै होटेल आइपुग्छौं । हामीले टेक्सीबाट उत्रनुभन्दा अगाडि 'आज र भोलि गाडी प्रयोग गर्छौं, बसिराख, कोठामा पुगेर आउँछौं'- भन्छौं ।

उनले हामीलाई भने-यो पटकको पचास एफ०इ०सी० होटेल काउण्टरमा गएर तिरिदिनुहोस् किनभने होटेलले पठाएको हो । पछिको हामी नै कुरा गरौंला । त्यही अनुसार हामीले गर्यौं ।

हामी आफ्नो काम सकेर घुम्न जानको लागि होटल बाहिर निस्कियौं। लीसाउ तोङ टेक्सीमा कुरेर बसेका रहेछन् । हामी उनको गाडीभित्र पस्यौं र भन्यौं- 'हामीलाई कहाँ-कहाँ घुमाउने हो ? कार्यक्रम बनाउनुहोस् !'

'घुम्ने ठाउँ धेरै छ ! पुरानो ठाउँ घुम्ने कि नयाँ ठाउँ घुम्ने ?'

'यहाँबाट जुन-जुन नजीक छ, त्यही हेर्दै जाऔं ।'

'पुरानो शहर हुँदै पुरानो बन्दरगाहमा जाऔं, हुँदैन ?'

हामीले केही भन्नै परेन, गाडी स्टार्ट हुन्छ र अगाडि बढ्छ । खुल्ला सडक किनारामा हरिया रूख र साइकल चल्ने र मान्छे हिड्ने बेग्लाबेग्लै फुटपाथ, सडक भरखरै बढारेको जस्तो सिनिक्क चिप्लो सडकमा विश्वभरमा बनेका गाडी दुगुरिरहेका छन् ।

प्रायः ठूला र राम्रा गाडी टेक्सीमा चलेका छन् ।

पुरानो शहरमा प्रवेश गर्छौं ! बेलायत र बर्लिनलाई बिर्साउने दरबारहरू रहेछन् । बीच-बीचमा बजार आए पनि गुवाङ्चाउकै जस्तो फराकिलो फुटपाथ र त्यसलाई ढाकेर

बनाइएको घर देखिन थाले । यस शहरलाई हेरेर अनुमान गर्न सकिन्छ, यी कुनै पनि भवनहरू एक सय वर्ष यताका होइनन्।

हुन त सांघाईको आफ्नो इतिहास छ । जापान, कोरिया, मङ्गोलिया र उत्तरी चीनको व्यापारी केन्द्रको रूपमा परिचित सांघाईमा सयौं वर्षसम्म यूरोप, अमेरिका, जापान र भारतका समेत व्यापारीहरूले व्यापार जमाएका थिए । त्यसताका यो सांघाई नै उद्योग र व्यापरको प्रमुख केन्द्र सावित भएको हुँदा विश्वको सबैजसो मुख्य भागसँग आवत-जावतको लागि पहुँच थियो । उन्नाईसौं शताब्दीको मध्यदेखि एक शताब्दीसम्म यो शहरमाथि विदेशी व्यापारीको दबदबा बढ्यो । व्यापारिक दृष्टिकोणले यो समयमा ज्यादै ठूलो परिमाणमा व्यापार बढ्यो र सांघाई शहरलाई विश्वमान-चित्रमा ठूलो अक्षरले लेख्न कर लाग्यो ।

हेर्दाहेर्दै शहरको किनारामा पुग्यौं । गाडी पार्क गरेर बन्दरगाहतर्फ लाग्यौं । 'सिफेस हाउस' समुद्रतर्फ फर्किएका विशाल दरवारहरू ढुङ्गाले निर्माण गरेको टड्कारो देखिन्छ । बन्दरगाह पनि प्राकृतिक नभएर मानव निर्मित देखियो । समुद्रको गहिराइलाई जहाज-योग्य कायम गरेर निर्माण गरिएको यो समुद्री किनार तारीफयोग्य छ । यो कुन समयमा बनेको हो जानकारी पाउन नसकिए पनि करीब असी नब्बे वर्ष अगाडि नै बनेको अनुमान गर्न सकिन्छ!

समुद्री किनारमा घुम्न हजारौं हजारको संख्यामा मान्छेहरू आउने रहेछन् । त्यसैमध्ये हामी पनि हौं । त्यहाँ फुटपाथमा हिंड्ने विदेशी पनि देखिन्छन्।अप्रिलको महीना, घाम झलमल्ल छ, त्यसैले पनि रमाइलो छ । गगन फोटो खिंच्न व्यस्त हुन्छन् र म विशाल भवनका बारेमा सोच्न व्यस्त छु ।

म विचार गर्छु-कुनै समयमा यी भवनहरू कुनै व्यक्तिको थियो होला । त्यो व्यक्तिले यस भवनभित्र बसेर कति आनन्द प्राप्त गर्ने रहर बोकेर यो भवन निर्माण गरेको होला? अहिले उ बाँचेको छ वा मरेको छ ? बाँचेको भए कहाँ र कुन अवस्थामा होला ?

म लीसँग प्रश्न गर्छु- 'यी भवनहरूलाई अहिले कसरी प्रयोग गरिएको छ?'

उनले औंल्याउँदै भन्छन्- 'यसतर्फ केन्द्र सरकारका कार्यालयहरू छन् भने त्यसतर्फ राज्य सरकारका कार्यालयहरू छन् अनि ती भवनहरूमा चाहिं स्थानीय व्यापारिक कम्पनीहरू छन्।'

'तपाईंको आफ्नो घर छ ?'- मेरो अनभिज्ञता जाहेर गर्छु ।

'आफ्नो होइन ! राज्यले दिएको घर छ, तर स-साना दुई कोठामात्र ! दश युआन प्रति-महीना तिरे पुग्छ ।'

'ए ! राम्रो रहेछ त ! अनि श्रीमती र बच्चा- बच्ची ?'

'एउटी एक वर्षकी छोरी छिन् र श्रीमती एउटा पसलमा सेल्सम्यानको काम गर्छिन् ।'

'छोरा छैन ?'

'त्यही त भनेको मैले, मेरी श्रीमतीलाई जरिवाना तिर्नुपरे पनि तिरौं, एउटा छोरा जन्माऊँ भन्दा मान्दिनन् ।'

'किन छोरा पाउँदा जरिवाना लाग्छ ?'

'एउटाभन्दा बढी सन्तान भयो भने राज्यले जरिवाना गर्छ ! हाम्रो चीनमा छोराको बढी चाह छ ।'

'छोरा र छोरी एउटै होइन र ?'

'हो ! तर के गर्नु ? चित्त बुझाउनैपर्ने रहेछ'- नरमाइलो किसिमबाट लीले भने ।

'यो हुनु राम्रो होइन र ?'

'राम्रो होइन भनेर मैले कहाँ भन्न सक्छु ? राज्यले बनाएका सबै नियमहरू राम्रा हुन्छन् भन्ने भनिएको छ, त्यसैले हामी केही बोल्दैनौं ! बोल्न चाहेर पनि कहाँ गएर बोल्ने ? बोल्ने ठाउँ त हुनुपर्‍यो ! अध्यक्ष माओको भनाइ थियो विश्वमा चीनियाँ जनसमुदायको विशेष स्थान हुनुपर्छ । त्यस समयमा परिवार नियोजनको कुनै कार्यक्रम नै थिएन । त्यसैले कुन राम्रो, कुन नराम्रो ?' उनी आफ्नो किसिमबाट बयान गर्छन् ।

गगन आइपुग्छन् । ली र मेरो बीचको कुराकानी रोकिन्छ । हामी खुला स्थानबाट आर्को बगैचामा पुग्छौं । त्यहाँ मेचहरू राखिएका छन् । हामी तीनै जना गएर बस्छौं । चीनियाँहरूमा पनि विभिन्न अनुहार रहेछ, हामी केलाउन थाल्छौं । यसैबीच लीसाउ तोङले हाम्रो काम-बारेमा सोधखोज गर्न थाल्छन् । अलि गहिरिएर सोधेको हुँदा म उनको कुरालाई बढी चाख दिन्छु । उनको भनाइ अनुसार- 'यहाँ एक जना अत्यन्तै प्रभावशाली व्यक्ति छन्, उनी विदेशी व्यापारीलाई भेट्न चाहन्छन् । यो भेटबाट व्यापार बढ्न सक्छ, त्यसैले भेट्नु बेस छ ।'

त्यस व्यक्तिसँग भेट्ने इच्छा जाहेर गर्दै मैले उनलाई भनें - 'हुन्छ ! तपाईं भोलि कुनै पनि समयमा भेट्ने कार्यक्रम तय गर्नुहोस् !'

उनी खुशी भएर नजीकै भएको टेलिफोन बुथमा गएर टेलिफोन गर्छन् । टेलिफोन गर्दागर्दै मलाई बुथमा बोलाउँछन् । म उनी नजीकै जान्छु, भोलि दिउँसो दुई बजे समय दिएछन् र दोभाषे कुन भाषाको बन्दोबस्त गरीराखौं भनेर सोधेका रहेछन् । हाम्रो स्थिति जानकारी नै भएको हुँदा लीले अंग्रेजी भाषामा भनिदिए । ली टेलिफोन राखेर खुशी व्यक्त गर्दै भन्छन्- 'तपाईंहरूको काम बन्यो भने मलाई पनि हेर्नुपर्छ है !'

'ठीक छ, भोलि भेटौं, कुरा गरौं !'- भनेर, लीलाई आस्वस्थ पार्दै भनें।

'तपाईंले चिन्ता लिने विषय यो होइन ! यो हाम्रो चिन्ताको विषय हो !'

मेरो कुरा सुनेर उनी ढुक्क भए । साँझ पर्न लागिसकेको हुँदा केही किनमेल गर्न जाने राय व्यक्त गर्‍यौं । उनले भने- 'तपाईंहरूसँग कुन मुद्रा छ- यु०एस० डालर, एफ०इ०सी० वा रेमेवी ?'

'डलर पनि छ र एफ०इ०सी० पनि छ ! रेमेवी छैन हामीसँग ?'

'किनमेल गर्न रेमेवी प्रयोग गर्नुभयो भने तपाईंहरूलाई फाइदा हुन्छ ।'

'रेमेवी कसरी बन्दोवस्त गर्ने ?'

'म गरिहाल्छु नि ! एक सय एफ०इ०सी० को एक सय पचास र एक सय यु० एस० डलरको पाँच सय पचास रेमेवी आउँछ !'

उनको कुरामा हामीलाई विश्वास भयो र एक सय डलर साट्न भनेर दियौं । हामीलाई एकै छिन त्यहीं बस्नको लागि भनेर मोटर लिएर गए र करीब आधा घण्टामा आइपुगे । त्यसपछि हामी बजारको लागि प्रस्थान गर्‍यौं ।

लीले भने- 'तपाईंहरूलाई विदेशीले खरीद गर्नुपर्ने फ्रेण्डशिप स्टोरमा पहिले लान्छु । त्यहाँ तपाईंहरू माल नकिनी हेरेर मात्रै जुन जुन सामान किन्नुपर्ने हो मलाई भन्नुहोस्, त्यही सामान आधा मोलमा म किनाइदिन्छु, हुँदैन ?'

उनले हाम्रो सामु राखेको प्रस्तावलाई नकार्ने ठाउँ थिएन । त्यसैले हामी दुवैले सहमति जनायौं । खुलस्त बोल्न रुचाउने लीसाउ तोङ आफ्नो विचार व्यक्त गर्दै भन्छन्- 'राज्यले विदेशीमाथि जुन व्यवहार गरेको छ त्यो हाम्रो चीनियाँसंस्कृतिको विरुद्ध हो । अतिथिलाई सहयोग गर्नुपर्छ । आफूले नखाएर पनि खुवाउनुपर्छ । अनि मात्रै पाहुनाले परदेशको आतिथ्य सधैं सम्झिरहन्छ । यहाँ त ठीक उल्टो व्यवहार गरिएको छ ।'

हाम्रो शुभचिन्तकको रूपमा रहेका लीले फ्रेण्डशिप स्टोरमा गएर गाडी रोके र भने- 'हामी त्यहाँ जानु हुँदैन । तपाईंहरू जनुहोस् र चारै तल्लामा भएका सामान हेरेर फर्कनुहोस्, म यहाँ बसिरहन्छु ।'

विशाल फ्रेण्डशिप स्टोर ! सांघाईमा बस्ने विदेशी र यो शहर घुम्न आउने विदेशीहरूले किनमेल गर्ने ठाउँ ! सबै किसिमका आवश्यकीय वस्तुहरू राखिएको रहेछ । खाने पिउने सामानदेखि विलासिताका सामानहरू र अत्यावश्यक वस्तुहरू एक एक हेर्दै गयौं । हामीलाई किन्नु छैन । चार तल्लाको भवन करीब आधा घण्टामा घुमेर तल मोटर राखेको ठाउँमा आइपुग्यौं ।

'ल जाऔं'- लीले गाडी स्टार्ट गर्छन् र अगाडि बढाउँछन् र सोध्दछन्- 'अब भन्नुहोस् तपाईंहरू के किन्ने ?'

'जुत्ता, ब्याग र टोपीहरू ।'

बजारमा पुग्यौं । मान्छेको भीड ! यति भीड छ कि सामान राम्रो गरी हेर्न पाउने अवस्थै छैन । सधैं यत्तिकै भीड रहन्छ ? भनेर लीसँग सोध्दा उनले भने- 'मध्य दिनको लन्चको समय र साँझको पूर्व समयमा मात्र भीड हुन्छ ।'

हेर्दा सामान साँच्चै नै सस्तो रहेछ । गगन र मैले अठार युआन पर्ने दुईओटा जुत्ता किन्यौं । यहाँ भएका जुत्तामा तीन युआनदेखि बीस युआनसम्म मूल्य अङ्कित भएको देखियो । छालाको ब्याग र फरको टोपी मैले किनें र गगनले स-साना दुई जोर अरू जुत्ता किने ।

अर्को पसलमा गएर गन्जी, कमीजहरू किन्यौं । चीनियाँ छाता राम्रो हुन्छ भनेर चार युआनको दरमा छाता लियौं । यस्तै आवश्यक सानातिना सामान किन्यौं । यी सबै पसलहरू राज्यका रहेछन् ।

'सामान सस्तै रहेछ !' - मैले लीतर्फ हेर्दै आफ्नो विचार व्यक्त गरें ।

'सस्तो तपाईंहरूको लागि हो ! यहाँ चीनियाँ साधारण जनताको लागि होइन !'

'कसरी ?'

'एउटा मजदूर जसले आठ घण्टा काम गरे बापत केवल दुई युआन मात्र कमाउन सक्छ ! तपाईंले किनेको जुत्ता त्यो मजदूरले लगाउन नौ दिन उसले भौके खट्नुपर्छ ! भन्नुहोस् तपाईं नै कसरी सस्तो भयो त्यो मजदूरको लागि ?'- लीले आफूभित्रको आक्रोश व्यक्त गर्छन् ।

गगन सामान हेर्न र सानोतिनो सामान खरीद गर्न अल्मलिएका छन् भने म लीसँग गफ गर्न व्यस्त छु । मैले उनीसँग बिस्तारै सोधें-'तपाईं त दिनको दुइ युआन होइन त्यस्तो बीस ठाउँमा कमाउनुहुन्छ जस्तो लाग्छ मलाई, कसो ?'

'ठीकै भन्नुभयो ! मौका पऱ्यो भने त्यत्ति कमाउँछु, परेन भने मजदूरी त उही हो !'

'तपाईंले टेक्सी कुन हिसाबमा लिनुभएको- दैनिक ठेक्कामा कि, चलेको आधारमा ? यहाँ टेक्सीमा मीटर पनि राख्ने चलन रहेनछ । कसरी तपाईंहरू कम्पनीलाई हिसाब बुझाउनुहुन्छ त ?'- म उनीसँग उनकै पेशा-सम्बन्धमा प्रश्न गर्न पुग्छु ।

मेरो प्रश्नबाट उनले केही अप्ठेरो मान्लान् कि जस्तो लागेको थियो, तर उनले केही अप्ठेरो नमानी मलाई जवाफ दिन्छन्- 'टेक्सी मिटर छैन, तर माइल मीटर छ । त्यसैको आधारमा पैसा बुझाउनुपर्छ । हामीलाई भएन भने पनि दश पन्ध्र युआन दैनिक बचिहाल्छ र मौका पऱ्यो भने एक सय युआन पनि कमाइन्छ । आज-भोलि त यस्तो भएको छ कि टेक्सी ड्राइभर हुन एक हजार युआनसम्म घूस ख्वाउन सक्नुपर्छ !'

मैले तपाईंको भनाइको मतलब बुझिनँ ! - म आश्चर्य व्यक्त गर्छु ली- समक्ष र लीको भनाइमा एकीन हुन चाहँदै प्रश्न गर्छु- 'यो टेक्सी प्राप्त गर्नलाई कठिन छ ?'

'अहिले हाम्रो देशको मजदूरवर्गमा सबैभन्दा बढी पैसा कमाउने मजदूर टेक्सी ड्राइभर हो ! यो सबैले बुझिसके ! त्यसैले सबैको आकर्षण यही पेशामा छ !' - उनले तुरुन्त जवाफ दिए ।

'ए !' - मैले उनको भनाइलाई गम्भीरतापूर्वक सुनें र विचार गरें - नियन्त्रण र सन्तुलनको सिद्धान्त-अनुसार यस पेशामा लागू हुनुपर्ने नीति लाग्न सकेको रहेनछ । लीको अनुसार उनी प्रति-महीना एक हजारभन्दा बढी रकम बचत गर्छन् ।

बचत गर्नु त राम्रो कुरा हो । तर यहाँको व्यवस्था- अनुसार व्यक्तिले होइन, राज्यले बचत गर्नुपर्छ । व्यक्ति नै राज्यको सम्पत्ति हो । राज्यको सम्पत्ति नै व्यक्तिको सम्पत्ति हो । त्यसैले व्यक्तिगत बचतको आवश्यकता छैन ।

यो मजदूर वर्गमा शुरू हुन लागेको बचतको चाहना बिस्तारै देशव्यापी हुँदै जान्छ - यो प्राकृतिक नियम हो ।

साँझ झमक्क परिसक्यो । गगन सामान हेर्नमा नै व्यस्त छन् । म गगनको नजीकै पुग्छु र भन्छु - 'जाने बेला भएन ?'

'जाऔं !' - गगन फरक्क बाहिर निस्कने ढोकातर्फ फर्कन्छन्, म र ली पनि सँगसँगै बाहिर निस्कन्छौं । फुटपाथको छेउमा अब टेबुल राखेर मान्छेहरू साँझको खाना खान थालिसकेछन् । हाम्रो गाडी अलि पर पार्क गरेको हुँदा मोटरसम्म पुग्न हामीलाई दश मिनेट लाग्छ ।

'रातीको सांघाई हेर्ने हो भने जाऔं !' - लीले हामीलाई मनोरञ्जन प्रदान गर्न प्रस्ताव राख्छन् ।

गगन मलाई जानको लागि आग्रह गर्छन्- 'हुन्छ जाऔं ! पहिले होटेलमा सामान राखौं ! हुँदैन ?'- म- लीलाई सोद्धछु ।

गगन लीलाई साँझको खाना खाने बारेमा सोद्धछन् । लीले भन्छन्- 'तपाईंहरू कस्तो किसिमको खाना खान रुचाउनुहुन्छ' थाह छैन ! हामी जहाँ जाँदै छौं-समुद्री किनारमा खुला रेष्टुराँहरू छन् ।'

'हुन्छ, त्यसै गरौं !' - मैले उनको प्रस्तावलाई स्वीकार गरें ।

होटेलमा गएर हातमा भएको सामान राख्छौं । साँझ जाडो हुने हुँदा त्यही अनुसारको कपडा लगाएर तुरुन्त होटेलबाट निस्कन्छौं ! यो साँझ लीले तयार गर्ने कार्यक्रम अनुसार घुम्न हामीले मञ्जुरी दिएका छौं ।

सांघाई शहर राती हेर्न-लायक रहेछ । ठूला ठूला होटेलहरू,नवनिर्मित अग्ला घरहरू, यहाँ चम्कने बत्तीहरू, रंङ्गीविरंगी निविन साइन, आकाशमा झल्किएजस्तो चीनियाँ अक्षरमा अङ्कित विज्ञापनहरूले शहर छपक्क ढाकेको छ । उनी स्थान र भवनका बारेमा बताउँदै जान्छन् । त्यहाँ भएको मेडिकल कलेज र अन्य विश्व विद्यालयहरू देखाउँदै उनी अगाडि बढ्छन् ।

समुद्री किनार ! मान्छेको यहाँ पनि भीड छ । मोटर पार्क गरेर बाहिर निस्किएको त चिसो हावाको झोक्काले मलाई आनन्द प्राप्त भयो । एकछिन घुमेर एउटा खुला रेष्टुराँमा गएर बस्यौं ।

'अब यहाँबाट नाइट् क्लब जान हुँदैन ?'- ली हामीलाई सोद्धछन् ।

मैले भनें- 'चीनियाँ गीतको कार्यक्रम हुन्छ ! हामीले बुझ्दैनौं ! के गर्ने ?'

उनी कुरालाई बटार्दै भन्छन्- 'गीतको भाषा नबुझे पनि संगीतको भाषा त सबैले बुझ्छ ! सुन्दरताको लागि पनि भाषा जरूरत पर्छ ?'

'तपाईंको मतलब सुन्दर युवती हेर्ने ?'

'ठीक भन्नुभयो ! यदि चाहनुहुन्छ भने ! जत्ति पाइन्छ ! भन्नुहोस् मात्र मलाई !'

मैले यो कुरा गुआङ्चाउमै थाह पाइसकेको थिएँ । त्यसैले यसमाथि आश्चर्य मान्ने कुरै छैन । गगनको चाख अलि बढेजस्तो भए पनि मेरो मनसाय बुझेर उनले पनि केही भन्न सकेनन् ।

अब यहाँ यस्तो समय आइसक्यो-सामाजिक स्वच्छता र अनुशासन-को ह्रास, अनैतिकता र सामाजिक विकृतिको उदय ! यो अपरिपक्व पद्धतिको उपज हो । यसलाई न कसैले रोक्न सक्छ, न नियन्त्रण नै गर्न सक्छ !

मैले लीसाउ तोङ्को कुरालाई ध्यान दिइनँ। उनले पनि दोहर्‍याएर सोधेनन् । गगनका आँखाहरू म र ली दुवैमा पालैपालो ओहर-दोहर गरि रहेका छन् । उनी पनि केही बोल्ने पक्षमा छैनन् । म आफ्नो ध्यानलाई समुद्री छालसँग गाँस्ने कोशिश गरिरहेको देखाउन समुद्रतर्फ आफूलाई केन्द्रित गर्न खोज्छु ।

हामी खाना खाएर शहरको अन्य दृश्य हेर्दै होटेलमा पुग्छौं । भोलि बिहान नौ बजे ली आउने निर्णय दिंदै हामी छुट्टिन्छौं ।

भोलिपल्ट ! बिउँझदा बिहान नौ बज्न लागिसकेछ ! तयार हुन खोज्दा-खोज्दै तल रिसेप्सनबाट ठीक नौ बजे लीसाउ तोङ्को फोन आयो । हामी चाँडै गरेर होटेलबाट निस्कियौं।

चाँडो चाँडो गर्दा पनि निस्कँदा दश बजिसकेछ । मैले लीसाउ तोङ्लाई भनें- 'जहाँ गए पनि दुइ बजे त्यो मान्छेलाई भेट्नु छ, त्यही अनुसार कार्यक्रम बनाऊ !'

उनले पनि त्यही सोचेका रहेछन्, त्यसैले उनले भने-'नजीकै पर्छ, त्यसैले म्यूजियम जाऔं कि ?'

म्यूजियममा पुगियो । टिकट काट्न हतारिएर गएका ली विदेशी प्रवेश गर्न एफ.इ.सी. तिर्नुपर्छ भन्ने भुलेका रहेछन् । फर्केर आएर एफ०इ०सी० लिएर गए । चीनियाँ र विदेशीलाई मुद्राको मात्र फरक होइन भाउमा नै शत प्रतिशत बढी कायम गरिएको रहेछ।

म्यूजियममा चीनको प्राचीन कला र संस्कृति झल्कने वस्तुहरूको प्रदर्शनको साथै चीनियाँ समाजमा वीरत्व कायम गर्ने वर्तमान चीनियाँ समाजका पुर्खाहरूको चित्र अङ्कित झाँकीहरू प्रदर्शन गरिएको छ । सबै वस्तुको चिनारी चीनियाँ भाषामा भएको हुँदा र लीसाउ तोङ्को यस सम्बन्धमा अल्प ज्ञान भएको कारणले हामीले पनि विस्तृत विवरण पाउन सकेनौं । वास्तवमा पुरानो इतिहास र प्राचीन कुरा जान्न जानिफकार गाइडको व्यवस्था गरिएको हुन्छ । तर हामीले ड्राइभरबाट नै गाइडको काम लिएको हुँदा हामी विस्तृत जानकारीबाट वञ्चित भयौं ।

समय हामीसँग थोरै भएको हुँदा त्यहाँबाट निस्किएर दिनको खाना खान्छौं र ठीक पौने दुई बजे निर्दिष्ट स्थानको लागि प्रस्थान गर्छौं ।

दुई बज्न पाँच मिनेट बाँकी हुँदा एउटा बन्द ढोकाको अगाडि गाडी रोकिन्छ । हाम्रो गाडीको हर्न सँगसँगै गेट खुल्छ । चीनियाँ सुरक्षा गार्डले ढोका खोल्छ । हामी भित्र पसेपछि

ढोका बन्द हुन्छ । हामी करीब एक सय मिटर अगाडि बढ्छौं र एउटा सुन्दर बंगलाको ढोकैमा गाडी रोकिन्छ ! हामी गाडीबाट उत्रन्छौं । यो किल्ला ससानो रजौटाको वासस्थान जस्तो छ । पछाडि फर्केर हेरें- ढोकासम्म सुन्दर बगैंचा र ढुङ्गा बिछ्याइएको बाटोको दुवै किनारामा हरिया रूखमा रंगीविरंगी फूलहरू फुलेका छन् ।

मलाई सम्बोधन गर्दै लीले भन्छन्- 'यिनीसँग तपाईंहरू भित्र जानुहोस्, म यहीं बाहिर कुरेर बसेको छु !'

एक जना भद्र र परिपक्व देखिने नीलो सूट लगाएका व्यक्तिले हामीलाई अंग्रेजी भाषामा भने- 'तपाईंहरूलाई स्वागत छ ! हाम्रा सर छिन गो छिनको तर्फबाट !'

हामीले ती व्यक्तिसँग हात मिलाएर स्वागतको लागि आभार व्यक्त गर्छौं । उनले डोग्र्याएको बाटोद्वारा बङ्गलोमा प्रवेश गर्छौं । जुन कक्षमा प्रवेश गर्यौं, त्यहीं अलि टाढा एउटा आरामदायी कुर्सीमा एक जना अधबैंसे मान्छे बसिरहेका छन् । हामी प्रवेश गर्नेबित्तिकै उनी उठेर हामीतर्फ अगाडि बढे, हामी आपसमा हात मिलाएर प्राथमिक औपचारिकता पूरा गर्छौं । हामीलाई उनी बसेको कुर्सी-नजीकको सोफामा बस्न अनुरोध गर्छन् र उनी साबिकको कुर्सीमा बस्छन् । हाम्रो अगाडि दोभाषे बस्छन् ।

बाहिरबाट प्रवेश गर्नेबित्तिकै यो विशाल हॉल, एक कुनाबाट अत्यन्तै सुन्दर घुमाउने भय्राङ, पहिलो तल्लामा जाने बाटो र बारदली ! यहींबाट पहिलो तल्लाको कोठाका ढोकाहरू देखिएका छन् बीचमा बेलायती झार, करीब-करीब एक सय किलो वजन अनुमान गर्न सकिने, झुण्डिएको छ । ढोकाको छेउमै मानव जीवन कदको पुरानो चीनियाँ पहिरन लगाएको धातुद्वारा निर्मित दुईओटा मूर्ति उभिएका छन् ।

बेल्जीयम कट ग्लासले सिंगारिएको ६ फुट अग्लो ऐना चारैतर्फ झुण्डिएका छन् भने बेलायती कलाले सिंगारिएका टेबुलहरू भित्तामा जोडेर सुहाउने किसिमबाट राखिएका छन् ।

छिन गो छिन चीनियाँ भाषामा कुरा शुरू गर्छन् । दोभाषेले पहिले कुरा सुन्छन् र हामीलाई अंग्रेजीमा भन्दै जान्छन् र हामी पनि अंग्रेजी भाषामा जवाफ दिंदै जान्छौं ! जवाफ गगनले होइन, मैले दिन थालें-'तपाईंहरू कुन किसिमको व्यापार गर्नुहुन्छ?'

'देशभित्र साधारण व्यापार र विदेशसँग आयात र निर्यात ।'

'कुन - कुन माल आयात गर्नुहुन्छ र कुन- कुन माल निर्यात गर्नहुन्छ ?'

'हाम्रो देशलाई चाहिने सबै किसिमका इलेक्ट्रानिक सामान, साना, मझौला र ठूला मेशीनरीहरू आयात गर्छौं र देशभित्र उत्पादित सबै किसिमका सामानहरू विदेशमा निर्यात गर्छौं !'

'यसरी आयात र निर्यात गर्दा कुन - कुन देशसँग संपर्क बढेको छ ?'

जापान, हङ्कङ, सिंङ्गापुर, ग्रेट ब्रिटेन, जर्मनी, फ्रान्स, इटली र अमेरिकासँग सम्बन्ध स्थापना भएको छ भने पाकिस्तान,भारत र चीनसँग हाम्रो राम्रो सम्बन्ध छ ।

'ओ हो, तपाईंहरू त ठूला व्यापारी पो हुनुहुँदो रहेछ !'

'हामी ठूला त होइनौं, तर व्यापारी हौं !'

'हामीले ठूलो व्यापारी खोजेका हौं !'

कुरा बुझियो ! यिनीहरूको अगाडि यिनीहरूलाई मान्यता दिएर हामी खुम्चिएर बसेका थियौं । यिनीहरूले हामीलाई सानो व्यापारी सम्झिन सक्छन् । फेरि लीसाउ तोङले विश्वासका साथ हामी ठूला व्यापारी हौं भनेर यिनीहरूलाई बताइसकेको हुँदा हामी किन यिनीहरूभन्दा सानो हुने ?- यस्ता कुराहरू मेरो मनमा खेल्नेबित्तिकै गगनलाई मैले भनें- 'गगन ! यिनीहरूको अगाडि नाटक शुरू गर्नुपर्‍यो । होइन भने हामी बेकूफ साबित हुन्छौं ! र यिनीहरूले हामीलाई काम नलाग्ने ढुङ्गो हुत्याएझैं हुत्याइदिन्छन् ।'

गगनले कुरा बुझे र कुरा शुरू गर्न थाले । यही बीच आफ्नो बस्ने पोजिसन पनि बदल्दै भन्न लागे- 'म धेरै काम हेर्दिनँ, मेरो सबै काम यिनी सेक्रेटरीले हेर्छन् । यो पटक त चीन घुम्न जानुपर्छ भनेर मेरो सेक्रेटरीले ज्यादै आग्रह गरेको हुँदा मात्र आएको हुँ ! तर खुशी लाग्यो, तपाईंहरू जस्तो साथीहरूसँग चिनाजानी हुने मौका पाइयो ।'

अब मैले आफूलाई पूरा गगनको सेक्रेटरीको रूपमा प्रस्तुत गर्नुपर्‍यो । मैले गगनलाई सर ! भनेर सम्बोधन गर्नुपर्ने वाध्यता छ भने छिन गो छिनलाई पनि सर भनेर सम्बोधन गर्नुपर्ने आवश्यकता छ ।

एक जना केटीले हाम्रो अगाडि भएको चियामा तातो चिया पनि थप्ने काम जारी राखेकी छिन् । चियाको मीठो फ्लेवरले हाम्रो ओठलाई तानिरहेछ ।

छिन गो छिन धेरै बोल्दैनन् । शायद बोल्नुपर्ने कुराहरू दोभाषेलाई सबै कुरा बताइसकेका छन्, त्यसैले दोभाषे मात्र बोलिरहेका छन् । मैले पनि आफ्नो कुरालाई माथि पार्ने र यिनीहरूको कमजोरी समात्न म प्रश्नहरू शुरू गर्छु -'के सर छिन गो छिन सरकारी अधिकारी हुन् ?'

'होइनन्'- दोभाषेले तुरुन्तै उत्तर दिए ।

'यो बङ्गलो ?'

'यो बंगलो राज्यको होइन, उहाँको आफ्नै हो ! यहाँ कसरी व्यक्तिको सम्पत्ति सुरक्षित हुन्छ ?'

'सर छिन गो छिनले आफ्नो धेरै सम्पत्ति स्वइच्छापूर्वक राज्यलाई दिएर यो मात्र सानो बंगलो आफूलाई राख्नुभएको हो !'

'व्यक्तिगत सम्पत्ति पनि सुरक्षित हुने के विशेष व्यवस्था छ ?' त्यसतर्फ हामीले सोच्ने कुरै छैन । तर व्यक्तिले आफ्नो आवश्यकीय वस्तु सुरक्षित राख्ने प्रयत्न गर्छ - यो मानवीय गुण हो ।

चियाको चुस्की दिंदै गगन भन्छन्- 'हामी जुन कुराको लागि यहाँ आयौं त्यही विषय-वस्तुमा प्रवेश गरूँ कि ?'

दोभाषेले यो कुरा छिन गो छिनलाई भनेपछि उनको सहमति पाएर कुरा शुरू हुन्छ। छिन गो छिनले भनेको दोभाषेले मलाई भन्ने र गगनले मलाई आफ्नो भाषामा भनेको कुरा मैले अंग्रेजीमा दोभाषेलाई भन्ने कार्य शुरू हुन्छ।

'तपाईंहरूले जापानबाट इलेक्ट्रिकल्स र इलेक्ट्रानिक मालहरू सप्लाई गर्न सक्नुहुन्छु ?'

'सक्छौं !'

'कसरी ? तपाईंहरूको जापानमा कम्पनी छ ?'

'आफ्नै कम्पनी छ भन्ने सम्झनुहोस् न !'

'ल, ठीक छ ! तपाईंहरूलाई लिष्ट प्राप्त गर्ने व्यवस्था गरिदिन्छौं ।'

'अनि जर्मनीमा कस्तो सम्पर्क छ ?'

'के चीजको लागि ?'

'केमिकल सप्लाईको लागि !'

'ठीक छ, बन्दोबस्त गर्छौं !'- भन्दै, आफैभित्र तर्क गरें - साँच्चिकै व्यापार हात पर्ने भयो कि ? एक मन कता-कता न्यानो खुशीको अनुभव भएको छ भने आफूले जीवनभर नसोचेको र सोच्न नसक्ने प्रस्तावहरू आफ्नो सामु प्रत्यक्ष आउँदा भित्री मन भयभीत भएको छ । एक मन भन्छ - व्यापार हो ! असम्भव - कसरी सोच्ने ?

गगन मसँग आफ्नो भाषामा भन्छन्- 'कुरा त गहिरो छ नि !'

मैले उनलाई जवाफ दिएँ - 'शङ्का नगर ! वास्तवमा - यो पूर्ण व्यापारिक कुराकानी हो, सफल र असफल भविष्यको गर्भभित्र छ ।'

हाम्रो बीचमा भएको कुराको जानकारी लिन दोभाषे मसँग जानकारी लिन चाहन्छन् । म उनलाई सम्झाउँदै भन्छु- 'हाम्रो तर्फबाट हामी काम गर्न मञ्जूर छौं । बस ! इलेक्ट्रिकल्स, इलेट्रानिक्स र केमिकलको भोलुम थाहा पाउन पाए बेस हुने थियो ।'

'प्रत्येक वस्तु दश मिलियन यु०एस० डलरभन्दा बढीको नै छ ।'

'ठीक छ, हामी सप्लाई गर्न मञ्जूर छौं ।'

'तपाईंहरूलाई कमीशन बारेमा जानकारी छ कि छैन ?'

'जरूर छ ।'

'कमीशन कति राख्नुहुन्छ त काम भयो भने ?'

'जति तपाईंहरू चाहनुहुन्छ ! पाँचदेखि दश प्रतिशत !'- बढी नै कमीशन बोल्नु ठीक हुन्छ भनेर भनिदिएँ ! नियम अनुसार व्यापारको भोलुम जति बढ्छ कमीशनको रकम त्यत्ति नै घट्छ । दश मिलियनको व्यापारमा मात्र दुई प्रतिशत जायज कमीशन हो । तर मैले पाँचदेखि दश प्रतिशत जो बोलें नाजायज हो । मलाई यो प्रतिशतको रकम भनेपछि डर लागिरहेछ, कतै हामी कच्चा व्यापारी हौं भन्ने प्रमाणित हुने त होइनौं !

उनीहरू आफ्नो भाषामा बोले । मेरो गल्ती भयो कि भनेर म उनीहरू दुवैको अनुहार नियाल्न थालें । गगन पनि चुपचाप उनीहरूलाई र उनीहरूबाट निस्कने नतीजालाई पर्खेर बसेका छन् । मेरो हातमा चियाको कप भएर पनि चुस्की लिन सकिरहेको छैन । म पनि नतीजाकै प्रतीक्षामा बिस्तारै चियाको एक सिप लगाउँछु ।

यो पटक सर छिन गो छिनले दोभाषेलाई विशेष कुरा भन्दै छन् । मोटो शरीर भएका, खैरो रङ्गको माओ सूट लगाएका, शरीरमा कोट टपक्क मिलेको छ । अर्ध तालु खुइलिएको हुँदा अनुहार ठूलो र उज्यालो देखिन्छ । बिस्तारै बोल्ने आदत र चाँडो चाँडो घुम्ने आँखाले यिनको चतुरता झल्काइ - रहेको छ ।

दोभाषे बिस्तारै भन्छन्- 'सर छिन गो छिनले तपाईंको प्रस्तावलाई स्वीकार गरे ! दश प्रतिशत उनको लागि मञ्जूर छ, तर बेजिङका अधिकारीको भाग पाँच प्रतिशत थप गर । जम्मा पन्ध्र प्रतिशत कमीशन राखेर रेट कोट गर !'

म त्रासमुक्त भएँ ! मेरो प्रस्तावलाई स्वीकारियो, तर यो पन्ध्र प्रतिशत बढाएर मैले कोटेशन दिंदा त विश्व-बजारको तुलनामा ज्यादै बढी हुन्छ, हुन त खरीददारले खरीद गर्न चाहेमा त आपत्ति केही छैन । मैले गगनसँग आफ्नो भाषामा यिनीहरूको गिर्दै गएको नैतिक मूल्यलाई छर्लङ्ग हुने गरी बताइदिएँ । उनले पनि मलाई जवाफ दिए- 'कुरा बुझ्नु हो, बुझिहालियो ।'

यसै-बीच दोभाषे मलाई प्रश्न गर्छन्- 'सर गगनको के राय छ ?'

'मैले तुरुन्त जवाफ दिएँ -'तपाईंको प्रस्ताव अनुकूल छ ।'

'के पन्ध्र प्रतिशत कमीशन मञ्जूर भयो ?'

'ठीक छ ! हामी व्यवस्था गर्छौं ! तर रेट अलिकति बढ्छ !'

'हुन्छ, दश प्रतिशतसम्म बढाउँला !'

'यिनीहरूलाई रेटसँग कुनै मतलब रहेनछ । यिनीहरू सबै मिलेका रहेछन् । 'अब भने काम पाउने मलाई आशा भयो । यति ठूलो काम कसरी गर्ने फेरि चिन्ता पर्‍यो ।

'तपाईंहरू तुरुन्त बेजिङ जान सक्नुहुन्छ ?'

'हामीलाई पहिले तियानजिन जानु छ ! हामी त्यसपछि बेजिङ जान सक्छौं ।

'तियानजिनबाट बेजिङ नजीकै छ, रेलबाट करीब तीन घण्टामा पुगिन्छ ! हुन्छ, कुन समयमा पुग्ने हो, बताउनुहोस्, सक्नुहुन्छ भने बेजिङको ठेगाना दिनुहोस् !'

'हाम्रो बेजिङ जाने काम छैन । यही कामको लागि मात्र जाने हो । त्यसैले हामीलाई तपाईंहरूको ठेगाना पाऊँ, हामी आफै सम्पर्क राख्न आउँछौं ।'

यसपछि हामीलाई बेजिङको ठेगाना दिइयो । बेजिङको मान्छेको नाम, टेलिफोन नम्बर र ठेगाना सबै लेखेर दोभाषेले दिए । हामी तीन दिनपछि बेजिङ पुग्ने र चारौं दिनको दिनमा सम्पर्क राख्न सक्ने कुरा बतायौं ।

मैले यी सामान के के हुन सक्छन् भन्ने उत्तरमा उनले भने- 'रेफ्रिजेरेटर, एयरकन्डीसनर, वासिङ मेशीन, टेलिभिजन, भिडियो डेक, कम्प्यूटर्स र विभिन्न किचन इक्वीवमेन्टस छन् जो जापानमा बनेको हुनुपर्छ ।'

'यी प्रत्येक सामान दश मिलियनभन्दा बढीका छन् ?'

'हो !'

यो काम भयो भने त अथाह कमाइने रहेछ । सुनेर खुशी लाग्यो । गगन पनि आनन्दित भएका छन् ।

लगभग हाम्रो व्यापारको कुरा टुङ्गो लाग्यो ! हामी गर्ने र उनीहरूले व्यापार दिने भएपछि अब व्यापार नहुने र हुन नसक्ने भन्ने कुरै भएन । हामीले फाइनल जवाफ कहाँ पाउने त भन्ने हाम्रो प्रश्नको जवाफमा हामीले थाहा पायौं बेजिङमा एकजना अधिकारप्राप्त अधिकारी जोसँग अन्तिम कुराको टुङ्गो गर्न बाँकी नै भयो । त्यसैले हामीलाई एकपटक बेजिङ्ग नगई नहुने भएको छ ।

कार्यक्रम अनुसार हामी तियानजिनसम्म मात्र जाने थियो, तर यति ठूलो अवसर प्राप्त हुँदै छ भने बेजिङ नजाने कुरै भएन । गगन र म हामी दुवैले बेजिङ जाने र यो व्यापारको टुङ्गो गरेर चीनमा व्यापार बढाउने निर्णय गर्यौं ।

सर छिन गो छिनको भनाइ अनुसार काम भयो भने मिलियन होइन बिलियन यु०एस० डलरको व्यापार हुन्छ । २ प्रतिशत मात्र बच्यो भने पनि हामी गरीब देशका नागरिकको लागि ज्यादै ठूलो उपलब्धि साबित हुन सक्छ ।

हामीलाई बिदा दिने तरखरमा दोभाषे भन्छन्-तपाईंहरूसँग भेटेर र तपाईंहरूसँग व्यापारिक कुराकानी भएकोमा सर छिन गो छिन खुशी हुनुभएको छ । उहाँले आशा राख्नुभएको छ ।- 'हामी दुइ पार्टीको बीचमा राम्रो व्यापार हुन सक्छ, हामीहरूको व्यापारको भविष्य अत्यन्तै उज्वल छ ।'

गगनको तर्फबाट मैले पनि सोही कुरा दोहराएर भनें- 'भविष्यमा हुने व्यापारले हामी दुवैलाई फाइदा दिन्छ भन्नेमा म विश्वस्त छु ।'

हामी सबै उठ्छौं, सर छिन गो छिनले पहिले गगनसँग र पछि मसँग हात मिलाउँछन् । त्यसै गरी दोभाषेसँग हामीले हात मिलाउँछौं र कोठाबाट बाहिर निस्कन्छौं । हामीलाई बाहिर पुग्याउन दोभाषे आएका छन् ।

बाहिर हाम्रो टेक्सी हामीलाई देख्नेबित्तिकै अगाडि बढ्छ र बंङ्गलोको ढोकामा आइपुग्छ । दोभाषेले कारको ढोका खोलेर हामीलाई कारभित्र पस्न 'प्लीज' बोलीको साथ हातले कारको सीटतर्फ देखाउँदै हामीलाई सीटमा राखेर कारको ढोका बन्द गर्छ ! दोभाषेको हात हल्लाइ-सँगसँगै कार स्टार्ट हुन्छ, हामी अगाडि बढ्छौं ।

बंगलोको बाहिरी गेट कट्नेबित्तिकै लीसाउ तोङ्ले हामीसँग प्रश्न गर्छन्- 'भेटघाट कस्तो भयो ?'

'धेरै नै राम्रो भयो !'

'व्यापारको कुरा मिल्यो ?'

'टुङ्गो नलागे पनि पूर्वाधार बन्यो । तर हामीलाई बेजिङ जानुपर्‍यो !'

'ठीक भयो ! अब ढुक्क भए हुन्छ । काम भयो !'

'के भनेको तपाईंले ?'

'पार्टीको ठूलो नेता जो बेजिङमा बस्छन् - यिनको साथी हो ! उनै मार्फत सबै काम हुन्छ ।'

लीसाउ तोङले हामीलाई छिन गो छिनको बारेमा अरू थप जानकारी दिए । यिनी खानदानी धनी व्यक्ति रहेछन् । यिनका बाबु-बाजेको पालादेखि सांघाईमा ठूला -ठूला कारखाना भएका र व्यापारिक ठूलो कारोबार भए पनि कम्युनिष्ट आन्दोलनलाई साथ दिएका र पार्टीको काम कार्यवाहीलाई साथ दिएको हुँदा पार्टीले पनि यिनलाई सहयोग गरेको रहेछ । देखिने मिल कारखानाहरू राज्यले सञ्चालन गरे पनि यिनको यथास्थिति कायम हुँदा यिनको शान-सौगतमा कुनै कमी आएको छैन ।

लीसाउ तोङ र छिन गो छिनको सम्बन्ध कसरी भयो भन्ने प्रश्नको उत्तरमा उनी भन्छन् - 'मेरा बा छिन गो छिनको ड्राइभरी काम गर्थे । तीस वर्षसम्म उनको गाडी चलाएपछि उनले नै कम्युनिष्ट पार्टीलाई भनिदिएर सरकारी काम गर्ने गरी काममा खटिएका छन् । मेरा बा आमालाई आनन्द छ । मेरा बा छुङ्हाई प्रान्तको गरमु शहरको शक्तिशाली व्यक्ति भएका छन् । त्यसैले यिनको मेरो राम्रो सम्बन्ध छ ।'

लीसाउ तोङ र हाम्रो बीचमा छिन गो छिन-सम्बन्धी कुरा हुँदै जान्छ र हामीले पनि थाहा पाउँदै जान्छौं । साँझ पर्न लागिसकेको हुँदा हामी होटेल नै जाने निर्णय गर्छौं । हाम्रो गाडी होटेलमा पुग्छ । भोलि तियानजिन जाने कार्यक्रम छ । त्यसैले आज साँझ धेरै घुम्ने विचार छैन । लीसाउ तोङलाई आज साँझ हामी पैदल नै घुम्ने विचार व्यक्त गर्छौं । बरु भोलि ठीक नौ बजे नै एयर्पोर्ट जानुपर्ने कुरा पनि हामी उनलाई सुनाउँछौं । हामीले निश्चित गरेको कार्यक्रम अनुसार हामी उनलाई छाडिदिन्छौं ।

भोलिपल्ट ठीक समयमा लीसाउ तोङ आइपुग्छन् । हामी पनि होटेल छोडेर एयरपोर्टको लागि तयारी भएर बसेका छौं । उनको गाडीमा एयरपोर्टको लागि रमाना हुन्छौं ।

लीसाउ तोङले छुट्टिने वेलामा फोटो खिंच्ने मनसाय व्यक्तगर्छन् । गगन र म छुट्टाछुट्टै उनीसँग बसेर फोटो खिंच्छौं । म उनलाई टेक्सीको भाडा दिने काम सकेर भन्छु- 'तपाईंलाई धेरै धेरै धन्यवाद, तपाईंबाट हामीले धेरै सहयोग पायौं । काम भयो भने आउने जाने बढ्छ ! ठीकै छ, पछि भेटौंला ।'

'जरूर भेट्छौं ! सर छिन गो छिनसँग काम जरूर गर्नुहोला ! यसबाट हामी सबैलाई फाइदा हुन्छ !'- उनले गम्भीर भएर हामीलाई सल्लाह दिए ।

'हुन्छ ! हाम्रो खुबीले भ्याएसम्म गर्छौं ।'

पैसा कमाउनुपर्छ ! पैसाको बचत भनेको शक्तिको संचय हो ! शक्तिवान व्यक्तिले मात्र विजय प्राप्त गर्न सक्छ । जुनसुकै कुरामा होस् विजयी हुनु भनेको जीवनको सार्थकता हो - यो कुरा राम्रो गरी बुझेका लीसाउ तोङ श्रम गरेर होस् वा नगरेर होस् पैसा कमाउनुपर्छ भन्ने निश्चयमा पुगिसकेकाछन् । विदेशीहरूसँग सम्पर्क कायम गर्न अंग्रेजी भाषा सिकेका लीसाउ तोङ्को भविष्य अँध्यारो देखिदैन । तर कति उज्यालो हुने हो त्यो अहिले एकीन गर्न सकिदैन ।

हामी चीनको आकाशमा उडिरहेछौं । सांघाईबाट तियानजिन जाने विमानमा । सांघाई हामीबाट टाढा हुँदै गए पनि सम्झना नजीकिँदै आइरहेछ ।

=★=

# - ७ -

हिजो दिउँसो नटुङ्गेको व्यापारिक कुराकानी आज टुंग्याउने निधो लिएर नौ बजे नै बसेका हौं । तर एघार बजिसक्यो, कुरा मिल्ने छाँट छैन । गगन म दुवै दिक्क भइसक्यौं । अब हामी धेरै कुरा नगर्ने पक्षमा गइसक्यौं ।

कुरा के भने हामीले जुन ब्लाङ्केट लिने भनेर चार महीना अघि गुआङ्चाउ व्यापार मेलामा सम्झौता गरेका थियौं, त्यो किसिमको ब्लाङ्केट यस कम्पनीले सप्लाई गर्न नसक्ने कुराको हामीकहाँ टेलेक्स खबर आएपछि कुराकानीको माध्यमद्वारा टुङ्गो लगाउन भनेर तियानजिन आएका हौं ।

कम्पनीको तर्फबाट पूर्व-सम्झौतालाई नमान्ने र नयाँ सम्झौता गर्न एल०सी० खुलिसकेको हुँदा हाम्रो तर्फबाट नमिल्ने भएकोले कम्पनी र हाम्रो बीचमा कुराकानी चर्केको हो !

जाङ दियाङ नामको एक जना अधबैंसे स्वास्नीमान्छे मेनेजर भएको त्यस कम्पनीमा पच्चीस जना कर्मचारी काम गर्ने रहेछन् । यी मेनेजरको खराब व्यवहारले गर्दा धेरै स्टाफहरू असन्तुष्ट रहेछन् । होची होची मोटी माओ सुट लगाएर ब्वाइज कट कपाल काटेकी जाङ दियाङको लोग्ने बेजिङमा मिलेट्रीमा ठूलो अफिसर रहेछ । त्यसैले मान्छेलाई मान्छे नगन्ने उसको आदतले गर्दा कम्पनीको आर्थिक स्थिति बिग्रदो अवस्थामा पुग्न लागेको रहेछ । यो कुरा हिजो साँझ वाङ जियादुले भनेका हुन् जो अंग्रेजी बोल्छन् र जाङ दियाङको सहायकको रूपमा काम गर्छन् ।

मिल कारखानाको काम वस्तु उत्पादन गर्नु हो र स्वदेशमै मात्र बिक्री गर्नु हो । त्यही सामान विदेशमा बिक्री गर्नुपर्‍यो भने उत्पादन गर्ने कारखानालाई बिक्री गर्न निषेध गरिएको छ । तर त्यस्ता वस्तुहरू निर्यात गर्नुपर्दा विदेश व्यवहार गर्न पाउने अधिकार पाएको छुट्टै व्यापारिक कम्पनीले मात्र गर्न पाउँछ। यो व्यवस्था-अन्तरगत उत्पादकले थोरै मूल्य पाउने र विदेशी व्यापार गर्ने कम्पनीले धेरै ठूलो रकम आर्जन गरेर मिल कारखानालाई शोषण गरिरहेको हुन्छ ।

व्यापारमा एकाधिकार पाएको हुँदा त्यस्ता कम्पनीहरूले मनोमानी गरिरहेका हुन्छन् । कम्पनीले मनोमानी गर्नु भनेको कम्पनी जिम्मा लिएर बसेका मैनेजरको मनोमानी गर्ने मानसिक प्रवृत्ति हो फेरि कम्पनी जिम्मा लिने भनेको शक्ति प्राप्त गर्नु हो । यस्तो शक्ति त्यस्तालाई मात्र प्राप्त हुन्छ जसको उच्च तहको पदाधिकारीसँग निकटतम सम्बन्ध कायम रहेको हुन्छ । त्यसैले प्रायः यस्ता प्रमुख कम्पनीहरू यस्तै गैर व्यापारीहरूको हातमा सुम्पिएको हुन्छ ।

हामी टेबुलको एक साइडमा छौं भने अर्को साइडमा जाङदियान र वाङ जियादु छन् । टेबुलमा भएको चियाको कपमा प-पन्ध्र मिनेटमा आउने तातो चिया टलपलिएको छ । अब त हामीलाई कुरा गर्न पनि मन लाग्न छोडिसक्यो, एउटै कुरा दोहराई तेहराई भन्दा पनि नबुझेपछि, कसद्वारा बुझाउने ? के भनेर यिनले बुझ्छिन् ? सहायक वाङ जियादु पनि हाम्रै पक्षमा छन्, तर उनी उनकी म्याडमको पनि कुरा काट्न सक्दैनन् । उनलाई म्याडमले हिजै हकारिसकेकी छन् कि तिमी दोभाषे काम मात्र गर ! त्यसैले आज उनी पूर्णतया दोभाषे काम मात्र गरिरहेका छन् ।

हिजो साँझ हामीलाई वाङ जियादुले खुसुक्क भनेका थिए- सम्झौता भएको मूल्यमा नै माल हामीलाई सप्लाई गरे पनि बीस प्रतिशत फाइदा हुन्छ । तर म्याडम मानिरहेकी छैनन् । यहाँको चलन अनुसार कम्मल उत्पादन गर्ने कारखानाबाट स्थानीय युआनमा कम्मल खरीद गर्ने र यु०एस० डलरमा निकासी गर्ने भएकोले मूल्य लगभग बराबर परे पनि विदेशी मुद्रा बैंकमा बुझाए बापत बैंकले दिने बढी कमीशन र मुद्रा कमाइदिए बापत सरकारले दिने इनसेन्टिभ् हिसाब गर्दा निर्यातकर्तालाई फाइदा हुँदो रहेछ ।

जाङ दियाङले किन सम्झौतामा भएको दर रेटमा दिन नमानेको भन्ने हाम्रो प्रश्नको उत्तरमा वाङ जियादुले भनेका थिए - सरसर्ती हेर्दा पहिले म्याडमले फाइदा देखिनन् र हुँदैन, सम्झौता रद्द गर्नुपर्छ र नयाँ रेटमा मात्र हामीले सप्लाई गर्ने भनेर बोलिहालिन् । पछि उनले सम्झेपछि नोक्सान त होइन, कम फाइदा रहेछ भनेर । तर आफूले बोलिसकेको कुरा भएको हुँदा बोलीको अडानको लागि कम्पनीलाई नोक्सान दिन ढिपी गरेर बसेकी छन् ।

यो सम्झौता अनुसार काम सम्पन्न हुन सकेन भने यो व्यापारबाट जति कमाई हुन्थ्यो त्यो त यस कम्पनीले गुमाउँछ नै, साथै हामी जस्तो विदेशी व्यापारीको सामु व्यापारिक संस्थान संचालन गर्ने अधिकारीले गैर व्यापारी कुरा गरेपछि यस व्यापारी संस्थानको विश्वसनीयतामै ठूलो आँच आएर व्यापार अवरोध हुने कुरा यी मेरो सामु बस्ने यस कम्पनीका व्यवस्थापकलाई के पत्तो ! यिनी त आफ्नू जिद्दी लिएर बसेकी छन् कि मालको भाउ बढ्नुपर्‍यो ।

एउटा जिम्मेवार व्यापारिक कम्पनीको व्यवस्थापक अर्थात् नाइकेले आफ्नो व्यापारिक अयोग्यता प्रदर्शन गरिसकेपछि हामीले उनलाई कसरी कार्य जिम्मेवारीको बोध गराउन सक्छौं र ? कम्पनीको नाफा नोक्सानमा हामीले किन चिन्ता लिनुपर्‍यो र ? त्यसैले मैले जाङ दियाङलाई सम्बोधन गर्दै भनें - 'म्याडम जाङ ! ठीक छ, तपाईंको यही नै

भनाइ छ भने सम्झौता रद्द गरौं र बैंकलाई लेखिदेनुहोस् कि हामी माल सप्लाई गर्न असमर्थ छौं अनि हामीले पठाएको एल०सी० पनि फर्काइदिनुहोस् !'

'ठीक छ !'- मेरो नकरात्मक भनाइलाई जाङदियाङ्ले स्वीकार गरिन्।

यो भनाइले हाम्रो व्यापारिक सम्झौता भंग भयो । वाङ जियादुलाई यो कुरा चित्त बुझेनछ, त्यसैले मलाई हातको इशाराले रोक्दै चीनियाँ भाषामा उनलाई सम्झाउन थाले, तर उनी मानिनन् । मलाई सम्झाउने बहानाले अंग्रेजीबाट खुसुक्क भने, भरे साँझका डिनरको लागि यिनलाई निम्तो गर्नुहोस् कुरा मिल्छ, कारण यिनी लालची छिन् ।

हामी उनीहरूको पाहुना, हामीलाई डिनर बोलाउनुपर्नेमा हामीले बोलाउनुपर्ने अवस्था आयो । गगनले आफ्नो भाषामा मलाई भने- 'ठीक छ ! चीनियाँहरू खानमा शौखीन हुन्छन्, खाना खान दिऔं, कुरा मिल्छ कि? हिजोदेखिको कुराकानी अल्झिरहेछ ।'

प्रस्ताव मलाई पनि ठीक लाग्यो । कुरा मिले पनि नमिले पनि डिनर जाने निर्णय गरेर जाङ दियाङ्लाई माझिएको भाषा प्रयोग गर्दै मैले भनें - 'म्याडम जाङ! काम नहुने भयो, ठीकै छ ! आज नभए पनि भोलि बन्ला ! अब हामी भोलि बेजिङ जाँदै छौं ! आज साँझ तपाईंलाई डिनरको लागि हामी निम्तो गर्छौं! कृपापूर्वक हाम्रो निम्तोलाई स्वीकार गर्नुहोस् ।'

मुसुक्क हाँसेर जाङ दियाङ्ले भनिन्- 'बेजिङ जाने ? म पनि भोलि जाँदै छु ! केमा जाने ? ट्रेनमा कि प्लेनमा ?'

'ट्रेनमै जानु बेस होला !'

'टिकट लिनुभयो ?'

हामीले जस्तै टिकट उनले पनि लिएकी रहिनछन् । हाम्रो उनको टिकट वाङ जियादुले आज दिउँसो लिने निर्णय भयो । बेजिङ जाने कुरा भएपछि जाङ दियाङ्मा केही परिवर्तन देख्न थालेको छु । आफ्नो लोग्ने बस्ने शहर भएकोले पनि उनी बेजिङ्को नाउँ सुन्नेबित्तिकै रमाएकी हुन सक्छिन् अथवा डिनरको निम्तोले पनि उनको मनःस्थितिमा स्फूर्ति भरिदिएको हुन सक्छ । उनी हामीसँग अनेकानेक प्रश्न गर्न थालिन् - त्यहाँ पनि व्यापार छ कि ? कति दिन बस्नुहुन्छ ? कहाँ बस्नुहुन्छ ? आदि आदि ।

उनको प्रश्नको जवाफ हामीले अंग्रेजीमा दियौं र वाङ जियादुले चीनियाँमा अनुवाद गरेर उनलाई सुनाए । भोलि ट्रेनमा सँगै बेजिङ जाने र ट्रेनमा रमाइलो हुने कुरा उनले हामीलाई बताए ! साँझको कार्यक्रम बारेमा उनले दोभाषे मार्फत भनिन्- 'हामीले तपाईंहरूलाई खानाको लागि निम्तो गर्नु-पर्नेमा उल्टै तिपाईंहरूले डाक्नुभयो, राम्रो भएन!'

'तपाईंको भनाइ ठीक हो ! के फरक भयो र ! हामी एउटै त हौं !'- उनले अप्ठेरो महसूस नगरुन् भनेर बिस्तारै भनें !

उनले कति बुझिन् हामीलाई थाह भएन ! केही बेरको मौनतापछि अप्ठेरो मानी स्वीकृति दिइन् । हामी सोझै उनको अनुहार हेरेर अनुमान गर्न सक्छौं उनी यस बखत त्यत्ति खुशी छैनन् ।

यसपछि साँझ भेट्ने कार्यक्रम मिलाएर हामी होटेलमा आउँछौं । तियानजिनको हाम्रो भ्रमण बेकार जाने भयो भन्नेमा हामी दुवै दुःखित छौं । हामी समयलाई विश्लेषण गर्छौं । जाङ दियाङसँग रत्तिभर पनि व्यापारिक खुबी नभएर पनि यत्रो कम्पनीको जिम्मा लिएर बसेको बारेमा र यहाँको प्रशासनिक कार्यशैलीका बारेमा पनि छलफल गर्छौं । यस्तै यस्तै कुराकानी गरेर साँझको कार्यक्रमलाई पर्खेर बसेका छौं ।

साँझ नपर्दै हामीलाई बोलाउन वाङ जियादु कम्पनीको मोटर लिएर आइपुगेछन् । हामी पनि तयार भयौं । होटेलको लबिमा हिंड्दा-हिंड्दै उनले भने- 'तपाईंहरू माइण्ड नगर्नुहोस्,साँझको खानाको लागि म्याडमलाई डाक्नुको अर्थ तपाईंहरूको काम हुनु हो। यिनी अलि अर्कै किसिमकी छिन् ! म तपाईंहरूको काम होस् भन्ने पक्षमा छु ।'

'कुरा हामीले बुझेका छौं !'

'हामीले कम्पनीको मात्र भलाइ सोचेर हुँदैन ! हाकिमको मनोविचारलाई पनि त्यत्तिकै बुझ्न सक्नुपर्छ ! त्यसैले मलाई माफ गर्नुहोस् ।' लाजले अनुहार नै रातो बनाएर वाङ जियादु हाम्रो अगाडि नाङ्गिन्छन् !

म उनलाई ढाडस दिंदै भन्छु- 'दुःख नमान्नुहोस् ! यस्तै हो ! हाम्रो देशतिर पनि यस्तै चल्छ ! हामी व्यापारी हौं, हामीले बुझेका छौं !'

कम्पनीको कारमा बसेर जाङ दियाङ बसेको ठाउँमा पुग्छौं, त्यहाँ अरू दुई जना समेत तीन जना कारमा बस्छन् र हामी नवनिर्मित चीनियाँ नगरमा जान्छौं र केही बेर त्यहाँ घुमेपछि साँझ पर्नेबित्तिकै हामी यस्तो विशाल भवनमा पुग्छौं, जहाँ सयौं साना ठूला फास्टफुडको स्टलदेखि लिएर विशाल रेष्टुराँहरू पनि रहेछन् । कुन रेष्टुराँमा खाने भन्ने विषयमा म्याडम जाङ दियाङलाई नै छनौट गर्न लगायौं ।

हामी सिङ्गापुर नामक रेष्टुराँमा पस्यौं । एउटै हॉलमा दुई सयसम्म बसेर खान सक्ने क्षमता भएको रेष्टुराँको एक साइडको टेबुलमा गएर ६ जवान बस्यौं । खाना अडर गर्ने काम पनि म्याडम जाङ दियाङलाई नै सुम्पियौं । उनले खानाको अडर गरिन् र 'माउथाई' नामक चीनियाँ रक्सी पनि एक बोतल ल्याउन भनिन् ।

खाना आउँदै गयो, अनेकानेक खाना आयो (गँगटो) क्राप र सर्प पनि ठूलो प्लेटमा आए । यसको अतिरिक्त भित्रबाट समय-समयमा अनेकानेक सूप र अन्य खाद्य वस्तुहरू सप्लाई हुँदै गयो । खाना हाम्रो रुचिको नभएको हुँदा हामीले यो खानालाई केवल साथ दिइरहेछौं किनभने हामीले खानै नसक्ने वस्तुहरू पनि खानाको परिकारमा सम्मिलित छन् ।

खानाको समाप्ति सँगैसँगै बिल पनि आयो । बिललाई गगनले लिए र हेरेर झस्किए र भने- 'नौ सय पचासको रहेछ !'

'हैं !' मैले बिल लिएँ र हेरें ! चीनियाँ भाषाको बिल मैले बुझ्ने कुरै भएन, त्यो बिललाई वाङ जीयादुको हातमा थमाउँदै भनें- 'यो बिल चेक गर्नुहोस् !'

'ठीक छ !' - उनले बिल चेक गरेर भने ।

बिल गगनको हातमा पुग्यो । उनी हडबडाए सबै खल्तीको पैसा निकालिसक्दा पनि नौ सय पचास निस्किएन । उनले मलाई सुटुक्क भने - 'यति ठूलो रकम आवश्यकता हुन्छ भन्ने सपनामा पनि सोचिएन ! अब के गर्नु ?'

हामी होस्ट भएको हुँदा अर्को सोच्ने कुरै भएन, गगनसँग करीब ६ सय युआन रहेछ । रेष्टुराँको काउण्टरमा कुरा मिलाएर सरकारी भाउमा एक सय यु०एस० डलर थप दिएर जसोतसो रेष्टुराँबाट छुट्टी लियौं ।

यति ठूलो रकम एक साँझको लागि खर्च गर्नुपरेकोमा गगनलाई ज्यादै दिल दुखेको कुरा मसँग दुःखमनाउ गर्छन् र व्यङ्ग्यात्मक बोलीमा आफ्नो भाषामा बोल्छन्- म्याडमको पेट यति ठूलो रहेछ कि चार महीनाको तलब एक बसाइमा सखाप पार्न सक्ने !'

'यस्तै हुन्छन् यहाँ ! भो, चिन्ता नगर !'- म गगनलाई सम्झाउँछु । हामीलाई कम्पनीको गाडीले होटेल पुग्याइदिन्छ । म म्याडम जाङ दियाङ्लाई छुट्टिन लाग्दै भन्छु- 'धन्यवाद तपाईंलाई हाम्रो निम्तो स्वीकार गरिदिएकोमा! हामी फेरि भोलि भेटौंला !'

उनले पनि औपचारिकता निभाउँदै भनिन्- 'आज मीठो खाना खुवाएकोमा तपाईंहरूलाई धन्यवाद ! भोलि फेरि हामी भेट्ने नै छौं ! फेरि धन्यवाद !'

भोलिपल्ट रेल-वे स्टेशनमा वाङ जियादु र अन्य दुई जवान पनि हामी तीन जनालाई पुग्याउन आएका छन् । वाङ जियादुले भन्छन्- 'शायद तपाईंहरूको काम मिल्ला जस्तो छ, म्याडम जाङ दियाङ तीन दिनपछि फर्किन्छिन् र सकारात्मक नै निर्णय दिन्छिन् जस्तो छ ।'

मैले उनलाई जवाफ दिएँ- 'मिले राम्रै छ !'

ट्रेन चल्छ ! वाङ जियादु हात हल्लाउँछन् । प्रति-उत्तरमा जाङ दियाङ र हामी दुवैले हात हल्लाएर बिदा हुन्छौं । रेलको गति सँगै वाङ जियादुसँग हामी टाढा हुँदै जान्छौं ।

यद्यपि भाषाको कारणले हामी आपसमा बोल्न सक्दैनौं, तर हामी मानवीय भाषा बोलिरहेछौं । कति उनले बुझिन् र कति हामीले बुझ्यौं त्यो आ-आफ्नो समझदारी हो ।

मेरो पकेटमा भएको एउटा राम्रो पेन म उपहारस्वरूप म्याडम जाङ दियाङ्लाई दिन्छु । उनी 'सेसे' को बोलीसँगै पेन थन्क्याउँछिन् । उनको नजर गंगनको हातको घडीमा पर्छ, 'टिटोनी' घडी देख्दा मनमोहक भएको हुँदा फुकाल्नको लागि भन्छिन् । गगनले फुकालेर म्याडम जाङ दियाङ्को हातमा दिन्छन् । एकछिन ओल्टाई पल्टाई हेरेर उनलाई राम्रो लागेको कुराकानी आफ्नै भाषामा भन्छिन् । हामीले बुझेर होइन, नबुझेर पनि उनको एक्सनमा साथ दिन वा पछि ल्याइदिनेछौं, तिमीलाई मन परेको छ भने - भन्ने आशयले 'ओके' भनेर गगनले के भनेका थिए, म्याडम जाङ दियाङ्ले 'सेसे' भनेर आफ्नो ब्यागभित्र घडी थन्क्याइन् । म्याडम जाङ दियाङ्बाट धन्यवाद खाएका गगन एक भन्नु न दुई भन्नुमा परे । म पनि केही बोल्ने स्थितिमा भइनँ । भाषा नजान्नुको दण्ड तिरेर हामी चुपचाप रेलबाहिरका दृश्य पछाडि छोड्दै बेंजिङतर्फ अगाडि बढीरहेछौं ।

पेचिङ होचचाङ - बेजिङको विशाल रेल- वे स्टेशनमा पुग्छौं । सँगैको प्लेट फर्ममा अर्को ट्रेन पनि आइपुगेको छ । रेलबाट उत्रिन्जेल म्याडम जाङ दियाङ सँगै छिन् । एकै

छिनपछि उनी हराइन् । होचो कदकी भएकी हुँदा हूलले उनलाई छपक्क छोप्यो । बोलाउने कुरा पनि भएन । म्याडम जाङ दियाङ त्यत्तिकै हामीबाट छुट्टिइन् ।

मान्छेको लश्कर खोला झरेजस्तो अण्डरग्राउण्डतर्फ ओइरियो । हामी पनि सँगसँगै पस्यौं । कहाँबाट, कसरी, कुन ठाउँ निस्कने हामीलाई पत्तो छैन । सबै बोर्डहरूमा चीनियाँ भाषाको प्रयोगले गर्दा हामी अन्धो भयौं भने भाषाले गर्दा लाटो भयौं । जसोतसो धेरै समयपछि टेक्सी स्ट्याण्डमा आएर टेक्सी समायौं । टेक्सी ड्राइभरलाई थाहा छ विदेशीहरू होटेलमा मात्र बस्छन्। त्यसैले उनले हामीलाई कोची फान्ट्यानमा पुग्याइदिए । अंग्रेजीमा यसलाई् होटेल इन्टरनेशनल पनि भनिने रहेछ ।

हामी बेजिङ जुन कामको लागि आएका हौं-हामीले फोन गर्‍यौं । सांघाईको रेफरेन्समा आफूलाई चिनाएपछि उनै सांघाईमा हामीसँग कुरा गर्ने दोभाषे टेलिफोनमा भेट भयो। उनको नाम साँङ्यो पेन रहेछ । भरखरै टेलिफोनमा बताएपछि मात्र मलाई थाह भयो-उनी भोलि बिहान कोची फ्रान्ट्यान आउने भए। हामी सँगै ब्रेकफास्ट खाने पनि निर्णय भयो। साँझ पर्न लगिसकेको हुँदा आज कतै नजाने निर्णय भयो ।

बिहान आठ बजे साँङ्यो पेनले तल लविबाट उनी आइपुगेको सूचना हामीलाई टेलिफोनमा गरे । हामी चाँडै नै कोठाबाट तल झर्ने तरखर गर्‍यौं र केही क्षणमै गगन र म दुवै लविमा पुग्यौं ।

साँङ्यो पेन पूर्व- परिचित चेहरा चाँडै नै भेट भइहाल्यो.तीनै जनाको निर्णय -अनुसार कन्टिनेन्टल ब्रेक फास्ट खाने निर्णय गरेर त्यही अनुसारको रेष्टुराँमा पस्यौं। गोल टेबुलमा त्रिकोण बनाई बनाई हामी बस्यौं र पुनः भेट भएकोमा हामी तीनै जनाले खुशी व्यक्त गर्‍यौं । यसै सिलसिलामा गगनले उनलाई सोधे- 'तपाईं कहिले बेजिङ आइपुग्नुभयो ?'

हिजो बिहानको फ्लाइटमा ! तपाईंहरू पनि आफ्नो समयमै आइपुग्नुभयो! मलाई लागेको थियो आज मात्र आइपुग्नुहुन्छ कि भनेर !'- उनी एकैपटक यी वाक्यहरू बोल्छन् र फेरि हामीसँग प्रश्न गर्छन्- 'तपाईंहरूलाई यहाँ होटेलसम्म आउन कष्ट त भएन ?'

'त्यत्ति कष्ट भएन !' - गगनले जवाफ दिए !

टेबुलमा अडर कीपर आएर उभिएपछि गगनले नै अडर दिए । साँङ यो पेनको विशेष रुचि-बारेमा सोध्दा हामीहरूकै रुचि-अनुसार खाने राय व्यक्त गरेकाले- जाम टोस्ट र एग सेन्वीच र कफी - गगनले आफूलाई मन पर्ने खाना अडर गरे। सर छिन गो छिनको सन्चो बिसन्चोको बारेमा मैले उनलाई सोधें । उनले सबै ठीक भएको र सर छिन गो छिन हामीबाट प्रभावित भएका कुरा पनि बताए,उनलाई जसरी हुन्छ काम राम्रो गरिसकेर मात्र बेजिङबाट फर्कने भनिएको पनि रहेछ, उनीसँगको दोस्रोपटकको भेट भएको हुँदा उनी हामीसँग निकै खुलेर कुरा गरिरहेका छन् ।

गगन आफूभित्रको कमजोरीलाई साँङ्यो पेनको अगाडि राख्दै भन्छन्- 'मिष्टर पेन! के तपाईं विश्वास गर्नुहुन्छ, यो व्यापार हुन सक्ला ?'

'किन नसक्नु ! व्यापारीलाई व्यापार र व्यापारलाई व्यापारी चाहिन्छ ! अनि व्यापार सम्पन्न हुन्छ !'- म गगनको शंका निवारणका लागि बोल्छु ।

'ठीक भन्नुभयो !'- मेरो भनाइलाई साँङ्यो पेनले समर्थन गर्दै भन्छन्- 'व्यापार नहुने त कुरै छैन ।'

एकै छिनपछि साँङ्यो पेन बिस्तारै हामीसँग अनुरोध गर्छन्- 'काम भयो भने बरु मलाई नबिर्सनुहोस् है !'

'तपाईंको सहयोगले काम हुने अनि तपाईंलाई हामीले कसरी बिर्सने ? तपाईं र हामी साथी भइसक्यौं र भविष्यसम्म साथी रहनेछौं'- मैले उनलाई जोड दिएर भनें ।

यो कुरा सुनेर उनी खुशी भएजस्तो लाग्यो । उनको अनुहारमा खुशियाली देखिन थाल्यो । उनी बिस्तारै भन्छन्- 'यो काम त त्यति ठूलो होइन । यदि यो काम सफल भयो भने वा काम शुरू मात्र गर्न थाल्नुभयो भने पनि म तपाईंहरूलाई ठूलो काम दिलाइदिन सक्छु ।'

'कस्तो ?' - गगन तुरुन्तै प्रश्न गर्छन् ।

'ज्यादै ठूलो काम !'

'कति ठूलो ?' - गगन फेरि प्रश्न गर्छन् ।

गगनको प्रश्नको उत्तरमा साँङ्यो पेन बिस्तारै भन्दै जान्छन्- 'हालै मात्र दुईओटा कम्पनीले हवाई सेवा चलाउन पाउने गरी केन्द्रीय सरकारले स्वीकृति प्रदान गरेको छ । कमसे कम पनि दश दशवटा बोइङ कम्पनीबाट हवाईजहाज किन्दै छन् । त्यसको लागि विदेशी मुद्राको पनि बन्दोबस्त भइसकेको छ । जुन कम्पनीले जहाज झिकाउने अधिकार पाएको छ, त्यसमा हाम्रो सर छिन गो छिनको राम्रो हात छ ।'

कुरा सुनेर म झस्किएँ । गगन त हेरेको हेरै भए । मलाई यो कुरा पत्यार अपत्यार दुवै लागिरहेछ । एउटा बोइङ्को करीब चालीस मिलियन यु०एस० डलर पर्छ । अमेरिकनहरूसँगको व्यापारमा कमीशन नेगोसेबल हुन्छ । यो काम अत्यन्तै ठूलो हो, तर काम प्राप्त पो कसरी हुन्छ ? सम्झेर सम्झन नसक्ने अवस्थामा पुगें । गगन व्यापारी भएर पनि यस बारेमा केही सोच्न सकेका छैनन् ।

म आफूले बढी जानकारी लिन चाहेर बिस्तारै उनीसँग भन्छु- 'सर छिन गो छिनले त यो कुरा सांघाईमा हामीसँग गर्नुभएको थिएन ।'

'म तपाईंहरूको साथी भइसकेको हुँदा यो कुरा भनेको हुँ ! सर छिन गो छिनले यो काम अमेरिकन पार्टीसँग गर्नुपर्छ भनेका थिए, र एउटा हङकङको चाइनिज मार्फत कुरा पनि भइरहेको छ, तर मैले तपाईंहरूलाई सूचनासम्म दिएको हुँ !'- साँङ्यो पेन व्यापारको रहस्योद्घाटन गर्छन्

यिनी हामीसँग राम्रै घनिष्ठता कायम गर्न खोज्दै छन् । हामी विदेशी भएको हुँदा हामीसँग जे कुरा भए पनि उनीहरूको समाजमा नजाने र कहीं कतै नखुल्ने हुँदा पनि हाम्रो अगाडि गोपनीयता खोल्न हिचकिचाउँदैनन् । त्यसमा पनि सर छिन गो छिनले विश्वास

गरेर बेजिङ्मा कुरा गर्न पठाएका हामीसँग साँङ्यो पेनले कुनै शंका गर्ने रतीभर पनि ठाउँ थिएन । त्यसैले उनले व्यापारका अरूहरू कुरा पनि गर्न लागे ।

आजको कार्यक्रम-बारेमा म साँङ्यो पेनसँग सोद्धछु । उनी भन्छन्- 'दिउँसो तीन बजे हामीलाई त्यहाँ जानु छ । तबसम्म तपाईंहरू घुम्ने कार्यक्रम वनाउनुहोस्, मलाई पनि फुर्सद छ ।'

'त्यसो भए घुम्ने कार्यक्रम बनाऔं । कहाँ जाने ?'- गगनले खुशी व्यक्त गर्छन् ।

'यहीं बेजिङ शहरभित्र घुम्न शुरू गरौं ! नौ बजिसकेको छ ! तीन बज्न कति बेर लाग्छ !' - मैले आफ्नो राय दिएँ ।

'हुन्छ ! के के हेर्ने पहिले ?'

'तेनम्यान स्वामर ! हुँदैन ?'- गगन मलाई सोध्छन् ।

'ओ थियानम्यान ! हुन्छ !'- साँङ्यो पेन मञ्जूरी जनाउँछन् ।

हामी होटेलको बाहिर आएर टेक्सी समाउँछौं र बेजिङ शहरको खुला र सुन्दर बाटोमा चिप्लिन थाल्छौं । सफा, दुवैतिर रूख र बगैंचा, चौडा बाटा, नयाँ- नयाँ स्तरीय गाडीहरू कुदिरहेका छन् । अग्ला भवनहरू नवनिर्माण हुन लागेको हामी टडकारो देख्छौं! ट्राफिक सेल्फ कन्ट्रोल छ । कुनै पनि पश्चिमी शहरको मुकाबलामा यो पनि कम रहेनछ! सबैभन्दा रमाइलो त रङ्गी -बिरंगी फूलहरू बाटोको दुवै किनारमा निरन्तर देखिइ नै रहन्छन् ।

हेर्दाहेर्दै हामी तियानम्यान चोकमा आइपुग्छौं । विशाल चोक, शायद यही ग्रेट हॉल यसको शोभा हो । चोकको एक कुनामा टेक्सी छोड्छौं र कहीं कतै अग्ला घर नदेखिने यो चोकमा एक कुनादेखि अर्को कुनासम्म पुग्न पन्ध्र मिनेट लगाउँछौं । एउटै ठूलो ढुङ्गामा कुँदिएको चीनियाँ साँस्कृतिक क्रान्ति झल्कने झाँकी देखेर चीनियाँ कलाको नमूना प्रस्तुत भइरहेको छ भने सामुन्ने टाँगिएको माओत्से तुङ्को ठूलो तैलचित्र तियानम्यान चोकको केन्द्रबिन्दु हुन पुगेको छ । चीनको मुख्य केन्द्र बेजिङ र बेजिङ्को मूल बिन्दु हुन पुगेको तियानम्यान चोकमा अध्यक्ष माओत्से तुङ्ले १९४९ मा यहींबाट जन गणतन्त्र चीनको स्थापनाको घोषणा गर्नुभएको थियो । यस ठाउँको महत्त्व त्यसै दिनदेखि शुरू भएको छ ।

यस चोकमा भएको म्यूजियम र माओत्से तुङ्को सुरक्षित मृत शरीरलाई हेरेर हामी पाइथास मतलब व्हाईट पागोडामा पुग्छौं । यो बौद्ध स्तूप नेपालका कलाकार अरनिकोले बनाएका रहेछन् । नेपाली शैलीले निर्मित यो स्तूप सेतो चूनले पोतिएको छ । यो बौद्ध स्तूपको वरपर देखिने बस्तीहरूले बेजिङ्को शताब्दियौं पुरानो बस्तीको अनुमान गर्न सजिलो भएको छ ।

पाइहाई अर्थात् शीतकालीन दरबारमा जान्छौं । ठूलो तालको वर-पर अनेकानेक मन्दिर र घरहरू - जुन चीनियाँ शैलीमा निर्मित भएको विशाल क्षेत्र ओगटेर रहेका छन् । यहाँ एउटा नेपाली शैलीको स्तूप देखियो । यस बारेमा सोधखोज गर्दा थाह पाइयो, यो स्तूप अरनिकोका प्रथम चेलाले बनाएका रहेछन् । यो तालमा एक छेउमा बोटिङ गर्ने पनि

व्यवस्था छ । तर धेरै क्षेत्र सुरक्षाको दृष्टिले बोटिङ गर्न दिइन्न । भनिन्छ यो तालकै एक किनारमा देशका उच्च ओहदाका व्यक्तिहरूको वासस्थान छ ।

हामी त्यसपछि करीब बीस क्लिलोमिटर टाढा इख युआन अर्थात् वर्षाकालीन दरबारमा पुग्छौं । यहाँ पनि ताल र वर-पर चीनियाँ शैलीमा निर्मित भवन र मन्दिरहरू छन् । भनिन्छ यो ताल हिउँदमा हिउँ जमेर सेतो मैदान हुन्छ ।

चीनका सम्राटहरूका यी दरबारहरू घुमेर हामी वाङफुचिङ बेजिङको ठूलो बजार आइपुग्छौं । मान्छेको भीड छ । फुट- पाथमा हिंडिसक्नु छैन । जता हेर्‍यो उतै मान्छे ! कार्यक्रम-अनुसार दिउँसो को खाना त्यहीं खाने हुँदा हामी खाना खाने ठाउँ हेर्दै अगाडि बढ्दै छौं । रेष्टुराँहरू पनि भीडमभिड छन् ।

एउटा पश्चिम-दक्षिण चीन मतलब सिचुआन क्षेत्रको खाना पाइने रेष्टुराँमा पस्छौं । यस-अघि हामीलाई साँङ्यो पेनले सोधेका थिए-'तपाईंहरूलाई टाठो खाना कस्तो लाग्छ ?' 'हामीलाई ठीकै लाग्छ !' भनेपछि उनले त्यो रेष्टुराँलाई रोजेका रहेछन् । टेबुलमा आएको खाना सबै पीरो छन्। भोक लागेको हुँदा केही खायौं । क्षेत्रैपिछे र जातैपिछे खानाको परिकार र तरीकामा फरक हुन्छ भन्ने हामीलाई के थाहा ? पीरो पनि यति उत्पात छ कि निल्नै सकिन्न । जसोतसो भोक भेट्न म र गगन हामी दुवैले एक दुई टुक्रा खायौं । साँङ्यो पेनले राम्रै गरी खाए । उनलाई यो खाना खाने आदत रहेछ । हामी खाना खाएर निर्दिष्ट स्थानको लागि रमाना हुन्छौं किनभने तीन बज्न बीस मिनेट मात्र बाँकी छ ।

हाम्रो गाडी एउटा विशाल बृटिश शैलीमा निर्मित दरवारको सामु रोकिन्छ । हामी गाडीबाट उत्रन्छौं । दरवार प्रवेशको लागि सिंढी उक्लन थाल्छौं। जमीन-सतहबाट करीब दश बाह्र फुट माथि आएपछि दरवारको प्रवेशद्वार छ । प्रवेश गर्नेबित्तिकै हॉल छ । हॉलको तल्ला अग्लो छ । हामी हॉलको एक कुनाबाट शुरू भएको भर्‍याङ हुँदै माथि पुग्छौं । सुरक्षाको लागि सुरक्षाकर्मी बन्दूक बोकेर ठाउँ-ठाउँमा बसेका छन् । यो क्रम दरवारको शुरू ढोकादेखि नै जारी छ । हिंड्ने बाटोमा आयातित गलैंचा बिछ्याइएको छ । लाइटिङ्को यस्तो व्यवस्था छ कि बाहिर खुल्ला बातावरणबाट भित्र पस्दा मलाई कुनै पत्तै भएन । यत्तिको उज्यालो यो बन्द दरवारभित्र कहाँबाट प्रवेश गरेको भन्ने पत्ता लगाउन फुर्सद मैले पाएको पनि छैन ।

साँङ्यो पेन एउटा ढोकामा पुगेर रोकिन्छन्, हामी पनि रोकिन्छौं । त्यही कोठाभित्र प्रवेश गराएर त्यहाँ भएको सोफामा हामीलाई बस्न भनेर आफू कोठाबाट बाहिर निस्किए । करीब दश मिनेटपछि आएर भने- 'माफ गर्नुहोस् ! सर ताङस्याउ ची आज इमर्जेन्सी मिटिङ्मा हुनुहुन्छ । उहाँलाई साँझसम्म फुर्सद हुँदैन ।'

हामीले उनको कुरा सुन्यौं मात्र, केही भन्ने कुरा नै भएन । म र गगन पनि मुखामुख गर्‍यौं, केही बोलेनौं । हामी भेट्न आएका, त्यसमा पनि विदेशी मान्छेले कुनै केही भन्ने कुरा नै भएन । हामीले केही प्रतिक्रिया नजनाएपछि उनी फेरि भन्छन्- 'तपाईंहरू एकछिन बस्नुहोस्, निर्णय लिएर आउँछु ।' उनी फेरि कोठा-बाहिर गए ! गगन भन्छन्- 'यी ताङस्याउ ची कस्ता होलान्? यति ठूलो देशको जिम्मेवार अधिकारी ! फेरि यत्रो शक्ति !'

उनको भनाइलाई साथ दिन म केही बोल्दिनँ । हुन त म पनि त्यही विषयको सोचमा डुबेको छु । जुन कुरालाई गगनले स्पष्ट शब्दमा व्यक्त गरे । गगन आफ्नै हिसाबमा केही भनिरहन्छन्, त्यसतर्फ म ध्यान दिन्नँ । यत्तिकैमा चियाको कप लिएकी एक युवती ट्रली गुडाउँदै हाम्रो कोठामा पस्छिन् र हाम्रो अगाडि कप राखेर चिया भरिदिन्छिन् ।

हामी चिया पिउन व्यस्त रहन्छौं । करीब पन्ध्र मिनेटपछि आएर भन्छन्- 'सर ताङस्याउ चीले हामीहरूलाई उनको घरमा भेट्ने भनेका छन् । खानाको लागि पनि निम्तो गरेका छन् ।'

'ए ! अहिले फुर्सद भएनछ ?'- म उनीबाट स्पष्ट जानकारी लिन चाहन्छु ।

'हो ! उनी ठूलो अफिसर हुन् ! आज अचानक मिटिङ परेछ । केही छैन, यहाँभन्दा घरमा भेट्नु राम्रो हुन्छ ! घरायसी सम्बन्ध कायम हुन्छ र असल दोस्त बनिन्छ ।'- उनी आफ्नो विचार हाम्रो सामु व्यक्त गर्छन् ।

'अब के गर्ने त हामीसँग समय भयो ?'- गगन प्रश्न गर्छन् ।

'ठीक छ ! घुम्न जाउँ न ! तपाईंहरूलाई म स्वर्गको मन्दिरमा घुमाउन लान्छु ।'

'कहाँ स्वर्गको मन्दिर ?'

'यहीं बेजिङमा ! टाढा छैन ।'

हामी बाहिर निस्कन्छौं र टेक्सी समाउँछौं । केही बेरमै हामी 'थियानथान' अर्थात् 'ट्याम्पल अफ हेवेन' को क्षेत्रमा पुग्छौं । गाडी छोडेर बगैंचा र हरियो वातावरणलाई पछाडि छोड्दै हामी पैदल अगाडि बढ्छौं । अनि लामो सिंढी उक्लेर हामी स्वर्गको मन्दिरको हाताभित्र प्रवेश गर्छौं ।

ढुङ्गा छापेको सफा चोकको बीचमा अभूतपूर्व विशाल मन्दिर छ । मन्दिर गोलो किसिमबाट निर्माण भई दुइतहको छानाले छोपिएको र छानाको बीच भागमा थेप्चो गजूर लागेको हुँदा झलक्क हेर्दा नेपाली पागोडा शैलीको मन्दिर जस्तो देखिने यो मन्दिर अत्यन्तै सुन्दर र मनमोहक छ ।

अनौठो कुरा के भने एक छेउको पर्खालमा एक जनाले मुख जोडेर बोल्दा अर्को छेउको पर्खालमा अर्काले कान थाप्दा टेलिफोनमा जस्तो कुरा हुन सक्छ । भनिन्छ यो मन्दिर एउटै रूखको काठबाट निर्मित भएको हो - जुन कुरा पत्याइसक्नु नै छैन ।

हामी अग्लो ठाउँमा भएको हुँदा वरपर घुमीं-घुमी बेजिङ शहरको सेरोफेरो हेर्न थाल्छौं । एक घण्टा करीब बस्दा पनि हामीलाई लामो समय लागेन, जब गगनले घडी हेरेर बताएपछि पो थाह भयो हामी यहाँ एक घण्टा अगाडि आएका थियौं । मैले साङ्यो पेनलाई सम्बोधन गर्दै भनें- 'मिष्टर पेन, हामी यहाँ आइपुगेको एक घण्टा भइसकेछ । यति लामो समय बितेको चालै पाइएन !'

उनी हाँसेर जवाफ दिन्छन्- 'तपाईं अहिले स्वर्गमा हुनुहुन्छ ! कसरी तपाईंलाई समयले बाँध्न सक्छ ?'

वास्तवमा यहाँ स्वर्गीय आनन्द मिलेको अनुभव भइरहेछ । चीनियाँहरू पनि मृत्युपश्चात् स्वर्ग वा नर्कमा गइने बलियो विश्वास बोकेका हुँदा रहेछन्। यो कुरा साँङ्यो पेनले हामीलाई बताए । यस बारेमा उनको विश्वास जान्न खोज्दा उनी भन्छन्- 'यो पुरानो विचार, पुरानो चीनियाँ धर्म संस्कृतिले व्याख्या गरेको हो, तर म चीनियाँ नौलो संस्कृतिमा हुर्किएको हुँदा मलाई मृत्यु -पश्चात्को कुरामा त्यत्ति विश्वास छैन ।'

'नौलो संस्कृति भनेको के हो ?'- गगन जान्न चाहेर उनीसँग सवाल गर्छन् ।

साङ्यो पेनले गगनको सवालको जवाफ दिदैं भन्छन्- 'यो हाम्रो राष्ट्रको संस्कृति हो । नौलो जनवादी संस्कृति राष्ट्रिय स्वरूपको संस्कृति हो ! यसले सामन्तवादी तथा परम्परावादीको विरोध र राष्ट्रिय प्रतिष्ठा र स्वाधीनताको समर्थन गर्दै सम्पूर्ण चीनियाँ जाति एक हौं र हुनुपर्छ भन्ने भावनाको विकास गर्छ ।'

'पुरानो संस्कृतिको मूल्य र मान्यता चीनियाँ समाजबाट पूरै हटिसक्यो? तपाईंको अध्ययनले के बताउँछ ?'- म साँङ्यो पेनको व्यक्तिगत विचार बुझ्न चाहन्छु ।

मेरो प्रश्नले उनलाई एकछिन सोचमा डुबायो र यथार्थ कुरा उनलाई भन्न कर लाग्यो र भने- 'एउटा नष्ट नगरी अर्को निर्माण गर्न सकिन्न' भन्ने चीनियाँ नौलो जनवादी सिद्धान्त अनुसार चीनियाँ समाजमा फैलिएको पुरानो संस्कृतिको अस्तित्व समाप्त गर्न नै चीनियाँ सांस्कृतिक क्रान्ति शुरू भएको हो, समाजमा व्यवस्थित संस्कृति समाप्त गर्नु भन्ने कुरा राज्य- सत्ता परिवर्तन जस्तो सजिलो होइन रहेछ भन्ने तथ्य शासकवर्गले बुझेको हुँदा यो क्रान्ति रोकियो । पुरानो चीनियाँ संस्कृतिले समाजमा फेरि बिस्तारै आफ्नो मूल्य स्थापना गर्न थालेको मैले महसूस गर्न थालेको छु ।

'नौलो जनवाद चीनियाँ समाजमा पुरानो चीनियाँ संस्कृति पुनः स्थापना हुन सक्छ भन्ने तपाईं विश्वास गर्नुहुन्छ ?'- उनको विचारलाई अरू स्पष्ट पार्न म उनीसँग प्रश्न गर्छु ।

'वास्तवमा भन्ने हो भने नौलो जनवाद अन्तर्गत सञ्चालित साँस्कृतिक क्रान्तिले व्यवस्थित चीनियाँ संस्कृतिको उन्मूलन गर्न सकेन । यसको प्रभावलाई सम्म कमजोर बनायो । यो मासिएको छैन ! त्यसैले पुनः स्थापनाको प्रश्न नै छैन!'- उनको विश्वास बोल्छ।

'तपाईंको पहिलो भनाइ अनुसार तपाईं पुरानो चीनियाँ संस्कृतिलाई मान्नुहुन्न! फेरि समाजमा पुरानो चीनियाँ संस्कृतिको मूल्य र मान्यता कायम नै छ भन्ने पनि स्वीकार गर्नुहुन्छ । कुरा आपसमा बाझिएन ?' - गगनले उनलाई बीचैमा सवाल गर्छन् ।

'हो ! जब स्कूलमा पढ्थें त्यस बखत चीनियाँ सांस्कृतिक क्रान्ति चलेको थियो । प्रारम्भिक शिक्षा मैले त्यहीं पाएँ । जब म जानिफकार भएँ, प्राचीन चीनका इतिहासहरूको अध्ययन गरें र समाजलाई नजीकबाट नियाल्न थालें तब पुरातन संस्कृति नै वास्तवमा चीनियाँ परिचयको संस्कृति रहेछ भन्ने मैले बुझें । मलाई धर्मले खिंचिसकेको छैन । तर जब म पुरानो संस्कृतिमाथि रुचि राख्न थालेको छु भने मेरो पारिवारिक संस्कारले भविष्यमा

धर्मप्रति पनि ननजीक्याउला भन्ने के छ र ?'- उनी आफ्नो धारणा स्पष्ट शब्दमा हाम्रो सामु राखिदिन्छन् ।

अब हामी मन्दिर एरियाबाट बाहिर निस्कने तरखरमा छौं । समय धेरै बितिसक्यो । अब हामी सीधा सर ताङस्याउ चीको घरमा जाने निश्चय गरेका छौं । हामी टेक्सी समाएर हिड्छौं । टेक्सी शहरी वातावरणलाई पार गरेर शहरभन्दा बाहिरको भाग आइपुग्छ । त्यहाँ कुनै पसल वा शहरी चहकमहक छैन । सफा बाटो, दुवैतिर एकैनासे सफा र राम्रो बनावटका घरहरू देखिन्छन् । एउटा गेटमा गएर टेक्सी रोकिन्छ ।

हामीलाई टेक्सीमै छोडेर साँङ्यो पेन गेटको भित्री भागमा पहरा बसिरहेको सुरक्षाकर्मीलाई सोधखोज गर्छन् र त्यहाँ भएको टेलिफोनले भित्र बङ्गलोमा सम्पर्क गर्छन् । एकै छिनपछि आएर भन्छन्- 'अहिले टेक्सी छोडिदिऊँ, भित्र जाउँ !'

हामीले टेक्सी छोडिदिन्छौं ! भित्र प्रवेश गर्दागर्दै उनले फेरि भन्छन् 'सर ताङस्याउ ची आउँदै छन् । करीब दश मिनेटभित्र यहाँ आइपुग्छन् । हामी गएर भित्र बसौं ।'

यो सुनेर मलाई खल्लो त लाग्यो-अहिले पनि भेट नहुने हो कि भनेर ! तर क्याम्प प्रवेश गर्नेबित्तिकै मेरो यो खल्लोपन दूर भयो, कारण हरियो कार्पेट जस्तो चौर र वरपर लटरम्म फुलेका अनेक जातका फल- फूलहरूले मलाई खिंचेर मेरो मन नै रोमाञ्चित गराइदियो । यो वातावरणलाई छोडेर म बंगलोभित्र प्रवेश गर्न हतारिएको छैन । म गगनलाई बगैचाको चौतर्फी देखाउँदै भन्छु- 'अहा ! क्या सुन्दर ! देख्यौ ?'

'बरु यो सोच न ! कति जना बगैचेका हात जुटेका होलान् यहाँ !'- गगनको हेराइ फरक भएको कुरा उनले व्यक्त गरे ।

यत्तिकैमा भित्रबाट एक जना भलादमी आएर हामीलाई 'निहाउ व्हानइङ!' भनेर स्वागत गर्छन् । हामी उनीसँग हात मिलाउँछौं । उनले हामीलाई गाइड गरेर बैठक कोठामा लग्छन् । त्यहाँ भएका सोफामध्ये एउटा लङ सोफामा हामी दुवै गएर बस्छौं ।

बैठक अर्ध यूरोपियन शैलीमा सजाइएको छ । चीनियाँ संस्कृति झल्कने धेरै सामान पनि बैठकमा देखिन्छन्, तर प्रदर्शन गर्ने तरीका चाहिं पश्चिमी शैलीलाई प्राथमिकता दिइएको देखियो । गगन बैठकका सामानलाई हेरेरं भन्छन्- 'कति सामान सजाइएको छ यहाँ ! देख्यौ ?'

'हो ! यी सबै उपहारमा आएका सामानहरू हुन सक्छन् ! उपहार लिने- दिने यहाँको चलन हो !'- मैले बुझिसकेको कुरा उनलाई बुझाउन यसकारणले चाहेको हुँ कि यी सामानहरू देखेर आश्चर्य मान्नुपर्ने कुरा छैन ।

चिया लिएर एक जना युवती प्रवेश गर्छिन् । हाम्रो सामुको टेबुलमा दुइटा कप राखेर चियाले भरिदिन्छिन् । उनलाई हामी हाँसेर धन्यवाद दिन्छौं। उनी कोठाबाट गएपछि हामी मात्र बैठकमा बसेका छौं ।

हामी आपसमा यो बैठक उपभोग गर्ने मान्छेको बारेमा सोच्न थाल्छौं । अनेक तर्क गर्दै गगन अनुमान गर्छन्-'यो घरका ताङस्याउ ची साँचि नै शौखीन जस्तो लाग्यो । हुन सक्छ यिनी खानदानी शौखीन हुन् !'

'भन्न सकिन्न साँस्कृतिक क्रान्तिको दौरानमा गाउँका मान्छेलाई शहरमा र शहरका मान्छेलाई गाउँमा खटाउने र पठाउने काम भयो अर्थात् इन्टर चेन्ज। त्यस अन्तर्गत यिनी गाउँका पनि हुन सक्छन् र शहरवासी खानदानी शौखीन पनि हुन सक्छन्, त्यो उनीलाई भेटेपछि मात्र एकीन गर्न सकिन्छ ।'

गगन कुरालाई निरन्तरता दिन भन्छन्- 'मेरो अनुमान यो सजावटलाई हेरेर हो ! यो बंगलो र यहाँको सजावटलाई हेर्ने हो भने यूरोपेली एरिष्टेक्रेट परिवारको भन्दा कम देखिदैन।'

'तिम्रो अनुमान ठीक हो' - भनेर मैले भन्न नपाउँदै साँङ्यो पेनले आएर भन्छन्- 'सर ताङस्याउ ची आइपुगे, बगैंचामा छन् उनी, केही बेरमै यहाँ प्रवेश गर्दै छन् ।'

हामी सतर्क भयौं । आफ्नो अनुहार रुमालले पुछ्नेदेखि लिएर लगाएको सुट र टाइलाई मिले - नमिलेको ठीक गर्न थाल्छौं । यो मामलामा मभन्दा गगन सतर्क हुन्छन् । हामी तयार हुँदै नहुँदै बैठकमा तीन जना व्यक्तिको प्रवेश हुन्छ । साँङ्यो पेन र पहिलेका भलादमी साथै एउटा अधबैंसे माओ सुट लगाएका साधारण देखिने मान्छे हाम्रो अगाडि बढिरहेका छन् ।

ती मान्छे जो बैठकमा प्रवेश गरेर हामी नजीक आइरहेछन्- यिनका बारेमा हामी अनुमान गर्न सकिरहेका छैनौं कि यिनी त्यही व्यक्ति हुन् जसलाई भेट्न हामी यति लामो यात्रा पार गरेर यहाँ आइपुगेका छौं ।

हामी नजीक आएर साँङ्यो पेनले त्यही व्यक्तिलाई देखाउँदै भन्छन्- 'यहाँ सर ताङस्याउची हुन् !'

हामीले उनीसँग हात मिलाउँदा-मिलाउँदै हामी दुवैको परिचय उनले दिन्छन् । हँसिलो अनुहार भएका ती व्यक्तिको खस्रो हातले बतायो उनको परिश्रम गरेर भरखरै सुस्ताएको हात रहेछ ।

उनी हाम्रो सामुको सोफामा बस्छन् भने साँङ्यो पेन हाम्रो छेउको सोफामा बस्छन्, उनीहरूको अगाडि पनि चियाको कप र तातो चिया आइपुग्छ र हाम्रो खाली कप पनि तातो चियापानीले भरिन्छ । हामी आपसी औपचारिक कुराकानी शुरू गर्छौं ।

दिउँसो कार्यालयमा भेट्न नपाएको र त्यसको लागि हामीलाई भएको दुःखको बारेमा उनी स्वयम् दुःखी भएको कुरा दोभाषे साँङ्यो पेन मार्फत् ताङस्या उचीले बताए ।

हाम्रो बारेमा सर छिन गो छिनले टेलिफोनद्धारा भनिसकेको र त्यही कामको लागि साँङ्यो पेनलाई पठाएको बेहोरा पनि जानकारी हुन आयो । उनी हामीसँग कुरा गर्दा र हामीले उनीसँग कुरा गर्दा साँङ्यो पेनलाई भन्ने र उनले हामीलाई बेग्लाबेग्लै भन्नुपर्दा कुरा अत्यन्तै ढीलो, गतिमा भइरहेछ।

'तपाईंहरू कस्तो कस्तो सामान बेच्ने काम गर्नुहुन्छ ?'

'सबै किसिमका सामान जुन तपाईंहरू चाहनुहुन्छ त्यो सामान सप्लाई गर्न सक्छौं ।'

'जापानको, यूरोपको र अमेरिकाको ?'

'हो, सकिन्छ !'

'फर्टीलाइजर यो पटक हामीलाई धेरै चाहिएको छ !'

'कति जति चाहिन्छ ?'

'करीब एक बिलियन यु०एस० डलरको यो पटक किन्ने निर्णय गरेका छौं।'

मैले 'हुन्छ वा सक्छु !' भन्ने हिम्मत गरिनँ, गगनले पनि केही भनेनन्। मैले आफ्नो टाउको मात्र हल्लाएर कुरा आफूले बुझेको सम्म संकेत गरें । यो फर्टीलाइजर कुन कुन मुलुकले बनाउँछ र विश्वमा कहाँ सस्तो पाइन्छ भन्ने कुरा मलाई थाहा हुन नसकेकोले आफूलाई जानकारी नभएको कुरा बोल्नु ठीक ठानिनँ ।

'तपाईंहरू यो फर्टीलाइजर सप्लाइ गर्न सक्नुहुन्छ ?'- यो दोभाषे मार्फत् आएको सवालले मलाई अप्ठेरोमा पार्छ । म द्विविधामा पर्छु ।

गगनले तुरुन्त जवाफ दिन्छन्- 'सकिन्छ ! किन सकिन्न !'

'कहाँबाट सप्लाई गर्न सक्नुहुन्छ ?'- भन्ने जवाफमा गगनले सविस्तार भन्न थाल्छन् । मेरो विषय नभएको हुँदा बीचमा मैले केही बोल्ने कुरा पनि भएन ।

यसै-बीच खाना खाने समय भएको कुरा हाम्रो जानकारीमा आयो। यही बैठक जोडिएको डाइनिङ हॉलमा हामी सबै पुग्छौं । गोलो टेबुल दश जवानसम्म बसेर खान मिल्ने रहेछ । हामी चार जवान सँगसँगै डाइनिङ हॉलमा पुग्नेबित्तिकै एक जना अधबैंसे महिला प्रवेश गर्छिन् । तिनी ताङस्याउ चीकी श्रीमती रहिछन् । टेबुलमा हामी पाँच जवान खाना खान बस्छौं ।

टेबुलको सजावट र हामीलाई खानाको लागि तयारी गर्न दुई युवतीहरू लागेका छन् । हामी बसेको अगाडि हात पुछ्नको लागि रुमाल राख्ने र हाम्रो लुगामा खानाखसेर फोहर नहोस् भनेर घुँडासम्म रुमालले छोप्ने काम पनि हुन्छ। हामी बसेको ठीक अगाडि खाली प्लेटहरू र चियाका कपहरू राख्ने काम हुन्छ । त्यस्तै रक्सी पिउने सानो कप, चपस्टिक आदि पनि टेबुलमा सजिन पुग्छन् ।

केही क्षणमै दुइटा उस्तै लुगा लगाएका युवकहरू खाना ल्याउन थाल्छन् । जसले खाना ल्याउँछ उनै युवकले हामी पाँचै जनाको प्लेटमा एक एक टुक्रा आफ्नै हातले हालिदिन्छन् र त्यो परिकारको प्लेट त्यही टेबुलको बीच भागमा राखिदिन्छन् । एउटी युवतीले सानो ग्लासको कपमा रक्सी राखिदिन्छिन् । ताङस्याउ चीले टोस्ट प्रस्ताव गर्दै आफ्नो भाषामा भन्छन्- 'म तपाईंहरूलाई यहाँ स्वागत गर्छु ! साथै, तपाईंहरूको व्यापारको सफलताको कामना गर्छु !' हामीले पनि औपचारिकतालाई निर्वाह गर्यौं । अर्को खानाको परिकार लिएर अर्का युवक आउँछन् र त्यसै गरी एक एक टुक्रा हाम्रो प्लेटमा राखेर खानाको प्लेट बीच टेबुलमा राखिदिन्छन् । यो क्रम चल्दै रहन्छ । यसको अर्थ हो हामीले खानाको परिकार चाखेपछि मीठो लागेमा फेरि खाने र मीठो नलागेमा नखाने। यसै अनुसार

गगन र म उही चाख्न दिएको परिकार मात्र खाइरहेछौं । बीच टेबुलमा भएको खाना खाने रुचि राखेका छैनौं । किनभने हाम्रो स्वाद मिल्ने खाना अहिलेसम्म आइपुगेकै छैन । त्यस्तै उनीहरूले पनि हामीले जस्तै चाख्ने काम मात्र गरेका छन् ।

ताङस्याउ ची आफ्नो रक्सीको ग्लास उचाल्छन् र भन्छन्- 'हाम्रो मित्रता पछिसम्म कायम रहोस् भन्ने म आफ्नो इच्छा व्यक्त गर्छु ।'

हामी पनि सँगसँगै यस्तै अभिनय गर्ने र त्यस्तै कुरा दोहराउने काम जारी राख्छौं । दोभाषे साँङ्यो पेन अत्यन्तै सतर्क भएर हाम्रो सम्वादलाई अनुवादन गरिरहेछन् । यति मात्र होइन, बीच-बीचमा खाना कस्तो लाग्यो भनेर हामीसँग सोध्न पनि भुलेका छैनन्। त्यस्तै हामीले पनि दोस्रो या तेस्रो खवाइमा खाना मीठो भएको, स्वादिलो भएको र मन परेको भनेर भन्न भुलेका छैनौं ।

अर्की एक जना युवती टेबुलमा भएको पहिलेको खानाको प्लेट टेबुलबाट हटाउने, साथै हामीले खाँदै गरेको प्लेट फोहर भएमा बदल्ने काम गरिरहेकी छिन् । परिकार ओसार्ने, रक्सी थप्ने, रुमाल बदल्ने र टेबुललाई उत्तिकै सफा राख्ने काम भइरहेको छ भने हाम्रो खाने काम पनि जारी छ । करीब तीसौं परिकार खाइसकियो। खाना खाएका होइनौं, खानाको परिकार मात्र चाखेका छौं, तर हामी अघाइसक्यौं ।

कति खाने कति खानुपर्ने ? एउटा प्लेटभरिको खानामा एक छेउ मात्र कोट्टिएको छ । सबै फिर्ता गयो । मेरो मनमा प्रश्न उब्जियो - यो टेबुलबाट फिर्ता गएको खाना मान्छेले नै खान्छ वा फ्याँकिन्छ ? यसको उत्तर मसँग छैन । होइन भने राज्यको किन यत्रो नोक्सानी ?

खाना आउँदै छ । म अब खानुभन्दा अर्को सोचमा डुबेको छु । म अनुमान गर्छु- यिनको प्रति-महीना तलब पाँच सयभन्दा बढ़ी पक्कै छैन ! तर खानामा यत्रो खर्च ! तियानजिनमा रेष्टुराँमा पैसा तिरेको हिसाबले यो खानाको पाँच हजार युआनभन्दा कमको छैन।

मलाई झस्काउँदै साँङ्यो पेनले भन्छन्- 'खाना कस्तो छ ? खानुहोस् न !' म बिस्तारै उनीहरूलाई साथ दिन्छु । केही बेरमै खाने काम समाप्त हुन्छ । हामी फेरि आएर बैठकमा बस्छौं । भोलि ग्रेटवाल हेर्न जाने कार्यक्रम निश्चय हुन्छ । त्यसको लागि हामीलाई ताङस्याउ चीले गाडी पठाइदिने बाचा गर्छन् । साँझ धेरै छिप्पेको हुँदा हामीलाई बिदा दिन तरखर गर्दै ताङस्याउ चीले आफ्नो भाषामा बोल्छन् ।

उनको भनाइ अनुसार हामीलाई भोलि बिहान नौ बजे होटेलबाट ग्रेटवाल जान गाडी पठाइदिनेछन् र व्यापारको कुरा-बारेमा साँङ्यो पेनले नै सबै बन्दोबस्त मिलाउनेछन्। बार-बार भेट्ने काम भइरहनुपर्छ र काममा सफलता भएको हुनुपर्छ। यो उनको भनाइ सुनेर हामी खुशी व्यक्त गर्छौं ।

बङ्गला बाहिरसम्म हामीलाई छोड्न आउँछन् । हामीलाई बिदा गर्दै भन्छन्- 'तपाईंहरूसँगको यो छोटो बसाइ अत्यन्तै आनन्दमय भयो ! फेरि भेटौंला ! शुभ रात्रि !'

हामीले पनि उनलाई यही किसिमले भन्न कर लाग्यो र भन्यौं । उनीसँग बिदा भएर उनकै गाडी चढेर हामी होटेल आइपुग्यौं ।

भोलिपल्ट, नौ बजे हामी ग्रेटवाल जाने तरखरमा तयारी हुँदै छौं । ठीक समयमा गाडी आइपुग्यो, साँङ्यो पेनले होटेलको लविबाट टेलिफोन गरेपछि थाहा पायौं । हतार-हतार कोठाबाट तल उत्रियौं । साँङ्यो पेनलाई भेटेर ग्रेटवालको लागि प्रस्थान गर्‍यौं ।

बेजिङ क्षेत्रको लामो समतल भूमि पार गरिसकेपछि हाम्रो गाडी पहाडी उकालोमा लाग्छ । हुन त करीब पचहत्तर किलोमिटर भनिने 'पाटालिङ' अर्थात् ग्रेटवालको पर्यटन केन्द्र-बिन्दु पुग्दा करीब दुई घण्टा लाग्यो ।

देख्नेबित्तिकै हामी दुवै अचम्ममा पर्‍यौं । गगनले भनिहाले- 'अहो ! कस्तो गजब ? साँच्चि नै विश्वको आश्चर्यमध्येको प्रमुख आश्चर्य रहेछ ।' हामी पर्खालको माथि उक्लिन्छौं । म पर्खालमा पुगेर भन्छु- 'त्यसैले त अन्तरिक्षबाट पनि यो पर्खाल देखियो भन्थे ! साँच्चै नै हो रहेछ ।'

करीब तीसदेखि साठी फीट अग्लो यो पर्खालको चौडाइ करीब पन्ध्रदेखि तीस फुटसम्मको छ । यो पर्खाल पश्चिम-उत्तर चीन गन्सु प्रान्तको सानडनदेखि शुरू भएको प्रशान्त महासागरको किनार सांघाई गुवानचाउसम्म फैलिएको करीब चार हजार किलोमिटर लामो छ । यो पर्खाल छिन वंशीय राजा सन्हुवाङ्ले शुरू गरेका हुन् । यो निर्माण हुन चार सय वर्षभन्दा बढी लागेको हो भन्ने कुरा हाम्रा मित्र साँङ्यो पेनले विस्तारपूर्वक व्याख्या गरे ।

पर्खालको पूर्व र पश्चिम आँखाले नभ्याएसम्म पर्खालको निरन्तरता डाँडैडाँडा दगुरेको देखिन्छ । पर्खालमा प्रयोग भएको ईंटलाई हेर्दा त्यो समयको चीनको प्रविधि वर्तमानको वैज्ञानिकको दिमागमा पस्न सक्दैन । कारण, ईंट भएर पनि ढुङ्गाको शक्ति र रूप प्राप्त गरेको देखिन्छ ! यो ईंटको निर्माण कुन प्रविधि- अन्तर्गत भयो, यो हाम्रो अनुमानभन्दा बाहिरको देखियो ।

छिन वंशीय सम्राटहरूले मङ्गोलिया र रूसबाट अलग्गिन निर्माण भएको यो पर्खालले विश्वबाट नै चीन अलग्गिन खोजेको भान हुन्छ । म पर्खालको एक छेउमा बसेर उत्तरतर्फ हेर्दै विचार गर्छु - त्यतिखेर सम्राटहरूले सोचेका र निर्माण गरेका अठोटहरू आज शताब्दियौं पछि नौलो जनवादी व्यवस्थाले पूरा गरेको महसूस गरिरहेको छु ।

अभूतपूर्व र कल्पनातीत यो चीनियाँ हातहरूबाट निर्मित विशाल पर्खाल देखेर चीनियाँहरूको अठोट र लगनलाई हृदयदेखि नै सराहना नगरी रहन सकिन्न । भोलिको नवचीन निर्माणको लागि पनि यस्तै लगन प्राप्त हुनेछ भन्नेमा म विश्वस्त छु - यो मेरो मनभित्र अनायास उब्जन्छ ।

हामी पर्खालको केही अगाडिसम्म जान्छौं र केही बेर बसेर फर्कन्छौं। खानाको समय भएको हुँदा केही रुचिको खाना खाई हामी अर्को पर्यटन केन्द्रमा जाने निर्णय गरेर त्यहाँबाट हिड्छौं ।

करीब मोटरको एक घण्टाको हिंडाइपछि हामी ससानलिङको छेउमा पुग्छौं । यो स्था। आइपुग्नु अगाडि नै ठूला-ठूला सिङ्गो ढुङ्गाबाट निर्मित हात्ती, घोडा, ऊँट र मान्छे बाटोको दायाँ-बायाँ पंक्तिबद्ध गराएर राखिएको छ । मानौं, हाम्रो स्वागतको लागि तिनीहरू यहाँ खड़ा छन् । करीब पन्ध्र फुट अग्लो यो ढुङ्गे मूर्तिले पुरातन चीनको झाँकी प्रस्तुत गरिरहेको छ ।

हामी ससानलिङमा पुग्छौं, जुन ज्यादै विशाल क्षेत्रमा फिंजिएको छ। ठाउँ-ठाउँ ठूला - साना गुमोज र मन्दिरहरू छन् । भनिन्छ यहाँ पुराना चीनका राजा महाराजाहरू यी मन्दिर गुमोजभित्र आराम गरिरहेका छन् । हेर्दाहेर्दै र घुम्दाघुम्दै साँझ पर्न आँटिसक्यो । हामी त्यहाँबाट आफ्नो होटेलतर्फ लाग्छौं । हेर्नुपर्ने र घुम्नुपर्ने स्थानहरू धेरै नै भएर पनि हामी बेजिङ बस्न सकिरहेका छैनौं । हाम्रो पूर्व - निश्चित कार्यक्रम - अनुसार भोलि दिउँसो एक बजे हामी बेजिङ छोडेर आफ्नो देशको लागि रमाना हुँदै छौं ।

होटेलमा हामीलाई पुर्‍याएर साँङ्यो पेन भन्छन्- 'तपाईंहरू भोलि दश बजे ठीक भएर बस्नू, म गाडी लिएर आउँछु र एयरपोर्ट पुर्‍याएर छोड्छु ।'

आज दिनभर घुमाएकोमा उनलाई धन्यवाद दिदै म भन्छु- 'धेरै धेरै धन्यवाद! फेरि भोलि तपाईंलाई दुःख दिदै छौं ! माफ गर्नुहोस् !'

'शुभ रात्रि' भन्दै उनी हामीलाई छोड्छन् । हामी पनि उनीलाई बोलीसँगसँगै हात हल्लाएर बिदा दिन्छौं ।

भोलिपल्ट उनी ठीक समयमा आइपुग्छन् । हामीले आफ्नो सामान मिलाइसकेका छौं । उनी यो पटक हाम्रो कोठामा आइपुग्छन् । हामीसँग केही समय भएको हुँदा व्यापारका बारेमा कुरा शुरू गर्छौं ।

उनी भन्छन्- 'सर ताङस्याउ ची तपाईंहरूदेखि प्रसन्न हुनुभएको छ । जतिसक्दो यसतर्फको व्यापार तपाईंहरूलाई नै दिने विचार गर्नुभएको छ।'

'यो ज्यादै राम्रो समाचार सुनाउनुभयो ! धन्यवाद !'- गगनले तुरुन्त आफ्नो राय व्यक्त गरे ।

'कसरी शुरू गर्ने ?' - मैले बुझेको अप्ठेरो अगाडि बढाएँ ।

'ए ! त्यो त तपाईंहरू व्यापारी, तपाईंहरू सोच्नोस् !'

'त्यही पनि ताङस्याउ चीको केही सल्लाह छ कि ?'

'अँ ! सर ताङस्याउ चीले भन्नुभयो- 'हङकङ अथवा सिङ्गापुरमा आफ्नो अफिस भए ठीकै छ । छैन भने सर्वप्रथम यी दुई स्थानमध्ये एक स्थानमा आफ्नो व्यापारी अफिस खोल्न भनेका छन् ।'

'के अफिस खोल्नुपर्ने ?' - गगन तुरुन्त प्रश्न गर्छन् ।

'हो ! ठीक हो ! अफिस त चाहिन्छ नै ! विना - अफिस कसरी व्यापार हुन सक्छ ? उहाँको सल्लाह ठीक छ । हामी त्यही गर्छौं ।' - मैले तुरुन्त भनें ।

उनको भनाइ अनुसार हामीले कार्यालय खोलेपछि उनीहरूले सामानको आवश्यकताबारेमा हामीलाई सोधनी गर्ने र हामीले कोटेशन दिएपछि हाम्रो पक्षमा निर्णय गरी हाम्रो नाउँमा एल०सी० खोलिदिने र त्यसपछि हामीले सामान सप्लाई गर्ने रहेछ । जुन व्यापारिक नियम हो ।

मैले मनमनै विचार गरें-यो व्यापार मिल्यो वा मिलेर गर्न सकियो भने ज्यादै राम्रो हुने थियो । तर के गर्नु ? टाढाको फल लागिरहेछ ।

हिड्ने समय भएको हुँदा हामी कोठाबाट बाहिर निस्कन्छौं । होटेल-बाहिर निस्केर एयरपोर्टको लागि रमाना हुन्छौं । बेजिङ्को विशाल एयरपोर्ट । मान्छेको भीड ! साँङ्यो पेनले बोर्डिङ कार्ड ल्याउँछन् ।

हामी साँङ्यो पेनसँग छुट्टि॑दै म भन्छु- 'तपाईंलाई हाम्रो हृदयदेखिको धन्यवाद । हाम्रो काम मिलाउन हामी तपाईंको सम्पर्कमै रहन्छौं । टेलेक्स र टेलिफोन भइरहन्छ ! विश्वास छ, हामीले व्यापार सफल बनाउँनेछौं !'

उनले पनि यही कुरा दोहर्‍याउँछन् । हामी छुट्टिन्छौं, धेरै बेरसम्म ,अर्थात् देखिएसम्म उनी हात हल्लाउँछन् ।

हामी बेजिङबाट हङ्कङ्को लागि उडिरहेका छौं - घर फर्कने क्रममा! तर मन भने चीनतर्फ नै छ !'के गर्ने ? कसरी गर्ने ? हामीले आफ्नो वर्तमानलाई भुलेका त छैनौं ?' आदि प्रश्न मनमा फुर्दै जान्छ । हामी आफ्नो घरको नजीक हुँदै जान्छौं ।

=★=

## - ८ -

मितेरी पुल पार गर्नेबित्तिकै हामी चीनको स्वशासित क्षेत्र तिब्बतको भूमिमा टेक्न पुग्छौं । म र गगन बसेको जीप जाङ्मुको लागि अगाडि बढ्छ । बिहान नौ बजे काठमाडौंबाट हिंडेको अहिले दुई बजिसक्यो साढे तीनसम्म इमिग्रेशन पार गर्नुपर्छ, कारण त्यति वेला बेजिङ-समय साँझको छः बजेको हुन्छ । त्यसैले कार्यालय बन्द हुन्छ, हामी अलमल गर्नतर्फ लाग्दैनौं । हाम्रो जीपमा लाक्पा शेर्पा पनि छन् । उनी जाङ्मुकै बासिन्दा हुन्,उनीले नै हामीलाई ल्हासा जाने बन्दोबस्त मिलाइदिनेछन् ।

लाक्पा नेपालतर्फका शेर्पा हुन् । जाङ्मुको रमिते डाँडामा उनको बसोबास भएको हुँदा चीन सरकारले उनलाई तिब्बतको नागरिक भएको प्रमाण-पत्र दिएको हुँदा उनलाई सीमा वारपार गर्न कुनै मुश्किल रहेनछ । नेपाली भाषा राम्रैसँग बोल्न सक्ने लाक्पा शेर्पासँग जाङ्मु शहरका बारेमा अनेकानेक प्रश्नहरू गगन सोध्दै जान्छन् र उनी सविस्तार बताउँदै जान्छन् ।

मनमनै म अत्यन्तै खुशी हुन्छु । धेरै वर्षदेखि मलाई यहाँ आउने इच्छा थियो । त्यस बखत म आउन चाहेर पनि आउन सक्दिनथिएँ । आजभोलि पहिलेको भन्दा केही हल्का गरेको छ तापनि त्यत्ति सजिलो छैन । तिब्बत चीनको बन्द क्षेत्र हो । चीनको भिसा प्राप्त-व्यक्ति यो तिब्बत क्षेत्रमा प्रवेश गर्न सक्दैन । यहाँ प्रवेश गर्न पुनः विशेष इजाजत लिनुपर्छ । हामीलाई यो इजाजत प्राप्त गर्न चार महीना लाग्यो । बडो मुश्किलले हामीलाई इजाजत प्राप्त भयो । यो क्षेत्रलाई बन्द राख्नुको अर्थ मैले पनि राम्रो बुझेको छैन ।

मेरा पूर्खाहरूको आवत - जावत गर्ने बाटो मेरो लागि बन्द थियो । मैले सुनेको र पढेर तिब्बतको बारेमा जानकारी भएका कुराहरूलाई प्रत्यक्ष देख्न पाउने भएकोमा अहिले मलाई न्यानो महसूस भइरहेको छ । शायद गगनलाई पनि त्यही अनुभव होला जो मलाई भइरहेको छ ।

हामी मोटरको बाटो हिडेको धेरै बेर भइसक्यो । जाङ्मु शहर त्यत्तिकै टाढा देखिन्छ । हेर्दाहेर्दै हामीले मितेरी पुल देख्छौं, हामी त मितेरी पुलको ठीक माथि सयौं मिटर

ऊँचाइमा रहेछौं । तलका घरहरू र लिपिङ क्षेत्रमा गुडिरहेका मोटरहरू देख्दा कहाली नै लाग्छ । हामी अहिले मितेरी पुलको ठीक माथिबाट उत्तरतर्फ लागिरहेछौं ।

साँगुरो ढुङ्ग्यान बाटो, आउने जाने दुईवटा मोटर सबै ठाउँमा सजिलै पास हुँदैन । ढुंग्यान बाटो भए पनि वन क्षेत्र हरियाली नै छ । चीनको सवारी नियम अनुसार दायाँ किनारबाट मोटर पास गर्नुपर्नेमा, हाम्रो ड्राइभरले नबुझेको हुँदा झण्डै आउँदै गरेको एउटा चीनियाँ ट्रकसँग हाम्रो गाडी जुध्न पुगेको । तर दुवैतर्फको गाडीको गति मन्द भएको कारणले दुवैतर्फको गाडी बच्यो ।

हाम्रो गाडी अगाडि बढ्दै छ । एउटा मोड पार गर्नेबित्तिकै सैनिकका बर्दी लगाएका आठ नौ जवानको जमातले हाम्रो मोटर रोक्छन् । गाडी रोकिनेबित्तिकै दुई तीन जना गाडीको दायाँ - बायाँ ढोकामा झुन्डिन्छन् । यो देखेर गाडीमा भएका हामीहरू सबै त्रस्त भयौं । गाडी रोकेर केही नबोली हेरिरह्यौं, यसै समूहले बेहोश अवस्थाको एउटा युवक सैनिकलाई हाम्रो जीपको पछाडिको सीटमा हाल्छन् । जीपको पछाडि सीटमा बसेको लाक्पा शेर्पा टुटेफुटेको चीनियाँ भाषामा बेहोश मान्छेका बारेमा सोधखोज गर्दछन् ।

बिहान चिया पिएर रूख काट्न आएका यी समूहमध्येको एक जवान कमजोडीले गर्दा बेहोश भएका रहेछन् । खाना खान एक बजे ब्यारेक पुग्नुपर्ने हो, तर सवारी नपाएको हुँदा ढीलो भएको रहेछ । करीब अठारदेखि बीस वर्षभित्रका यी चीनियाँ युवकहरू सैनिकमा भर्ती भएर दुई वर्ष कमसे कम सीमा रक्षामा खटिनुपर्ने रहेछ । यो समय सैनिक जीवनको लागि मुख्य परीक्षण अवधि जस्तो हुने भएको हुँदा ज्यादै कष्टदायक हुने कुरा लाक्पाले बताउँछन्।

बाटोमा साना ढुंगा टिपिरहेका एक जना सैनिकलाई हामी देख्छौं । यसबारेमा लाक्पा बताउँछन् - 'यो बाटो सफा राख्ने काम यहींका सैनिक जवानले गर्ने गरेका छन् । त्यसैले यिनीहरू बाटाको रूख काट्ने,बाटो सम्याउने काम गर्छन् ।'

मैले सम्झिएँ एक देशबाट अर्को देश जोड्ने सीमाका बाटाहरू पूर्ण युद्ध-दृष्टिकोणले निर्माण गरिएको हुन्छ । त्यसैले यो बाटो पनि पूर्ण सैनिकीकरण छ । एउटा ढुंगा तेर्साइदिएमा वा सानो ब्लास्टिंग गरिदिएमा बाटो पूर्णरूपले बन्द हुन्छ । होइन भने चीन - नेपाल जोड्ने यो बाटो यस्तै कच्ची र डोरेटो अवस्थामा किन रहिरहेको छ ?

केही बेरपछि सैनिक क्याम्प आउँछ । लाक्पाले हस्पिटलमाथि जाङ्मु शहरमा भएको कुरा सैनिक समूहहरूलाई बताउँछन् । तर उनीहरूले कमाण्डरलाई जाहेर नगरी हस्पिटल लान नमिल्ने भएको हुँदा त्यहीं गाडीबाट सबै उत्रिए ।

लाक्पा भन्छन्- 'यो सैनिक क्याम्पबाट बर्सेनि दुई तीन जना मानिस हराउँछन् र त्यस्ता हराएका मानिसहरू जंगलमा वा खोलामा मृतक अवस्थामा फेला पर्छन् । यस-बारेमा हामीले सोधखोज गर्ने कुरा पनि भएन ।'

गगन तुरुन्तै लाक्पा शेर्पासँग प्रश्न गर्छन्- 'के भनेको तिमीले ? यहाँ मान्छे हराउँछन् ?'

'हो ! काम गर्दागर्दै नसकेर कैय्यौं आफ्नै घर गाउँ- तर्फ भाग्छन् भने, कैय्यौंले आत्महत्या गर्छन् ।'- लाक्पाले आफ्नो अनुभव बताउँछन् ।

लाक्पा शेर्पाको भनाइ अनुसार त्यहाँ खास कुनै नियम छैन । नियम भनेको कमाण्डरको मन-भित्रको वेग हो । ऊ शान्त स्वभावको छ भने जवानहरूले धेरै दुःख पाउँदैनन्, यदि ऊ उग्र र अन्य प्रकृतिको छ भने अत्यन्तै दुःख पाउँछन् ।

यस्तै कुरा गर्दागर्दै रमिते बजार आइपुग्छ । त्यहाँ लाक्पाको घरमा एकै छिन अलमल गरेर ह्मी जाङ्मु बजार पस्न अगाडि बढ्छौं । बाटोको एउटा मोड पार गरेपछि हामी जाङ्मु शहरको प्रवेश द्वारमा पुग्छौं ।

त्यहाँ पुग्नेबित्तिकै हेल्थ डिक्लेरेशन फर्म भरेर बुझाउनुपर्‍यो । हामीलाई एउटा कागज दिइयो, जसमा लेखिएको छ - फलफूल मासुका परिकार र अन्य खाद्यान्न वस्तुहरू चीन क्षेत्रभित्र प्रवेश निषेध गरिएको छ । हामीले हामीसँग भएको फलफूल त्यहीं छोड्यौं ।

त्यसपछि मोटरलाई कीटाणुमुक्त गराउन उपचार गरिने रहेछ । त्यहाँ रु० सत्तरी तिरेर रसीद लियौं । एक जना मानिसले स्प्रेट्यांक पछाडि पिठ्यूँमा-बोकी गाडीतर्फ गएर पन्द्र बीस मिनेट लगाई गाडीलाई कीयणु नाशक औषधि स्प्रे गरेर उपचार गरे ।

हामी अर्को भवनतिर बढ्यौं, त्यहाँ इमिग्रेन्शन पुलिस छन् । एउटा काउण्टरमा जाङ्मु शहर पस्न गाडीको लागि रु० चालीस तिर्ने काम भयो । तर इमिग्रेशन पुलिसले हामीलाई सीमा प्रवेश गराउन आलटाल गर्न लागे । लाक्पाले गएर सोधखोज गर्न नमिल्ने रहेछ । उनले हामीलाई पहिले नै भनेका थिए कि यो सीमा क्षेत्रमा कुनै पुलिसहरूसँग उनले बोल्नु हुँदैन भनेर । यिनीहरूको अगाडि केही बोल्यो वा भन्यो भने कुनै पनि समयमा आउन जानमा रोक लगाइदिन्छन् । त्यसैले नजानेको नबुझेको जस्तो केही नबोली बस्यो भने मात्र यहाँ सहुलियत पाइन्छ ।

हामीलाई जान दिएका छैनन् । हाम्रो कुरा उनले नबुझ्ने र उनको कुरा हामीले नबुझ्ने । हामीलाई घण्टौं अल्मल्याइसके । बल्ल - बल्ल एक जना अंग्रेजी जान्ने पुलिस आएर हामीलाई भने- 'तिमीहरू ल्हासा जाने हो भने प्लेनबाट मात्र जान सक्छौ, यहाँबाट जान सक्दैनौ ।'

अब यहाँ हाम्रो कुरा सुन्ने कोही भएनन् । हामीसँग चीन प्रवेश गर्ने र ल्हासा जाने भिसा भएर पनि हामीलाई रोक लगाइयो । हामीले भन्ने कुरा भन्यौं, उनीहरूले सुनेको नसुनेकै गरी बसे । यस्तै झमेला हुँदाहुँदै दिउँसोको तीन बजेर चालीस मिनेट गएपछि कार्यालय बन्द गरेर हिंडे । हामी पनि रमितेमा फर्कियौं र लाक्पाको घरमा आएर बस्यौं ।

प्लेनबाट ल्हासा जाने एउटै बाटो हङकङ चिन्दू - ल्हासा हो । पैसाको खर्चको साथसाथै समय पनि धेरै लाग्छ । काठमाडौं - ल्हासा यति नजीक भएर पनि आजसम्म हिमाल पार उडान भएको छैन । के गर्ने ? कसो गरी ल्हासा पुग्ने ? यही चिन्ताले हामीलाई सताइरहेको छ । एक मन काठमाडौं फर्कौं जस्तो लाग्यो । लाक्पाले सल्लाह दिए- 'आज

तपाईंहरू यहीं बस्नुहोस् । भोलि अर्कै मान्छेहरूको पालो हुन्छ । म कुरा मिलाउँछु । भोलि बिहान जाङ्मु पसौंला, हुँदैन ?'

म उनको भनाइलाई केही प्रतिक्रिया जनाउँदिनँ । म त केवल यी इमिग्रेशन पुलिसको व्यवहारलाई सम्झेर चिन्तामा डुबिरहेछु । गगन पनि शायद यही चिन्तामा परेको हुन सक्छ ।

'हुन्छ !'- हामीलाई भन्न कर लाग्यो । हामी एउटै स्वरमा सहमति जनाउँछौं । हामी यही रमिते डाँडोमा रात बिताउने निर्णय गर्छौं ।

भोलिपल्ट बिहान सबेरै लाक्पाले भने- 'हिजो साँझ तपाईंहरूले दिनुभएको तीन सय रुपियाँका मालहरू किनेर सौगात चढाइसकेको छु । अहिले त्यही मान्छेको पालो छ, चाँडै गरूँ !'

हतार-हतार हामी तयार हुन्छौं र जाङ्मु प्रवेशद्वारमा पुग्छौं । फेरि हिजोको जस्तै हेल्थडिक्लेरेशन भर्नेदेखि गाडी उपचारको लागि नगद बुझाउनु पर्ने रहेछ । हामीले निर्णय गर्‍यौं अब गाडी काठमाडौं फर्काउने । त्यसैले गगन र म आफ्नो सामान आफैले बोकेर जाङ्मु शहर प्रवेश गर्‍यौं ।

सबै दोकानहरूमा प्रायः नेपाली बोलिने र नेपाली रुपियाँ चल्ने रहेछ । बजार घुम्दा विदेश जस्तो नलागे पनि चीनियाँ पुलिसको र सैनिक जमातको आवत-जावतले यो चीनियाँ क्षेत्र हो भन्ने हामीलाई सम्झना दिलाइरहेको छ । निजी क्षेत्र र सरकारी क्षेत्र दुवै किसिमका दोकानहरू सञ्चालित रहेछन् । निजी क्षेत्रले सञ्चालित गरेको दुकान अत्यन्तै सानो र राज्यद्वारा संचालन गरेका दुकानहरू ठूला भएको देखियो ।

हामी पास्पोर्ट भएका यात्रु हुनाले सानो होटेल वा निजी घरहरूमा हामी बस्न नपाउने हुँदा हामी 'जाङ्मु फान्टे' अर्थात् ठूलो होटेलमा गएर बस्यौं । त्यहीं हामीले भोलिपल्ट ल्हासा जाने जीप पनि बन्दोबस्त गर्‍यौं ।

हामीले जुन ट्याक्सी जीप भनेर बन्दोबस्त गरेको जीप सरकारी रहेछ । यो वास्तविकता हामीले ड्राइभरलाई प्रतिव्यक्ति दुई सय युआन बुझाइसकेपछि मात्र चाल पायौं । हामीले लाक्पा शेर्पा समेतको छः सय युआन बुझायौं । जीपमा अझ दुइ जना यात्रु र हामी तीन जवान समेत गरी पाँच जवान यात्रु भयौं । यो एक हजार युआनको कमाइ ड्राइभरको व्यक्तिगत थियो, जुन रकम कमाउन ड्राइभरलाई राज्यको एक वर्ष सेवा गर्नुपर्छ । यो जीप ल्हासाबाट यहाँसम्म सरकारी पाहुनाहरू पुर्‍याउन आएको रहेछ ।

बिहान सात बजे नै गाडी जाङ्मु शहरबाट उकालो लाग्छ । करीब नौ बजे हामी न्यालामु अर्थात् कुतीमा पुग्छौं । दुईवटा पहाडको च्यापोमा भोटेकोशीको किनारमा बसेको न्यालामु शहर नेपालबाट भोट जाने मुख्य द्वारको रूपमा प्रख्यात छ । मैले अनायास संझिएँ- 'ल्हासा जाँने कुतीको बाटो' यो नेपालीहरूले भन्ने गरेको थेगो हो, त्यही रहेछ । त्यसैले म पनि कुतीको बाटो हुँदै ल्हासा जाँदै छु।

हामी चढेको गाडी न्यालामु शहरको पूर्व-उत्तरतर्फ उकालो लाग्न शुरू गर्छ । घण्टौंको मोटरको उकालो चढाइपछि हामी समतल मैदान भएको भू-भागमा पुग्यौं । म गाडी रोक्नलाई

भन्छु । गाडी रोकिन्छ । बाहिर चीसो हावा तर मन्द गतिमा चलिरहेको छ, अब मैले हिमाल हेर्न उत्तर होइन दक्षिण फर्कनुपर्छ । हिमालय पर्वतका चुचुराहरू त हामी उभिएकै लगभग सम ऊँचाइमा रहेको म स्पष्ट देखिरहेछु । यति ऊँचाइमा पनि यति ठूलो मैदान देखेर र यहाँ पुग्न पाएकोमा म अत्यन्तै आनन्दको महसूस गरिरहेको छु ।

'कस्तो स्वर्गीय वातावरण'- अनायास म बोल्न पुग्छु ।

'अहो ! मैले पनि त्यही महसूस गरिरहेको छु ! कस्तो स्वर्गीय आनन्द यहाँ !'- गगन रोमाञ्चित हुँदै भन्छन् ।

मैदानमा कुनै रूख बिरुवाको हरियाली छैन, न खोलाको छङ्ग-छङ्ग गर्ने ध्वनि नै गुञ्जेको छ । केवल सेतो टलक्क टल्कने हिमाल र उजाड शीत मरुभूमि भएर पनि हाम्रो मनलाई आकर्षित गर्न सफल भएको छ ।

हामीलाई मात्र रमाइलो लागेको हो कि यहाँ हिडिरहने लाक्पा शेर्पा र ड्राइभरलाई पनि रमाइलो लाग्छ भन्ने मेरो प्रश्नको उत्तरमा लाक्पा शेर्पा भन्छन्- 'वास्तवमा म हिडिरहने भएर पनि यहाँ आइपुगेपछि विशेष आनन्द आउँछ र यहीं बसूँ बसूँ लाग्छ, यो किन भयो मलाई थाहा छैन !'

'शायद हिमालयको थाप्लो भएकोले र उच्च ठाउँ भएकोले यस्तो महसूस भएको हो कि ?'- यसरी गगन अनुमान जनाउँछन् ।

करीब पन्द्र बीस मिनेट बसेर हामी अगाडि बढ्छौं । यहाँबाट गाडी उत्तरतर्फ ओरालो लाग्छ । कहीं कतै बस्ती देखिंदैन ।

दिउँसोको खाना खाने वेला भएको छ, एउटा घरको सामु गाडी रोकिन्छ । हामी सबै त्यो घरभित्र पस्छौं । 'के खाना पाइन्छ ?'- भन्ने हाम्रो भनाइको उत्तरमा लाक्पा शेर्पा भन्छन्- 'तपाईंहरूलाई मिल्ने खाना पाइँदैन । तपाईंहरू आफ्नै खाना झिकेर खानुहोस् ।'

गगनले हाम्रो झोलामा भएको बिस्कुट झिकेर ल्याए । हामीले केवल तातो पानी मात्र प्रयोगमा लियौं । लाक्पा शेर्पा, ड्राइभर र अन्य दुई जवान तिब्बती मान्छेको लागि याकको मासुको व्यवस्था रहेछ । सिङ्गो याकको चौथाइ भाग अर्थात् करीब पैंतीस चालीस किलोग्राम तौल अनुमान गर्न सकिने र मुश्किलले एक जनाले बोक्न सक्ने एउटा सिङ्गै मासुको टुक्रा झुन्ड्याएर राखेको रहेछ । त्यसैबाट करीब तीन किलोग्राम जति काटेर मासुका सान्साना टुक्रा बनाएर एउटा प्लेटमा राखे । अनि एउटा छालाको झोलामा काँचो जौको पीठो र तातो पानी हालेर झोलाको मुख टम्म बाँधेर हातले रगड्न थाले । करीब पाँच सात मिनेट झोला रगडेपछि झोलाबाट तयार भएको जौको पीठोको परिकार सान्सानो डल्लो पारेर मासुसँगै राखिदिए ।

चारै जना यात्रुहरूले मासु, जौको परिकार र तातो पानी बडो स्वादले खाएको हामीले हेरिरह्यौं । उनीहरूले खाँदै जाँदा पुग-नपुग हेर्ने काम र तातो पानी थप्ने काम घरवालाकी श्रीमतीले गरिरहेकी छन् । हामीलाई तातो पानी थप्ने काम त्यही हिसाबले भइरहेछ । खाना खाँदै ठट्टा-बात पनि गरिरहेका छन् आफ्नै भाषामा । हामीले उनीहरूको

भाषा बुझेका छैनौं - तर उनीहरूले वेला-वेलामा ठूलो स्वरले हाँस्दा चालै नपाएर हामीले पनि हाँसोमा साथ दिने गरेका छौं ।

झ्याल-रहित यो घरमा धुवाँले गर्दा सबैतर्फ कालो देखिन्छ । ढोकाबाहिर तेजिलो घाम भए पनि यहाँ कोठामा घाम र हावा छिरेको छैन । भनिन्छ यहाँ घरभित्र घाम र हावा छिर्नु हुँदैन । त्यसैले यो घर नभै सानो गुफा जस्तो भएको मैले अनुभव गरिरहेछु।

खानाको कार्यक्रमपछि हाम्रो यात्रा चालू रहन्छ । उकालो, ओरालो, घुमाउरो भिरालो धुलो उडाउँदै जीप कुदिरहेको छ । भेंडा- चरन देखिन थालेका छन् । घाँस नभएको ठाउँमा पनि भेंडाहरू थुतुनोले माटो खोस्रिरहेका छन् । त्यस्तै चौंरी गाईहरू पनि भेंडाकै बगालमा यता - उता चरिरहेका छन् । घण्टौं हिडिसक्दा पनि हरिया रूख, पात र घाँस देख्न पाइएको छैन ।

अपराह्ण तीन बजे हामी तिग्री उपत्यका पस्छौं । तिग्री मैदानको बारेमा मैले धेरै कुरा सुनेको छु आफ्ना पूर्वजहरूबाट - जब काठमाडौं उपत्यकाका मान्छेहरू आफ्नो धर्म र संस्कृतिबाट च्युत हुन्छन् र स्वार्थी र अत्याचारी बन्दै जान्छन्, त्यस्ता व्यक्तिहरू काठमाडौं उपत्यकाबाट विस्थापित भएर तिग्री मैदानको शरणमा पुग्छन् । यो सुन्दा तिग्रीको बारेमा अनेकानेक अनुमान मेरो मस्तिष्कमा थियो । तर तिग्री उपत्यका प्रत्यक्ष देखेर मलाई चिन्तित तुल्यायो ।

छेउ कुना र अलि कोल्टे ठाउँमा सानासाना गाउँहरू देखिन्छन् । फुस्रो र बलौटे माटो भएकोले शायद यहाँ एक बाली जौ मात्र हुन्छ । जमीन सबै जोतिएको छैन । जमीन भन्दा मान्छेको बस्ती कम नै देखिन्छ ।

गाडी रोकिन्छ । ड्राइभरले लाक्पालाई आफ्नो भाषामा केही भन्छ । लाक्पाले भने- 'यहाँबाट एभरेष्ट राम्रोसँग देखिन्छ ।'

हामी गाडीबाट उत्रन्छौं । चीनियाँहरूले 'चोमालामा' भनिने सगरमाथालाई तिब्बतीहरूले 'झ्यामालोङ्मा' भन्दा रहेछन् । यहाँबाट एभरेष्टको उत्तरी भाग राम्रो गरी देखिने रहेछ । म एभरेष्टलाई भन्दा तिग्री उपत्यकालाई घुमी घुमी हेर्न व्यस्त छु । अनि मेरो मनमा प्रश्न उब्जन्छ -'किन नेपालीहरूले तिग्री उपत्यकालाई आफूसँग जोडेको ?'

केही क्षणको बसाइपछि हामी हाम्रो यात्रा शुरू गर्छौं । उस्तै ठाउँ -उस्तै बस्ती-मोटरमा जति हिंडे पनि उस्तै उराठल्याग्दो वातावरण । गाउँहरूमा छाना नभएका साना-ठूला घरहरू भए पनि अलि ठूलो गाउँमा भने छाना भएको बौद्ध गुम्बः देखिन्छन् ।

हामी रातको दश बजे सिगाचे पुग्छौं । हामीलाई एउटा ठूलो होटेलमा राखेर अरू सबै सानो लजमा वास बस्न जान्छन् ।

यो सिगाचे सन् १९५७ अघि जब भारतसँग तिब्बतको व्यापार थियो- प्रमुख व्यापारी केन्द्र मानिन्थ्यो । यहाँबाट यातुङ र यातुङबाट सिक्किमको गान्टोक अनि कालिङ्पोङ नजीक पर्छ । यहाँको पन्चेन लामा वर्तमान चीनियाँ सरकारको समर्थक भएकोले उनको

बेजिङ्गमा राम्रो पहुँच छ - यो कुरा मलाई लाक्पा शेर्पाले सिगाचे आइपुग्ने वेलामा बताएका थिए ।

थाकेर आइपुगेको र रात धेरै बितिसकेको हुँदा एकै निद्रामा उज्यालो भैसकेछ । तयार भएर होटेलको लविमा पुग्दा त साथीहरू आइसकेका रहेछन्, मेरो आग्रह अनुसार सिगाचे शहर गाडीबाट एक चक्कर घुमेर ल्हासाको लागि बाटो समायौँ ।

कहिले खोलाको किनार त कहिले डाँडाको थाप्लो, कहिले तलाउको किनार हुँदै हामी अगाडि बढिरहेका छौं । बस्ती खास गरेर बेंसी त्यसमा पनि खोलाको किनारमा भएको पाउँछौं । एक दुई ठाउँको बसाइ, सोध-खोजबाट थाहा हुन आयो - गाउँका अधिकांश बालिग मान्छेहरू अनपढ छन् । सरकारले स्कूलको व्यवस्था गरे पनि आठ दश गाउँको बीचमा स्कूल हुने हुँदा वर्षको सबै महीना सबै दिन आवत - जावत हुन नसक्ने भौगोलिक परिस्थितिले गर्दा र चीनियाँ लिपि र चीनियाँ भाषाको अनिवार्यताले गर्दा तिब्बतीहरूका प्रकृति-सुलभ नभएको कारणले नब्बे प्रतिशत केटा केटीहरू अनपढ अवस्थामै रहेछन् ।

तिब्बतका बारेमा विश्व-मानचित्रमा जेसुकै संकेत गरिएको भए ता पनि राजनीतिक दृष्टिकोणले यो क्षेत्र सधैं अलग रह्यो । यहाँको भौगोलिक, प्राकृतिक र सांस्कृतिक अवस्थालाई विचार गर्दा अझै पनि आफ्नै किसिमको भएको महसूस गरिएको छ । यहाँको रीतिस्थिति र सामाजिक मान्यतामा कुनै परिवर्तन हुन सकेको छैन । आज पनि सन्तानमा प्रथम छोरा लामा बनाउने मतलब ईश्वरलाई चढाउने र गुम्बामा आफ्नो कमाइको आधा अंश दिने प्रचलन कायमै छ । यो राजनीतिक राज्य नभएर धर्मराज्य थियो । अहिले पनि त्यो संस्कार जीवित देखिन्छ । सामाजिक मान्यताको विरुद्ध सरकार एकै पटक जान सक्दैन भन्ने प्रमाण यहाँ स्पष्ट देखिएको छ ।

यस्तै हिड्दै, गफ गर्दै, बस्दै, सोधखोज गर्दै र नौलो ठाउँ हेर्दै पूरा दिन गाडीमा कुदेर ल्हासा शहरको नजीक आइपुग्छौं । ल्हासाको नयाँ क्षेत्रमा प्रवेश गर्नेबित्तिकै पोताला दरवार देखिन्छ । विश्वका शहरहरूमा सबैभन्दा उच्च स्थानमा रहेको हुँदा यसलाई संसारको छाना भनिने गरेको हो । यो ठाउँमा पुग्नेबित्तिकै मेरो मन रोमाञ्चित हुन पुग्छ - म आफैंभित्र रमाउन पुग्छु । हामी पश्चिमबाट नै गैरहेको र सूर्यको प्रकाश पनि पश्चिमबाट दरवारकै समानान्तर हुँदै ठोकिएको हुँदा दरबारमा जडिएका सुन र अन्य धातुका कलाकृतिहरू टल्किएर पोताला दरबार चमचम चम्किरहेको छ । अग्लो डाँडोमा निर्मित पोताला दरवार स्वर्गीय र अनुपम देखिएको छ । गाडीबाट हामी अगाडि बढ्दै जान्छौं र दरवारको नजीकै पुग्छौं । साँझ पर्न लागिसकेको छ । तर पोतालाको भव्यता र चम्कावटले ल्हासा शहरलाई सुन्दरता प्रदान गरिराखेको देखिन्छ । रातो र सेतो रंगले पोतिएको दरवारको छाना र गजूरहरूमा सुन जडिएको देखिन्छ ।

हामी ल्हासाको नयाँ बस्ती चक्कर मार्दै ल्हासा फण्टे होटेलमा पुग्छौं । म र गगन त्यहीं बस्ने निर्णय गर्छौं र लाक्पा शेर्पा इष्टमित्रकहाँ बस्न जान्छन् । वास्तवमा अँधेरो नभए पनि बेजिङ - समयको आधारमा चल्नुपर्ने भएको हुँदा साँझ पर्नेबित्तिकै साँझको खाना

खाइसक्नुपर्ने रहेछ । सोही अनुसार हामीले पनि वेलैमा खाना खाएर होटेलको कोठातिर लाग्यौं ।

सबेरै होटेल-बाहिर एउटा सानो बस यात्रुहरूलाई बजार लान अडिरहेको रहेछ । ट्याक्सीहरू नपाइने ठाउँ, कहीं जानुपऱ्यो भने होटेलबाट गाडी रिजर्भ गरी जानुपर्ने रहेछ । हामी दुवै जना गाडीमा बसेर चुकला खाँ पुग्यौं ।

यो पुरानो ल्हासा बजारस्थित झोखाङ गुम्बा अत्यन्तै सुन्दर र विशाल तिब्बतीहरूको तीर्थस्थल हो । हामी पनि गुम्बा-नजीक पुग्यौं । हजारौं तिब्बतीहरू टाढाबाट तीर्थ गर्न आएका विभिन्न जातिका मान्छेहरूको भीडमा हामी पनि छोपिन्छौं ।

सयौं मान्छेहरू गुम्बाको अगाडि प्रार्थना गरेर बसेका छन् । कोही उठबस गरेर त कोही घुमेर र लम्पसार परेर बुद्धको आराधना गरिरहेका छन् । सबैले आ-आफ्नो किसिमबाट भगवानमा भक्तिभाव चढाइरहेका छन् । म यही भीडमा लाक्पा शेर्पालाई पनि देख्छु । केही बेरपछि लाक्पा आफ्नो प्रार्थना कार्य सकेर हामी नजीकै आइपुग्छन् र भन्छन्- 'यो प्रार्थना कार्यक्रम सकेर तपाईंहरूलाई लिन आउँ भनेको थिएँ, तपाईंहरू आफै आइपुग्नुभएछ, बेसै भयो !'

गुम्बाको भित्री भागमा लगेर लाक्पा शेर्पाले गुम्बाको बारेमा बताए—'यो गुम्बा तिब्बतका प्राचीन राजा स्रङ्चङ गम्पोले नेपाली राजकुमारी भृकुटी विवाह गरेपछि निर्माण भएको हो । नेपालको उत्तरतर्फ हिमालपार गराएर बुद्ध धर्मलाई ल्याउने श्रेय पनि राजकुमारी भृकुटीलाई नै छ । साथै यो गुम्बा पनि नेपाली कलाकारको हातबाट निर्माण गरिएको हो ।

गुम्बामा भएका नेपाली कलाकृतिलाई औंल्याउँदै भन्छन्- 'यो प्राचीन भएर पनि त्यति नै सुन्दर छ । नेपाल र तिब्वतको प्रतीक यो गुम्बा यो क्षेत्रमा निर्मित प्रथम धार्मिक स्थल पनि हो ।'

सयौं लामाहरू एकैपटक एकै ठाउँमा बसेर पाठगरिरहेका छन् । दर्शनार्थीहरूको लाम अटूट अगाडि बढिरहेछ । यस गुम्बामा दिनहुँ हजारौं-हजार तिब्बतीहरू आइपुग्छन् । यहाँको बलियो विश्वास तिब्बत क्षेत्रमा जन्मेका प्रत्येक व्यक्तिले यो गुम्बाको दर्शन गर्नु नै पर्छ तब मात्र उसको जन्म सार्थक हुन्छ । त्यसैले यहाँ कुनै पनि समयमा तीर्थयात्रीहरू आउन रोकिएको छैन ।

हामी गुम्बाको बाहिर निस्किएर गुम्बालाई दाहिने पार्दै भाखोर बजार घुम्न थाल्छौं । तिब्बती यात्रुहरूको भीड पनि यतैतर्फ ओइरिएको छ । हामीलाई थाहा भयो यी यात्रुहरू गुम्बालाई दाहिने पारेर सयौंपल्ट घुम्ने रहेछन् । त्यसैले यो बजार भीड भएको रहेछ । भाखोर बजारका पसलहरूलाई देखाउँदै लाक्पा शेर्पा भन्छन्- 'यी सबै पसल नेपालीहरूका हुन् !'

साँच्चै नै गगनले दोकानदारसँग नेपाली भाषामा कुराकानी गरे । सामानहरू पनि प्रायः नेपाली नै अर्थात् नेपालकै बजारबाट गएको म स्पष्ट चिन्दछु । यहाँ चीनियाँहरूको

पसल हामीले देखेनौं । यो बजारमा कसरी नेपालीहरूको प्रभुत्व कायम भएको हो भन्ने प्रश्नको जवाफमा लाक्पा शेर्पा भन्छन् - सङ्चङ गम्पोकै समयदेखि नै नेपाली प्रभाव यहाँ परेको हुँदा यहाँको व्यापार नेपालीहरूको हातमा पर्न गएको हो । सातौं शताब्दीमा त नेपाली महाजनहरूले बत्तीस कोठी अर्थात् बत्तीसवटा दोकानहरू खोल्नुपर्ने र नेपाल सरकारले टक मारेको चाँदीको मुद्रा मात्र प्रचलनमा ल्याउने तिब्बत र नेपालको बीचमा लिखित सम्झौता भएको थियो ।

यो सुन्दा गगन तुरुन्त अचम्ममा पर्दै आश्चर्य व्यक्त गर्छन्- 'के यहाँ नेपाली मुद्रा चल्थ्यो ? के त्यही समयदेखि यी नेपालीहरूले व्यापार गर्दै आएका हुन् ?'

'हो !'- लाक्पा शेर्पा आफ्नो भनाइलाई पुष्टि गर्दै भन्छन्- 'त्यही समय देखि नेपालको वकील कार्यालय रहने व्यवस्था भएको हो ।'

'कस्तो हो यो वकील कार्यालय भनेको ?'- गगन सोद्धछन् ।

'नेपाल सरकारको प्रतिनिधि । यहाँ बसोबास गर्ने सबै नेपालीहरूको संरक्षण गर्ने'- लाक्पा शेर्पा स्पष्ट पार्दै भन्छन् ।

मलाई थाहा नभएका धेरै कुराहरू लाक्पा शेर्पा भन्दै जान्छन् र हामी यस्तै गफ गर्दै एक जना नेपालीको दोकानमा पस्छौं । देख्दा तिब्बती जस्तो देखिए पनि राम्रोसँग नेपाली बोल्ने ढुन्डुप हामीलाई आदरका साथ पसलको एक छेउमा भएको मेचमा बसाउँछन् । हामीलाई पनि ढुन्डुपको दोकानमा आएर बस्न पाएकोमा खुशी लागेको छ ।

पसलको चारैतर्फ नजर लगाउँदै गगन सोध्दछन्- 'यहाँ व्यक्तिगत व्यापार गर्न पाइन्छ ?'

ढुन्डुप जवाफ दिंदै भन्छन्- 'पाइएकै छ ! पहिले हामीलाई मुश्किल पर्‍यो, पछि हामी नेपाली भएका र हाम्रो पुरानो तिब्बतसँगको सम्झौता- अन्तर्गत व्यापार गरेर बसेका हुँदा बस्न पायौं । अर्को कुरा, हामीले तिब्बतीहरूलाई आवश्यक सबै किसिमका वस्तु उपलब्ध गराउँदै आएका छौं । तिब्बतीहरू पनि चीनियाँहरूको पसलमा भन्दा हाम्रो पसलमा सामान किन्न मन पराउँछन् ।'

'यहाँको व्यापारमा तपाईंहरूको राम्रो पकड रहेछ । त्यसो भए चीनियाँहरूले व्यापारमा हस्तक्षेप गरेका छैनन् त ?'- गगन फेरि प्रश्न गर्छन् ।

'मुख्य व्यापार त चीनियाँहरूकै हातमा छ । जस्तो ऊन, भेंडा, गाईदेखि प्राकृतिक सम्पदा सबै उनीहरूकै कब्जामा छ । हामी त केवल दैनिक उपभोग हुने सामान जुन विगतका सयौं वर्षदेखि तिब्बतीहरूलाई बेची-आएका छौं, त्यो बेच्छौं'- ढुन्डुप बिस्तारै बताउँछन् ।

तिब्बत क्षेत्रमा नेपाली व्यापारको प्रवेश र स्थायी सम्बन्धमा प्रश्न गर्दा ढुन्डुप भन्छन्- 'तिब्बत-चीनको क्षेत्र अत्यन्तै विकट छ । ल्हासाको लागि नजीकको शहर काठमाडौं हो भने नजीकको रेलवे स्टेशन रक्सौल हो अनि समुद्री बन्दरगाह पनि भारतको कलकत्ता नै नजीक पर्छ । साथै नेपालतर्फ बाहै महीना आवत-जावत गर्न सकिन्छ ।'

'किन र ? चीनका शहरहरू यहाँबाट नजीक छैनन् ?'

'छैनन् ! अत्यन्तै टाढा छन् ! काठमाडौं यहाँबाट आठ सय पचास किलोमिटर छ भने सिंचुवान प्रान्तको चिन्दू शहर चौबीस सय किलोमिटर टाढा पर्छ । अनि भारतको रक्सौल रेल स्टेशनभन्दा यहाँको सबैभन्दा नजीकको भनिएको गर्मु रेलवे स्टेशन छः सय किलोमिटर टाढा पर्छ । यति मात्र हो र माउण्ट केतुको शाखा काराकोरम हिमाल र कुलुङ हिमालले घेरेर सयौं माइलको शीत मरुभूमिले चीन र तिब्बतलाई अलग्ग्याएको छ।' - ढुन्डुपले जानेको कुरा हाम्रो अगाडि राखिदिन्छन् ।

यत्तिकैमा एक हूल तिब्बती यात्रुहरू दोकानभित्र पस्छन्, दोकानको सामानको साथसाथै हामीलाई पनि सबैले नियाल्छन् । ढुन्डुप हामीसँग कुरा बन्द गर्छन् र तिब्बती ग्राहकसँग कुरा गर्न पुग्छन् । तीमध्ये एक जनाले हामीलाई हेर्दै कुरा गर्छन् । म अनुमान गर्छु-हामी विदेशीका बारेमा कुरा गरेको हुन सक्छन् ।

ढुन्डुप हामीलाई सम्बोधन गर्दै भन्छन्- 'तपाईंहरूले दलाई लामाको फोटो ल्याएको छ भने पैसा तिरेर किन्छु भन्छन्, तर यिनीहरूलाई मैले भनिसकें  तपाईंहरूले दलाई लामाको फोटो ल्याएको छैन भनेर !'

'के दलाई लामाको फोटो ?'

'हो ! यिनीहरूको घरमा दलाई लामाको फोटो मात्र राख्न पाए पनि यिनीहरूले आफूलाई धन्य सम्झन्छन्'- ढुन्डुप तुरुन्त व्याख्या गर्छन् ।

'दलाई लामा अहिले कहाँ छन् ?- मलाई सम्बोधन गर्दै गगन प्रश्न गर्छन् ।

मैले गगनको प्रश्नको उत्तर दिन नपाउँदै ढुन्डुप भन्छन्- 'ए ! तपाईंहरूलाई थाहा छैन ? उनी त भारतको हिमाचल प्रदेशको धर्मशालामा बसेका छन् । त्यहाँ पनि उनले आफ्नो परम्परालाई त्यागेका छैनन् । तिब्बत र तिब्बतीका लागि उनी समर्पित छन् । उनी धार्मिक गुरु हुन् र तिब्बतीका लागि एक मात्र नेता हुन् ।'

'तिब्बत धर्मराज्य हो ! दलाई लामा धार्मिक नेता हुन् । यो धार्मिक राज्य उनको हो, सधैं उनैको नै रहन्छ'- ढुन्डुप आफ्नो पूर्व भनाइलाई निरन्तरता दिंदै भन्छन्- 'धर्मनीति र राजनीतिको अर्थ एउटै हो । दुवैको लक्ष्य मानव कल्याण र मानवताको सुरक्षा । यो भूमण्डलमा एउटै भूस्थिति नभए जस्तै अलग - अलग वर्ग र सम्प्रदायले आ-आफ्नो रीति-स्थिति र मान्यतालाई कायम गरेका छन् जुन जीवन, मरणसँग गाँसिएको हुन्छ ।'

दोकानको कामसँग भन्दा हामीसँग कुराकानी गर्न र अझ हामीलाई तिब्बतका बारेमा जानकारी दिन ढुन्डुप व्यस्त छन् । उनी निर्धक्क र निर्भीकतापूर्वक तिब्बतका बारेमा हामीलाई बताउँदै जान्छन् ।

यसै-बीच दोकानमा अर्को हूल पस्छ । हेर्दा अग्ला, डरलाग्दा, मोटा- घाटा, कपाल पालेका र रातो र कालो धागोको झुप्पा टाउकोमा बेरेका, कम्मरमा लामो छुरी देखिने किसिमबाट भिरेका पाँच जवान लोग्नेमानिस र एक जना आइमाई भएको यो जमातले

दोकानमा भएका मालहरू औंल्याउँदैं मोल - तोल गर्न शुरू गर्छन् । ढुन्डुप दोकानमा भएका सामान देखाउन व्यस्त हुन्छन् भने हामी यिनीहरूलाई नियालिरहेका हुन्छौं ।

एक जना आइमाई जसको टाउकोमा यिउँ नै यिउँ जडिएको मालाले बेरिएको छ । अझ सबैभन्दा ठूलो यिउँ ठीक निधारमाथि तालुको बीचमा चाँदीले मोरेर फूल जस्तो टक्रक्क बस्ने गरी बाँधिएको छ । गलामा ठूला ठूला मुगाका राता र यिउँका हरियो रंग मिश्रित एक झुप्पा मालाले यी आइमाईको अनुहारमा सुन्दरता बढेको छ;यिनको पहिरन र सजावटको सुन्दरताले यिनी यो समूहको मणि देखिन्छिन् ।

हाम्रो जिज्ञासापूर्वक हेराइको उत्तरमा लाक्पा स्पष्ट गर्न चाहेर भन्छन्- 'यी आइमाईका शायद यी पाँचै जवान लोग्ने हुन् !'

'के भनेको ?'- गगन एक्कासि प्रश्न गर्छन् ।

'हो ! यहाँको रीति अनुसार जेठा दाईसँग विवाह गरेकी आइमाईले उनको इच्छानुसार भाइहरूलाई पनि लोग्ने स्वीकार्न सकिन्छ,उनको इच्छा-विरुद्ध कुनै पनि भाइले विवाह गर्न पाउँदैन । दाज्यूकी श्रीमतीलाई नै आफ्नी श्रीमती स्वीकार गर्नुपर्छ । त्यसैले तिब्बती समाज अरू विश्वको समाजभन्दा बेग्लै हिसाबले संगठित भएको छ । यो मातृप्रधान समाज हो र स्त्रीनायक भएको परिवारले संगठित समाज हो !'- लाक्पाले तुरुन्तै हामीलाई जानकारी दिन्छन् ।

'तिब्बती समाजमा महिलाको संख्या कम र पुरुषको संख्या बढी भएर यस्तो व्यवस्था गरिएको हो कि ?'- गगनले आफ्नो जिज्ञासा प्रकट गर्छन् ।

'यो पनि हुन सक्छ !'- गगनको अनुमानलाई पुष्टि दिन म एक्कासि भन्न पुग्छु- 'यहाँ हरेक दुई पुरुषमध्ये एक लामा हुनुपर्छ भन्ने धार्मिक व्यवस्था भएको पनि यसै कारणले हुन सक्छ ।'

- फेरि म आफ्नो अनुमान व्यक्त गर्छु ।

'हो ! त्यसैले त नेपाली बाबुबाट जन्मेका सन्तानमध्ये स्त्री तिब्बती नागरिक हुने र पुरुष नेपाली नागरिक हुने तिब्बत र नेपाल - बीचको पुरानो सम्झौता अनुसार म नेपालको नागरिक भएँ ! यहाँ तिब्बतमा बसेको छु ।' - ढुन्डुपले आफ्नै बारेमा बताउँछन् ।

उनको भनाइ अनुसार ढुन्डुपका बाजेका पनि बाबु नेपाली व्यापारी थिए । उनको बाजे, बाबु र उनी ल्हासामा नै जन्मेका रहेछन् । सबै रीति- रिवाज तिब्बती जस्तो भए पनि नेपाली नागरिक रहेछन् ।

तिब्बतको ल्हासा मुख्य शहर हो भने ल्हासा शहरको लागि यो बजार मुटु हो ! यो तिब्बतीहरूको लागि तीर्थस्थल हो ! त्यसैले यहाँ अनेकानेक मान्छेहरूको जमघट भइरहन्छ ।

हामी बसेको पसलको ठीक बाहिर एक जना मान्छे चिच्याएको आवाज आयो ! उ बाटोमा मागेर बसेको थियो । एउटा खुट्टा काटिएको हुँदा वैशाखीलाई सहारा बनाई उभिएर चिच्याइरहेको छ- 'एटनसन ! ठण्डे इच!'

उ जति चिच्याएर बोलेको छ, बोली-सँगसँगै अभिनय गर्नमा पनि कमी गरेको छैन। उसको त्यो अभिनय देखेर हिडिरहेका बटुवाहरूले पनि रोकिएर हेर्न थाले । हामी पनि पसलबाट निस्किएर उनलाई नै हेर्न पुग्यौं ।

हेर्दाहेर्दै उसले एक खुट्टाको भरमा मात्र उभिएर वैशाखीलाई बन्दूकको रूपमा तेर्स्याएर मुखबाट बन्दूकको आवाज निकाल्दै चिच्याउन थाल्यो । अझ मान्छेको भीड बढ्दै गयो, हामी पनि पसलबाट निस्किएर त्यही लङ्गडो मान्छेको अभिनय हेर्न थाल्यौं ।

'पहिले यो तिब्बती सिपाही थियो । सन् १९५९ को तिब्बत आक्रमणमा चीनियाँ लालसेनाको बन्दूकबाट छुटेको गोलीले लङ्गडो भयो'- ढुन्डुप भन्दाभन्दै रोकिन्छन् र पसलमा ग्राहक पसेको हुँदा आफ्नो पसलतर्फ लाग्छन् ।

'सलाम साहप !' - त्यो लङ्गडो हामीतर्फ हामीलाई अभिवादन गर्छ ।

नेपाली सैनिकले आफ्नो हाकीमलाई अभिवादन गर्ने शब्दमा हामीलाई अभिवादन गर्दा हामी जिल्लिन्छौं । अरू दर्शकलाई जस्तै हामीलाई पनि यो मान्छेले आकर्षित गर्न सर्मथ भयो ।

हामी फेरि ढुन्डुपको पसलतर्फ लम्कियौं । व्यापारिक व्यस्तताको बावजूद पनि ढुन्डुप हामीलाई सम्मान दिन पछि पर्दैनन् । उनले तुरुन्त बस्ने मेचहरूको व्यवस्था गरेर हामीलाई बस्नको लागि आग्रह गर्दै भन्छन्- 'बस्नु-होस् न ! म चिया मगाउँछु ।'

'त्यो मान्छे नेपाली भाषा पनि जान्दछ कि क्या हो ?' - त्यो अनौठो लङ्गडो मान्छेको बारेमा गगन प्रश्न गर्छन् ।

'ए !'- हाँस्दै ढुन्डुप भन्दै जान्छन्- 'अलि अलि त जानिहाल्छ नि ।'

हामीलाई 'सलाम साप' भनेर नेपाली सैनिकले सम्बोधन गरेजस्तो गऱ्यो !- गगन त्यस मान्छेको बारेमा जानकारी लिन खोज्दै भन्छन् ।

'सन् १९५९ सम्म यहाँ नेपाली सैनिकको एक समूह थियो !' - ढुन्डुप भन्छन्।

'ए ! त्यसैले रहेछ !'- गगन आफू स्पष्ट भएको व्यहोरा जाहेर गर्छन् ।

'त्यो मान्छेले चीनयाँ सैनिकलाई गाली गर्ने र खुट्टा नभए पनि फेरि आक्रमण गर्ने धम्की दिइरहन्छ ! यो सुनेर गाउँबाट आएका तिब्बतीहरूको लागि रमाइलोको केन्द्र बन्न पुगेको छ !'- ढुन्डुप लङ्गडो मान्छेको बारेमा बताउँदै भन्छन्- 'यसलाई धेरै पटक चीनियाँ सैनिकले लगेर कार्यवाही गरिसके, तर उसले यो भन्न बन्द गरेको छैन ।'

'आक्रोशित व्यक्तिहरू यस्तै हुन्छन्'- म यो प्रसंगलाई मोडिदिन ढुन्डुपलाई प्रश्न गर्छु- 'तिब्बतको वर्तमान धार्मिक अवस्था-बारेमा बताउन सक्नुहुन्छ कि ?'

'बुद्धधर्मका अनुयायी तिब्बतीहरू दलाई लामालाई अहिले पनि 'जीवित बुद्ध' को रूपमा मानी-आएका छन्' - बडो सरल ढंगले ढुन्डुप आफ्नो विचार व्यक्त गर्छन् ।

'तपाईं नि ?' - गगन उनैसँग प्रश्न गर्छन् ।

'म पनि त्यही धर्म मान्छु जुन यहाँका तिब्बतीहरूले मान्दै आएका छन्'- स्पष्टरूपमा आफ्नो बारेमा पनि उनी यसरी जानकारी दिन्छन् ।

'सातौं शताब्दीमा स्रङ्चङ गम्पोले नेपालबाट राजकुमारी भृकुटी र त्यस को एक वर्षपछि चीनका थाङ राजवंशकी राजकुमारी ओन छङ - सँग विवाह गरेपछि आदिम धर्म 'पनफो धर्म' को आडमा यहाँ बुद्धधर्म स्थापित भयो' -लाक्पा शेर्पाले धर्मको बारेमा आफ्नो अनुभव बताउँदै भन्छन् - 'यो लामा धर्मले सञ्चालित तिब्बती समाज साँच्चै नै शान्ति र सुखमय छ !'

'उहाँले ठीक भन्नुभयो'- ढुन्डुप तुरुन्तै लाक्पा शेर्पाको धर्म-सम्बन्धी विचारमा सहमति जनाउँदै भन्छन्- 'तिब्बतको सामाजिक संगठनको हरएक पहलूमा (पक्षमा) धर्मको गहिरो प्रभावले गर्दा राज्य-व्यवस्थामा नै यसले प्रभाव पारेको हो ।'

'धर्मको आडमा राज्यव्यवस्था कब्जा हुनु ठीक हो त ?'

- ढुन्डुप र लाक्पा शेर्पासँग मेरो सानू जिज्ञासा अगि सार्छु ।

'धर्म भनेको जीवन बँचाउने आवश्यक तत्त्व हो ! सुख र शान्तिको लागि आधार हो ! सुरक्षाको लागि कवच हो ! धर्मकै आधारमा यो विश्व र यहाँका सम्पूर्ण जीवात्मा सञ्चालित छन् ।'- धर्मको बारेमा ढुन्डुप भन्दै जान्छन्- 'जुन जाति र वर्गमा मान्छे जन्मन्छ, त्यही संस्कार त्यसले पाएको हुन्छ र त्यसैको घेराभित्र उसको जीवन विकास भएको हुन्छ । त्यसै परिधि-भित्र घुम्न पाएमा उ रमाउँछ र यसैभित्र विलीन भएमा उसको जीवन सार्थक हुन्छ ।'

लाक्पा शेर्पाले ढुन्डुपको कुरालाई यसकारणले समर्थन जनाउँछन् कि यहाँ धर्म र प्रशासन एक भएकोमा राजनीतिक शक्तिले खुला विरोध गरेको कुरा स्पष्ट देखेका छन् । संस्कार र सांस्कृतिक परिवर्तनका लागि लामाहरूलाई ठाडै गोली ठोकिएको र बुद्ध-विहार र गुम्बाहरू भत्काइएको प्रत्यक्ष दृश्य आफैले देखेको कुरा पनि लाक्पा शेर्पा बताउन पछि हट्दैनन् । उनले धर्म-नीति र राजनीतिको भेद बारेमा पनि आफ्नो धारणा स्पष्ट गर्ने कोशिश गरे । हामी सुन्दै गयौं । गगनले पनि यस-बारेमा कुनै कुरा भन्न र सोध्न चाहेनन् र मैले पनि ।

समय थाहा पाउन म आफ्नो घड़ीतर्फ ध्यान पुऱ्याउँछु । यो देखेर ढुन्डुप भन्छन्- 'तपाईंहरूलाई कहीं जानु छ कि ?'

'जानु र घुम्नु धेरै ठाउँ थियो ।'

'यहाँ कहाँ-कहाँ घुम्नुभयो ? चुकलाखाँ मन्दिर जानुभयो ? यही पछाडि छ । पोताला दरबारमा शाक्यमुनि (बुद्ध) को विशाल मूर्ति छ । दर्शनीय अरू स्थानहरूमा

'जासील्हुनपु विहार, शाक्य विहार र नोरपुलिङ्गा विहारहरू छन् ।' - भन्दै ढुन्डुप भन्छन् ।- 'समय छ भने आकाशको तालको नामले प्रसिद्ध नामछो नामक तालको दर्शन गर्न जानुहोस्, यो हाम्रो पवित्र स्थल हो । हिन्दू धर्मको लागि पवित्र ताल मानसरोवर ताल पनि यहीं छ ।'

'हो ! यो तिब्बत त एशियामा बग्ने सबै नदीहरूको मूल स्थलो भएको हुँदा यस्ता अनेकौं तालहरू छन् । यी दर्शनीय तालहरूमा जरूर जानुपर्छ ।' - गगन तुरुन्तै सहमति जनाउँछन् ।

'घुम्ने त इच्छा छ ! तर समयले के भन्छ !'- म आफ्नो राय व्यक्त गर्छु ।

'तपाईंहरूले तिब्बतीहरूको पाहुना भएर बस्न पाउनुभयो भने बुझ्न सक्नुहुन्छ । यो जाति पाहुनाको सम्मान गर्न र असल मानवीय व्यवहार गर्न कत्तिको कुशल छन् भन्ने कुरा तपाईंहरूले बुझ्न सक्नुहुन्छ !'- भन्दै ढुन्डुप भन्छन्- 'वर्तमान सरकारको नीति अनुसार तपाईं विदेशीहरूलाई हामी पाहुना बनाएर राख्न सक्दैनौं, यही दुःखको कुरा छ यहाँ ।'

'के भन्नुभएको तपाईंले ? हामीले बुझ्न सकेनौं !' - गगनले बीचैमा सोधे ।

'उहाँ ठीक भन्दै हुनुहुन्छ ! हामी विदेशी हौं ! हामीले पर्यटक बस्ने होटलमा बस्नुपर्छ । यदि कुनै चीनको नागरिकको घरमा पाहुना भएर बस्नुपर्‍यो भने सरकारद्वारा विशेष अनुमति लिनुपर्छ ! तिमीलाई थाहा छैन ।' - म गगनलाई सम्झाउने कोशिश गर्छु ।

'ए ! चीनमा त हो नि ! मैले तिब्बतलाई अलग्गै सम्झिरहेको !' - गगन आफूलाई भएको जानकारी दोहोर्‍याउँछन् ।

'तपाईंहरू नेपाली नागरिकलाई त यो लागू हुनु नपर्ने होइन र ?' - म आफ्नो जिज्ञासा जाहेर गर्छु ।

'हेर्नुहोस्, हामीले यहाँ बसोबास गरेर व्यापार गर्ने स्वीकृति त पाएका छौं, तर हामीले परिवारको जुन जुन सदस्यको किय्तन - साथ नाम लेखाएका छौं, तिनीहरूबाहेक हाम्रो कोठामा कोही पनि बस्न सक्दैन । नेपाल तर्फबाट कुनै नातेदार आए भने हामी पर्यटक बस्ने होटेलमै राख्छौं । के गर्नुहुन्छ, यहाँ-को कानून नै यस्तो छ ।'- ढुन्डुप दुःखित मुद्रामा हामीलाई यो कुरा सुनाउँछन् ।

'यस्तै कानून र व्यवहारको चाँजो नमिलेकोले नै मानिसहरू दुःखी छन्'- लाक्पा शेर्पा ढुन्डुपको भनाइलाई पुष्टि दिन्छन् ।

'साँच्चै भनूँ ! तपाईंहरू सुन्नुहुन्छ ?'- योभन्दा ढुन्डुपको अनुहार गम्भीर हुन पुग्छ । उनी विशेष कुरा हामीलाई सुनाउन चाहिरहेका छन् । 'भन्नुहोस् न !' म आग्रह गर्छु ।

गगन पनि आफ्नो उत्सुकता व्यक्त गर्छन् । लाक्पा शेर्पा पनि ढुन्डुपतर्फ ध्यान दिन्छन् । पसलमा ग्राहक नभएको हुँदा हाम्रो कुराकानीमा कुनै बाधा अडचन परेको छैन ।

बडो गम्भीरतापूर्वक बिस्तारै ढुन्डुप भन्दै जान्छन्- 'तपाईंहरूलाई म साँचो भन्छु - यो घर मेरै हो । मेरो बाजे तेम्बेलाले बनाएको बीसकोठे घरलाई मेरो पालामा (बुबा) ले बीस कोठा थपी चालीस कोठा पुऱ्याएका थिए । म यही घरमा जन्मेको हुँ !'

'ए ! यो तपाईंको आफ्नै घर हो ?'- गगन आश्चर्य जाहेर गर्छन् ।

'हो ! तर म अहिले बहाल तिरेर बसेको छु ।'

'कति तिर्नुहुन्छ ?'

'तिर्न त बहुत कम तिर्छु ! नगण्यरूपमा तिर्छु । तर तिर्छु !'

'कति कोठा प्रयोग गर्नुभएको छ ?'

'माथि दुई कोठा र एउटा पसल कोठा, बस !'

'बाँकी ?'

'अरूहरू बसेका छन् ! हुनत मलाई अरू दुई कोठाको आवश्यकता छ, तर पाउँदिनँ, के गर्नु ? जे भए पनि सहन गर्नुपरेको छ ।'

'यदि फिल गर्नु हुँदैन भने एउटा कुरा सोधूँ ?'- गगन बिस्तारै ढुन्डुपलाई प्रश्न गर्छन् ।

'भन्नुहोस् न !'

'तपाईं नेपाली भएर किन नेपाल नजानुभएको ?' यो प्रश्नले उनलाई अझै गम्भीर बनायो । उनी चुपचाप हामीलाई नियाल्दै रहे । एकक्षण हामी बसेको पसलकोठाको वातावरणमा शून्यता छायो ।

ढुन्डुप बिस्तारै भन्दै जान्छन्- 'नेपाली नागरिकता मैले रहरले होइन वाध्यताले लिनुपरेको हो ! मेरो नेपालमा को छ र नेपाल जानु । मेरा बाबु बाजे यहीं जन्मिए र यहीं मरे ! म पनि यहीं जन्मिएँ ! दिदी बहिनीहरूलाई यहीं विवाह गरेर दिइएको छ ! फेरि धर्म, संस्कृति र समाजलाई छोड्न अत्यन्तै गाह्रो हुँदो रहेछ । जुन कुरा तपाईंहरू पनि बुझ्न सक्नुहुन्छ ।'

बोल्दाबोल्दै उनी रोकिन्छन् । उनी पूर्ण तिब्बती नागरिक हुन् । बाजेको बा नेपाली थिए भन्ने नाताले मात्र नेपाली नागरिक हुँ भनेर ल्हासामा बसोबास गरिरहेका रहेछन् - जुन कुरा उनले भनेपछि हामीलाई थाहा हुन आयो, तिब्बतको राजनीतिक परिस्थिति ठीक अवस्थामा आएपछि उनले नेपाली नागरिकता त्याग गर्ने कुरा पनि स्पष्ट रूपमा हामीलाई बताए ।

शुरूमा हामीलाई यिनी आफ्नै नागरिक हुन् भन्ने भान परेको थियो, हामी आफ्नै सम्झेर कुरा गरिरहेका थियौं । यिनी त नाम मात्रका नेपाली रहेछन्, हुन पनि व्यापारी बनेर बस्नको लागि उनीसँग यो बाहेक अर्को उपाय पनि त थिएन ।

यत्तिकैमा एक जना सज्जन पस्छन्, देखिदा तिब्बती नै देखिने ती सज्जनले ढुन्डुपसँग तिब्बती भाषामै कुरा गर्छन् । शायद हाम्रो परिचय लिंदै छन् । हामी नेपाली भनेर थाहा पाएपछि नेपाली भाषामा नै हामीसँग कुराकानी शुरू गर्छन्।यहीं पसलको अगाडि अर्थात् बाटोको पारि पसल भएका यी सज्जनको नाम 'खिलेला' रहेछ । जुन कुरा हामीले ढुन्डुपबाट थाहा पायौं ।

तिब्बतका बारेमा हाम्रो कुरा भइरहेको जानकारी पाएपछि खिलेला हामीसँग सोद्धछन्- 'तापाईहरूलाई के जानकारी चाहियो ?'

'खास त्यस्तो होइन !'- मैले कुरालाई अगाडि नबढाउन खिलेलालाई भनिदिएँ ।

'हो ! खिलेला तिब्बतको बारेमा जानकार हुनुहुन्छ !' - ढुन्डुपले कुरा जोडिदिए । हामी केही बोलेनौं । हामी चुपचाप सुन्ने मनसायले नै खिलेलाको अनुहारलाई नियाल्न थाल्यौं । शायद मौनता हाम्रो सम्मति थियो । उनी तिब्बतको पुरानो इतिहास- बारेमा टिप्पणी गर्न थाले । उनको भनाइ अनुसार तिब्बत पूर्ण स्वतन्त्र मुलुक हो । इतिहास सातौं शताब्दीदेखि मात्र प्रमाणित हुन सकेको कुरा पनि उनी बताउँछन् ।

उनको भनाइमा हाम्रो चाख बढ्दै जान्छ, उनी भन्दै जान्छन् ।- 'पुरानो तिब्बतको राजधानी लोगा हो, सातौं शताब्दीदेखि मात्र ल्हासा हुन आयो । त्यस बखतदेखि १९५१ सन् सम्म तिब्बत पूर्ण स्वतन्त्र थियो ।'

'कसरी यो स्वतन्त्रता हरियो त ?' - गगन खिलेलालाई प्रश्न गर्छन् । 'कसरी भनूँ! सन् १९४९ मा मध्य चीनमा नयाँ जनवादी नारा बोकेको माओत्से तुंङ्ले चीनमा कब्जा जमाइसकेपछि तिब्बतमा पनि आक्रमणको धम्की आउन थाल्यो । सन् १९५१ मा ङ्वोङवाङ जिग्मेसँग चीनको केन्द्रीय जन-सरकारले सत्र-सूत्रीय सम्झौता गरेपछि चीनको स्वशासित क्षेत्र तिब्बत भनिन थाल्यो ।'- भन्दै खिलेला भन्छन्- 'यो सम्झौता जनताको प्रतिनिधि वा तिब्बतका प्रमुख शासक दलाई लामाले गरेका थिएनन् ।

'कसरी भयो त ?'- गगन बीचैमा सोध्छन् ।

'भयो ! बलियाले निर्धालाई मिच्छ भन्ने तपाईंहरूलाई थाहा छैन ?'- स्पष्ट रूपमा खिलेला भन्छन्- 'त्यो सम्झौतामा दलाई लामालाई पदच्युत नगरिने उल्लेख पनि गरिएको थियो । '

उनी भन्दै जान्छन्- 'सन् १९५६ मा तिब्बतलाई स्वायत्तप्रदेश घोषित गरी चीनको केन्द्रीय सरकारले ङ्वोङ्वाङ जिग्मेलाई महा-सचिव बनाई दलाई लामालाई प्रमुख बनाए पनि सन् १९५९ मा सत्र-सूत्रीय सम्झौता उल्लंघन गरेको आरोपमा चीनियाँ जन-मुक्ति-सेनाले सशस्त्र क्रान्ति छेड्यो ।'

'पछि के भयो ?'

'पछि के हुने ! दलाई लामा भारत निर्वासित भए ! हजारौं हजार मान्छेको ज्यान गुम्यो ।'

'अहिले त राम्रो भयो होला नि ?'

'अहिले पनि वेला-वेलामा चीनियाँ सैनिकहरूले तिब्बतका गाउँ शहरहरूमा धावा बोल्न छोडेका छैनन् ।'

'के तिब्बत मुक्तिको लागि आवाज उठाउने तत्त्व यहाँ बाँकी छ?'

'जबसम्म तिब्बती सत्ताको सबै तहमा तिब्बती जाति नै पुग्दैनन् तबसम्म यो तत्त्व हरएक दिन बन्द कोठाभित्र बन्द कोठाबाहिर जमिरहन्छ !' 'यो त हो!'

यो तर्कलाई पुष्टि दिन ढुन्डुप भन्छन्- 'हेर्नुहोस् ! सन् १९६६ देखि सन् १९७६ सम्म साँस्कृतिक क्रान्तिमा कति विहार र गुम्बाहरू नष्ट भए, कति लामाहरू र धार्मिक प्रवृत्तिका मान्छेले ज्यान गुमाए ? यो क्षतिपूर्ति कहाँबाट हुने ?'

मेरो जानकारीमा भएको बेहोरा मैले यसरी भनें- 'सन् १९७८ को कम्युनिष्ट पार्टीको ऐघारौं राष्ट्रिय कांग्रेसको तेस्रो पूर्ण अधिवेशनले गल्ती भएको कुरालाई स्वीकारेर जन-समक्ष प्रचार प्रसार गरिहाल्यो नि !'

'गल्ती गरेको स्वीकारिसकेपछि पनि सत्तामा रहिरहनु लाज लाग्दो कुरा होइन र ?'- ढुन्डुप बहसलाई चर्काउन खोज्छन् ।

'केको लाज यिनीहरूलाई ! सम्पूर्ण मान्छेलाई मानवीय व्यवहार कायम नराखेर जड तथा निर्जीव मेशीन सरह व्यवहार गर्ने यिनीहरू सत्ताच्युत भएपछि बिउँझनेछन् र सम्झनेछन्- 'हामी मानवताका शत्रु रहेछौं । राक्षस रहेछौं !'- अनि दोषी भावले ग्रस्त भएर मृत्युशय्यामा सुल पुग्नेछन् ।'- ढुन्डुपको अन्तःकरणबाट बोली फुत्कन्छ ।

'भौतिक उन्नतिलाई तपाईं हेर्नुहुन्न ! ल्हासामा कति नवनिर्माण भइरहेछ । बाटाघाटा भवनहरू पूर्ण नयाँ देखिन्छन् । के यो पुराना शासकद्वारा सम्भव थियो ?' म विषयलाई बदल्न खोज्दै भन्छु ।

'यो उन्नति प्राकृतिक हो !'

'यत्रो सामान सस्तोमा चीनका अरू प्रान्तबाट आउँछ । सुनेको छु तिब्बतमा सामान पठाउने कम्पनीहरूलाई केन्द्रीय सरकारले केही कर छुट दिने व्यवस्था गरेको छ !'

'तर तिब्बतीहरूले प्रयोग गर्ने प्रायः सामान अझै पनि भारत र नेपालबाट आउने गरेको छ ।' - भन्दै खिलेला भन्छन् ।

'तिब्बतीहरूले चाहने वस्तुहरू चीनको अरू प्रान्तले बनाउँदैनन् । उनीहरूसँग जुन स्टकमा छ त्यो सामान पठाइदिने गरेको हुँदा पनि नेपाल र भारतको माल यहाँ चलेको हो ।'

'नजीक भएकोले हो कि ?'

'त्यो पनि हो, पहिलेदेखि प्रयोग गर्दै आएको बानीले पनि हो ।'

हामी यस्तै यस्तै कुरा गरेर घण्टौं बिताइसक्यौं । गगनलाई चाख बढ्दो छ । कारण उनी व्यापारिक फाइदाको बारेमा जानकारी लिंदै जान्छन् । हामी फेरि पछि भेट्ने आफ्नो मनसाय व्यक्त गर्दै ढुन्डुपको पसलबाट सबै निस्कन्छौं ।

आफ्नो पसलतर्फ औल्याउँदै खिलेला हामीसँग अनुरोध गर्छन्- 'जाऊँ मेरो पसलमा चिया पिऊँ ।'

'हस् ! हामी भोलि यसतर्फ आउँदा जरूर पस्नेछौं ।' मैले उनीसँग वाचा गरें ।

हामी सबै ल्हासा होटेलमा गयौं र कोठामा तीनवटा बेड भएको हुँदा लाक्पा शेर्पालाई हाम्रै कोठामा सुत्ने अनुरोध गर्‍यौं । उनले पनि मंजूर गरे ।

करीब एक बजे राति कोठाको ढोका ढकढकाएको आवाज आयो । म बिउँझिएँ र ढोका खोलिदिएँ । हामी सबै उठ्यौं, हामीले केही कुरा बुझेनौं । केही बेरको लाक्पा शेर्पासँगको वादविवादपछि हामीलाई थाहा भयो- लाक्पा शेर्पा हामीसँग रातमा बस्न नहुने रहेछ । उनलाई कार्यवाही हुने भयो - यो बेहोरा पनि लाक्पा शेर्पाले हामीलाई बताए । हामी हेरेको हेर्‍यै भयौं । लाक्पा शेर्पालाई ती होटेलका सुरक्षा-कर्मीले लिएर गए । बडो नमीठो अनुहारमा लाक्पा शेर्पाले हामीसँग बिदा मागे - 'ल है, बस्नुहोस् । म यिनीहरूसँग जान्छु !'

हामीलाई नरमाइलो लाग्यो । रातभर सुत्न सकिएन । बिहानपख निद्राले झकाएछ ।

यस्तै नयाँ ठाउँको नयाँ अनुभव बटुल्दै र नयाँ कुराहरू सिक्दै र जान्दै ल्हासामा सात दिन बसियो । खानाको सधैं गुनासै रह्यो । प्रायः सबै थोक बासी पाइने हुँदा खाना मीठो तथा स्वादिलो बन्न सक्दैनथ्यो । बस्, तातो पानी मात्र हाम्रो लागि स्वीकार्य भयो ।

हामीले आफ्नो काम सकेर ल्हासा होटेलबाट कोङ्गा एयरपोर्टको लागि प्रस्थान गर्‍यौं । बिहानको समय, नब्बे किलोमिटर टाढा एयरपोर्ट करीब एक घण्टा चालीस मिनेटमै पुग्यौं, बाटो अत्यन्तै राम्रो थियो र गाडी पनि, त्यसैले चाँडै नै पुगियो ।

हामी बिहान नौ बजे अगाडि नै कोङ्गा एयरपोर्टबाट सिचुआन प्रान्तको मुख्य शहर चिन्दूको लागि रमाना भयौं । यो एयरपोर्टमा बिहान मात्र हवाईजहाज उड्ने र बस्ने गर्दो रहेछ । पूर्ण सैनिक दृष्टिकोणले निर्मित यो विमानस्थलबाट चिन्दू शहर मात्र जुटेको रहेछ ।

केही वर्ष पहिले मैले तिब्बतलाई मेरो देशको सीमाबाट मात्र च्याएको थिएँ । मलाई तिब्बत घुम्ने र हेर्ने रहर थियो । सबै र पूर्ण रूपले हेर्न नसके पनि केही हेर्न पाएकोमा भित्रको मन न्यानो भएको म अनुभव गरिरहेछु । हवाईजहाजबाट मैले केवल शीत मरुभूमि बाहेक अरू केही देख्न सकेको छैन ।

=★=

## - ६ -

एकीकृत रहिरहदा अन्ध शक्ति पैदा हुन्छ । उपयोगिता बढाउन विभाजन गर्नुपर्छ- यो सिद्धान्त चार शताब्दी पुराना इन्जिनियर लिविनको हो ।

सयौं वर्ष - अघिदेखि सिचुआन प्रान्तको कृषि- योग्य भू-भाग दुजियाङ्यान नदीको बाढीको चपेटमा परी कहिले बाढी-ग्रस्त त कहिले सुखाग्रस्त अवस्थामा गुज्रिरहेको थियो । सिचुआन प्रान्तका कृषकका लागि यो नदी कहिल्यै उपयोगी बन्न सकेन । यस नदीले वर्षौंनि पुग्याउने नोक्सानले यस क्षेत्रका कृषकको जीवनस्तर उठ्न सकेको थिएन । त्यसैले आज भन्दा चार सय वर्ष अगाडि लिविन नाम गरेका इन्जिनियरले 'अन्धशक्तिको ह्रास विभाजनले मात्र हुन्छ' भन्ने सूत्रको आधारमा दुजियाङ्यान सिचाइ-योजना कार्य शुरू गरेका रहेछन् ।

यसको कार्य सम्पन्नतापछि इन्जिनियर लिविन सिचुआन प्रान्तको ठूलो भू- भागमा बसोबास गर्ने चीनियाँ कृषकका लागि 'देवदूत' साबित भएछन् र त्यस क्षेत्रमा अनाजको उत्पादन बढेर सबै मान्छेहरूको आर्थिक अवस्था सुदृढ भएछ ।

यो सबै कुरा म एक जना मित्र, जसको नाम लिविन नै हो, बाट सुनिरहेको छु । मेरो मित्र लिविन एक सरकारी स्तरका व्यापारिक कम्पनीमा काम गर्छन् । म चिन्दू पुग्नेबित्तिकै उनीसँग सम्पर्क गरें । त्यसपछि उनी मसँग नै हिडिरहेका छन् ।

यो यात्रामा गगन मसँगै छैनन् । हामी चिन्दू आइपुग्नेबित्तिकै कामको बाँडफाँडले हामी छुट्टियौं । उनी चीनको पुरानो राजधानी सिआन गए । हामीले उहान शहरमा ठीक चार दिनको दिनमा भेट्ने कार्यक्रम राखेका छौं । अहिले म लिविनसँग चिन्दूबाट साठी कीलो मिटर टाढा विश्वप्रख्यात सिचाई योजनाको यात्रामा छु ।

'संयोग नै हो - ती चार शताब्दी पुराना इन्जिनियंरसँग मेरो नाम मिल्नु ! तर म यति ठूलो मान्छे हुन सक्दिनँ !' - मित्र लिविनले दुजियाङ्यान नदीको किनारमा बसेर मलाई अंग्रेजीमा बताए ।

'हुन सक्छ ! तपाईं पनि यत्तिकै ख्याति-प्राप्त हुने काम गर्न सक्नुहुन्छ' - मैले उनको मनोविचार बुझ्न अंग्रेजी भाषामा नै भनें ।

'असम्भव !' - उनी हाँस्दै जवाफ दिन्छन् ।

'हिम्मत आँट जसमा छ त्यसका लागि असम्भवहरू सबै सम्भवमा परिणत हुन्छन् ।' म उनको हौसला बढोस् भन्ने हिसाबले भन्छु ।

'हो, हिटलर र माओ जनसमक्ष यही भनिरहन्थे'- उनले मेरो भनाइको जवाफ दिए ।

'होइन ! मैले त्यसरी बेकुफ बनाउन खोजेको होइन ! म त तपाईंको मित्र हुँ'- मैले ठट्टाको बोली मात्र बोलें ।

हामी ड्रागन हाउसमा पुग्यौं । सिचाई योजनाको बाँध हेर्ने प्रमुख स्थान, जहाँ विश्वका सबै राष्ट्रका प्रमुखहरूले योजना निरीक्षण गरेको फोटो प्रदर्शनी गरिएको छ । कलात्मक भवनको छानाको माथिल्लो भागमा दुइटा ड्रागन बनाएर राखिएको छ । यो भव्य भवनको बनावट र अवस्थालाई विचार गर्दा त्यही समयमा लिविनले नै बनाएको अनुमान गर्न सकिन्छ ।

चीनियाँ संस्कृति - अनुसार 'ड्रागन' पृथ्वी र आकाशको समन्वय कायम गर्ने देवता हो । जो मानवसमाजको कल्याणको लागि सधैँ कार्यरत रहन्छ । अझ बाढी र पानीको नियन्त्रण गर्ने रक्षकको रूपमा मानिने हुँदा यो सिचाई योजनाको मूल थलो भनूँ वा नदीको बीच-बीचमा बनेको यो ड्रागन हाउसले नदीलाई नहरको रूप दिन समर्थ भएको छ । यस भवनलाई दायाँ र बायाँ बनाएर शुरू भएका नहरहरूले यस भेकका ठूलो जनसमूहलाई कल्याण गर्न समर्थ भएको छ ।

सिचाई योजना अत्यन्तै सरल ढंगले निर्माण भएको छ । नदीको वेगलाई रोक्न नदीलाई फिंजाएको छ र दर्जनौं नहरहरू बनाइएर नदीको पानी बाँड फाँड गरिएको छ । बस् ! यो सरल सूत्रले धेरैलाई शिक्षा प्रदान गरिरहेको देखिन्छ ।

लिविन भन्छन्- 'यो सूत्र नदीमा मात्र होइन, राज्य-व्यवस्थामा पनि लागू हुन्छ !'

हो ! म यो सुन्दै पनि छु र बुझ्दै पनि छु । चार शताब्दी अघिको लिविनले बुझाएको सूत्र वर्तमानको लिविनले बुझेकोमा मलाई कुनै नौलो लागेको छैन । पढाइमा, अन्तर्राष्ट्रिय व्यापारमा स्नातक गरेका लिविनले अंग्रेजी भाषा राम्रो गरी लेख्न र बोल्न सक्छन् । उनको भनाइ अनुसार उनले विदेशी मित्रहरू धेरै बनाएका छन् । हुन पनि सरल स्वभाव, हँसिलो अनुहार, फुर्तिलो शरीर र अतिथि-सत्कारमा पोख्त लिविनले मलाई पहिलो भेटमै असल मित्र बन्न सक्ने प्रभाव छोडेका थिए । यो पटक उनलाई म तेस्रो पटक भेट्दै छु ।

जुन कम्पनीमा उनी काम गर्छन् त्यो कम्पनीले राम्रो फाइदा गरेको छ । उनलाई कम्पनीको प्रतिनिधि भएर सिङ्गापुर अथवा हङकङ खटिएर जाने ठूलो धोको छ । त्यसैले उनले अंग्रेजी भाषा राम्रो गरी सिकेका हुन् र विदेशी व्यापार धेरै बढाउने कोशिश गरेका

हुन् । उनलाई मैले दोस्रो पटक चीनको प्रमुख औद्योगिक शहरमध्येको निङ्बो भन्ने शहरमा भेटेको थिएँ । उनी त्यसै बखत भन्थे - म यही साल सिङ्गापुर जाँदै छु, तर गएका रहेनछन् । त्यो मलाई थाहा छ यिनी किन गएका छैनन् । म किन सोधूँ कोट्याई - कोट्याई ? यिनी सिङ्गापुर अथवा हङकङ खटिएर गएका भए यिनको कम्पनीले धेरै कमाउन सक्थ्यो भन्ने मलाई पनि विश्वास छ ।

शुरू-शुरूमा उनी मसँग व्यापारका मात्र कुरा गर्थे । पछि मित्रता बढ्दै गएपछि व्यावहारिक कुराकानी पनि शुरू हुन थाल्यो । उनी मसँग दिल खोलेर कुरा गर्छन् ।

शक्ति केन्द्रीकरण र विकेन्द्रीकरणका बारेमा उनी मसँग कुरा बुझ्न खोज्छन् । जिम्बेवारी र निर्णयका बारेमा पनि कुरा उक्काउँछन् । यी सबै उनको राजनीतिक चेतनाले उनलाई घचघच्याएको हुँदा उनी यस बारेमा बुझ्न खोज्छन् । तर स्पष्ट रूपमा भने भन्न सक्दैनन् । किनभने उनी राजनीतिक व्यक्ति होइनन् तैपनि उनले भनिहाले- 'बेजिङ्का सबै नेताहरूले यो ठाउँ घुमेका र हेरेका छन्, तर लिविनको सिद्धान्तलाई भने बिर्सिरहेका छन् ।'

मैले उनको भनाइमा प्रतिक्रिया जनाइनँ । हामी किनारै- किनार अगाडि बढ्दै जान्छौं, हेर्दै जान्छौं । त्यहाँ भएका मन्दिर र कला- कृतिहरूको अवलोकन गर्छौं, एउटा विशाल मन्दिरमा इन्जिनियर लिविनको मूर्ति राखिएको रहेछ । त्यस भेकका चीनियाँ त्यस मूर्तिमा धूप बालेर घुँडा टेकेर शिर झुकाएर भगवानलाई सम्मान गरेजस्तै गर्ने रहेछन् ।

लामो हिंडाइपछि हामी पहाडको माथिल्लो भागमा पुग्छौं, जहाँबाट सिचाई- योजनाको माथिदेखि तलसम्मको भाग स्पष्ट देखिन्छ । लिविनले औंल्याउँदै व्याख्या गर्छन्- 'हेर्नुहोस्, कति ठूलो क्षेत्र ओगटेको छ ! कति मानिसका हातहरू लागे होलान् यो योजना पूरा हुन !'

'तपाईं अनुमान गर्न सक्नुहुन्छ ?'

'त्यो समयमा पनि यति ठूलो आयोजना सम्पन्न हुनु चीनियाँ जनताको योग्यता प्रदर्शन हुनु हो ! साँच्चै नै इतिहास बोलेजस्तो भान हुन्छ - चीनियाँ जनता विश्वका कुनै मानिसभन्दा रत्तिभर कम छैनन् ।'- आफ्नो हृदयको उद्‌गार व्यक्त गर्छु ।

'साँच्चै हो ! तपाईं पहिलो विदेशी हुनुहुन्छ चीनियाँ जनताको तारीफ गर्ने !' लिविन सन्तोषको सास फेर्दै मलाई भन्छन् -'हो, तपाईं भन्नुहुन्छ चीनियाँ बाहादुर थिए, र सुसंस्कृत थिए !'

लिविनका यी भनाइमा कुनै गल्ती छैन । मैले लिविनलाई खुशी बनाउन उनको मुखको अगाडि औपचारिकता निर्वाह गर्नुपर्ने कुनै आवश्यक पनि छैन । किनभने उनी मेरा मित्र हुन् । मैले जो भनें त्यो मैले देखेका र अनुभव गरेका कुरा बोलें । फेरि मेरो अगाडि चीनको 'ग्रेट वाल' पनि त छ । भला, त्यो बनाउन जतिसुकै समय लागेको होस् ! जतिसुकै पुस्ताले माटो मोलेर बनाएको होस्, तर त्यो बन्यो विश्व- प्रसिद्ध हुने गरी, सयौं पुस्ताले देख्न पाउने गरी । त्यसैले मैले लिविनको भनाइलाई समर्थन जनाउँदै किटानसाथ भनें- 'ठीक भन्नुभयो ! चीनियाँ जाति बहादुर, सभ्य र सुसंस्कृत हो भन्ने कुराको प्रमाण चीनभरि फैलिएको छ ।'

म तपाईंलाई कुन शब्दले धन्यवाद दिऊँ, तपाईंले चीनियाँ जनताको सराहना गरेकोमा!' - लिविनको हृदयदेखि उसको जातिवाद बोल्छ ।

विदेशी साथीहरू धेरै बनाएका, तर विदेश यात्रा गर्न नपाएका लिविनले अमेरिका र यूरोपका बासिन्दालाई स्वर्गमा वास गर्ने उच्च कोटीका मान्छेहरू र आफ्नै वर्गका जापानीहरूलाई भाग्यवान हुन् भन्ने सम्झने गरेका रहेछन् । आफू पढे-लेखेका स्नातक र भाषाका ज्ञाता भए पनि हीनता-बोधले ग्रस्त लिविन आफू एकीन हुन सोध्छन्- 'हामी चीनियाँ जातिको आफ्नै परम्परागत रीति- रिवाज छ, होइन र ?'

'हो !' - मैले नहिचकिचाईकन सहमति जनाएँ ।

लिविन नयाँ वातावरण, नयाँ परिवेशमा हुर्केका भए पनि उनको वर्तमान स्थिति र वातावरणले गर्दा उनले आफूलाई राम्रो चिन्न सकेका छैनन् । पाएको सहुलियत र परिधिको निश्चितताले गर्दा लिविन योग्य मान्छे भएर पनि संकोचग्रस्त छन् । कति कुराहरू उनले नबोले पनि म सहजै अनुमान गर्न सक्छु -'लिविन चीनियाँ समाज नव- निर्माणको लागि दक्ष जनशक्ति हुन् ।'

अहिले मेरो सामु भूत र वर्तमान दुवै कालका लिविनहरू खडा छन् । मौका परे वर्तमानको लिविन पनि भूतकालको लिविनभन्दा कम देखिदैनन् । सबै दृष्टिकोणले योग्य देखिने वर्तमानको लिविनलाई म आफ्नो मनमा लागेको कुरा पोख्छु- 'लिविन, तिमीले पनि मौका पायौ भने यस्तै लिविन बन्न सक्छौ भन्ने मलाई विश्वास छ !'

मेरो भनाइबाट लिविनको अनुहारमा परिवर्तन आउँछ । उनको समय -समयमा हुने औपचारिकताको हाँसो पनि हराउँछ । सोचमग्न मुद्रामा आँखाहरू नदीको बगरमा फिजाउन थाल्छन् र क्षणभर आफूभित्र हराउँछन् । उनको परिवर्तित आकृतिलाई छड्के नजरले नियाल्दै म पनि दुजियाङ्यान नदीको किनार हेर्न व्यस्त रहन्छु ।

केही क्षणको मौनतालाई भङ्ग गर्दै उनी भन्छन्- 'मेरो मित्र ! तपाईंलाई म भन्छु - मेरो जीवन अन्धकारबाट गुज्रिरहेको छ ।'

यो भन्दा उनको आँखा रसाइसकेको छ । उनी योभन्दा बढी बोल्न पनि चाहँदैनन् र किन अन्धकार छ भन्ने कुराको व्याख्या पनि गर्दैनन् । एकै चोटि 'जीवन अन्धकार छ, भनेर - एक प्रेमिकाले अर्को प्रेमीलाई अँगालोमा गाँजेर घुँक्कघुँक्क रुन थालेजस्तो गरी आफ्नो मुटुभित्रको सबै व्यथा एकैपटक पोखिदिए ।

हरेक क्षणमा हाँसेर बोल्ने साथीको यो स्थिति देखेर मलाई पनि नरमाइलो लाग्यो । मैले उनलाई तुरुन्त केही भन्ने आँट गरिनँ । उनको चिन्तित अनुहारलाई नहेरेर म उनीसँग अलि अलग्गिएर डाँडाको हरियाली र नदीको सुखा बगरलाई हेर्न व्यस्त रहन्छु ।

धेरै बेरपछि मलाई उनले नै बोलाए- 'हेलो ! जाने होइन ? जाऊँ ! कि एकछिन बस्ने ?'

'होइन ! जाऊँ !'

हामी दुवै डाँडाबाट ओर्लन थाल्छौं । करीव पन्ध्र मिनेटमा हामी मोटर भएको ठाउँमा पुग्छौं र त्यहाँ पुगेपछि उनी मलाई सोध्छन् -'तपाईंलाई यो ठाउँ कस्तो लाग्यो ?'

उनले पाउने उत्तर म र उनी दुवैलाई थाहा थियो । मैले भन्नुपर्थ्यो -'राम्रो रहेछ वा यो ठाउँ घुम्न योग्य रहेछ'- तर मैले भनें - 'राजनीति र गणितको शिक्षालय रहेछ ।'

'के भन्नुभयो ?'- उनी मेरो कुरा सुनेर अचम्ममा परे ।

'हो, रमाइलोभन्दा गहिराइ र जटिलताको अनुभव गरें !' मेरो भनाइ सुनेर उनी हाँसे र उनको हाँसोमा साथ दिन अझ मैले बढी हाँसिदिएँ । दुवै हामी मोटरमा चढेर चिन्दू शहरतर्फ लाग्यौं ।

सिचुआन प्रान्तको मुख्य शहर चिन्दू चीनको औद्योगिक शहर मध्येको एक हो । यहाँबाट चीनको सबै प्रान्तसँग हवाईजहाज, रेल र मोटरबाट सम्पर्क कायम भएको छ । त्यसैले चीनका प्रमुख शहरहरूमा यो पनि मुख्य हो ।

पुराना र नयाँ अग्ला भवनहरू मिश्रित चिन्दू शहर विशाल एवं सुन्दर छ । बाटा-घाटामा पूर्ण हरियाली छ । कुनै कुनै बाटो, खास गरी रिङरोड र मुख्य बाटो रंगीविरंगी फूलहरूले भरिएको सुन्दर पार्कको प्रवेश द्वार जस्तो हुन पुगेको छ । ठाउँ - ठाउँमा भएको बिजुली बत्तीको संयोजनले पूरा शहरलाई रङ्गी-विरंगी अलंकारले सुसज्जित एक सुन्दर परी जस्तो तुल्याएको छ ।

यो शहर यति सुन्दर कसरी कायम गरिएको छ भन्ने मेरो जिज्ञासा त्यतिखेर टुट्यो जतिखेर म चढेको गाडी शहर प्रवेश द्वारमा धुलाइ गर्न 'मोटर धुलाइ गर्ने क्षेत्र' मा प्रवेश भएको थियो । शहर प्रवेश गर्ने सबै मोटर अनिवार्य धुनुपर्ने नियमले गर्दा हामी मोटरभित्र शीशा बन्द गरेर बसेको बस्यै मोटर धुलाइ भएर बाहिर निस्किएको थियो । अत्याधुनिक यन्त्रद्वारा मोटर धुलाइ गर्ने कार्यको लागि केही शुल्क पनि लिने गरिएको रहेछ । यो व्यवस्थाले शहर सफा र सुन्दर राख्न सकिन्छ भन्ने कुरा अरूले जस्तै मैले पनि बुझें ।

मलाई जिज्याङ होटेलमा छोडेर लिविन आफ्नो अफिसतर्फ लागे । हाम्रो भेट भोलि बिहान सबेरै हुने निर्णय भयो । उनी मलाई भोलि लेसान बुद्ध र इमाई माउण्टेनमा घुमाउन लानेछन् । म पनि थाकेको हुँदा आराम गर्न कोठातर्फ लागें ।

कार्यक्रम-अनुसार बिहान सबेरै फोन आउँछ । लिविन होटेलको लविमा आइपुगिसकेका रहेछन् । म पनि छिटै तयारी भएर बाहिर निस्किएँ । हामी लेसान बुद्धको लागि प्रस्थान गर्छौं । बाटोमा अनेक साना - ठूला गाउँहरू पार गर्दै हामी अगाडि बढ्दै जान्छौं । खाना खाने समय भएको हुँदा हामी एउटा गाउँमा खाना खान रोकिन्छौं ।

हामी खाना खानुभन्दा अगाडि गाउँको सानो हाट बजार लाग्ने ठाउँमा घुम्न जान्छौं । जहाँ गाउँलेहरूले आफ्नो आफ्नो उत्पादनका मालहरू बिक्री गर्न ल्याएका छन् । म विदेशी देखेर सबै ट्वालट्वाल्ती हेरिरहेका छन् । मेरो मित्र लिविन पनि टाई सुटमा भएको हुँदा त्यहाँ उपस्थित गाउँले चीनियाँभन्दा बेग्लै देखिन्छन् ।

लिविन भन्छन्- 'गाउँलेको आर्थिक अवस्थामा अझ राम्रो गरी सुधार भैसकेको छैन। लिवरेशनपछि पार्टीले घोषणा गरेको थियो, दुई दशकमा हरएक चीनियाँ नागरिक आर्थिक अवस्थाको दृष्टिकोणले विश्वको कुनै पनि नागरिकभन्दा कम हुनेछैन, तर हेर्नुहोस् यो केटीले ओस्वन अर्थात् हरियो साग बेच्न ल्याएकी छ । यो साग बिक्री भएन भने यिनले अन्य खाद्य वस्तु किन्न सक्तिनन् ।'

'ए !' - म जानकारी लिने क्रममा, एक जना युवक, जसको उमेर पन्ध्रसोह्रको अनुमान गर्न सकिन्छ, लाई औंल्याउँदै सोध्छु- 'यो केटाको पढ्ने उमेरमा किन व्यापार गर्न लागेको छ ?'

'शायद ! यसको कोही छैन होला !'- भन्दै उनी सिचुआन हुवा अर्थात् स्थानीय भाषामा केटासँग सोध- खोज गर्छन् ।

केटाको आमाको रोगको कारणले मृत्यु भएको रहेछ । घरमा उसको बाबु र तीन जना भाइ बहिनी रहेछन् । घरमा काम गर्ने उनको बाबु र उनी मात्र भएको हुँदा स्कूल जान छोडेको तीन वर्ष भइसकेछ । उनले लिविनलाई भनेका रहेन् - उनको बाबु बाजे किसान भएको हुँदा पढे पनि नपढे पनि किसानै हुने कुरा जनाएछन् ।

'गाउँले जीवन दुःखमय छ ! धेरै गाउँहरू त पहिले र आहिलेमा केही परिवर्तन भएको छैन । जुन वेगमा शहरको भौतिक परिवर्तन देख्छौ, त्यो गाउँमा आइपुगेको छैन । भनौं याहाँ सिस्टम डेभलप भएको छैन ।' - लिविन भन्छन् ।

'कस्तो सिस्टम भन्न खोजेको तपाईंले ?'

'यही ! जुन फसल किसानले उत्पादन गर्छ त्यसको सही मूल्य दिएर खरीद गर्ने संस्था छैन, भए पनि फसलको उचित भाउ किसानले पाउँदैनन् वर्षभरि चाहिने सबै वस्तु उत्पादन गर्न किसान सक्दैनन्, अनि बजारको भर पर्नुपर्छ । यो किसानको विवशता हो! बजारको सिध्दान्त नै बढी नाफा लिनु हो । त्यो भार साधारण किसानमा पर्छ । लिंदा पनि दिंदा पनि - यही सिस्टम डेभलप नभएर किसानको जीवनस्तर उठ्न नसकेको हो ।'- यो तर्क लिविन पेश गर्छन् ।

'किसानको उत्पादन उचित मूल्य दिई खरीद गर्ने कम्पनी त होला नि!'- म जिज्ञासा प्रस्तुत गर्छु ।

'छ ! तर त्यस कम्पनीले पनि त मुनाफा कमाउनुपर्छ ! फेरि जिंमेवार अधिकारीको कार्य निर्णय-क्षमतामा पनि त भर पर्छ । गएको वर्ष हजारौं टन अनाज किसानको घरमै कुहियो । जसको जिम्मेवारि कोही पनि भएन । त्यसको नतीजास्वरूप यो वर्ष किसानले अनाज उत्पादनमा उदासीनता देखाए ! अब भन्नुहोस् ! सिस्टम भएको भए यस्तो हुन्थ्यो ?'- बिस्तारै मलाई राम्ररी सम्झाउँदै लिविनले भने ।

चारओटा अण्डा एउटा रुमालमा फिंजाएर बिक्री गरिरहेकी युवतीलाई औंल्याउँदै म लिविनसँग सोध्छु- 'यो अण्डाको दाम कति हो ?'

'एक मोझे होला अर्थात् एक युआनको दश भागको एक भाग ।'

'के यिनी चार मोझे प्राप्त गर्न अण्डा बेचिरहेकी छन् ?'

'हो ! यो, यी युवतीको पेवा कुखुरीले पारेको फुल भएको हुँदा यिनले बेच्न आएकी हुन् । यो रकममा परिवारका अरू सदस्यको दाबी रहदैन, यो यिनले निजी प्रयोगको लागि खर्च गरुन् अथवा बचत गरुन् !'

मेरो देशको गाउँ- घरमा पनि यस्तै प्रचलन छ । मलाई यो कुरा नौलो लागेन । बचत गर्नु प्राणी मात्रको गुण हो, चाहे त्यो कमिला होस् वा माहुरी वा मूसा होस् वा अन्य जनावर ! मान्छे त झन् रोगिन्छ, आसक्त हुन्छ । योभन्दा अझ बढी उसको मन नरमाइलो हुन्छ । त्यो नरमाइलो मनलाई ढुक्क नपारेसम्म मान्छेले आफ्नो जीवनलाई जीवन मानिरहेको हुँदैन । त्यसैले मानवजीवनको यो महत्त्वपूर्ण पक्ष हो ।

'एक व्यक्तिले दिनहुँ एक मोझे बचत गर्नु राष्ट्रिय सम्पत्तिको बचत होइन ?'- लिविन आफ्नो तर्क पेश गर्छन् । 'जरूर हो !'- उनको अनुमानलाई एकीनमा बदल्न जोड दिन्छु । हामी यसै गरी बजार घुम्दै रेष्टुराँमा खाना खान पस्छौं । चीनियाँ खानाको अर्डर गरेपछि खाना आउनुभन्दा अगाडि र खाना आएपछि पनि गाउँ - घरका व्यवहार-बारेमा लिविनले जानकारी दिन्छन् । उनको भनाइ - अनुसार चीनियाँ समाज पुरुष - प्रधान समाज हो । महिलालाई पुरुष सरह व्यवहार गरिनु महिलामाथिको शोषण हो ! यो वर्तमान सिद्धान्त सभ्य र विकसित समाज निर्माणका लागि लाभदायक ठहर्दैन ।

हुनत उनको विचार ठीक हुन सक्दैन । आजको माग पुरुष र महिलाको भेद हुँदैन भन्ने छ । वास्तवमा लिङ्गको आधारमा भेद हुनु राम्रो होइन । तर लिविनको भनाइ छ समानताको अर्थ सर्वपक्षीय समानता हुनै सक्दैन किनभने यो रचनाको उत्पत्ति र प्राकृतिक जिम्मेवारीमै भेद भएको हुँदा यो समान कहिल्यै हुन सक्दैन । जबर्जस्ती समानताको लागि जोड दिइन्छ भने अव्यावहारिक हुन्छ र अप्राकृतिक ठर्हछ ।

उनको भनाइले स्पष्ट गर्‍यो समाजको विकास र स्थायित्व पुरुष - प्रधान रहनुमा हुन्छ । तर यस-बारेमा मेरो आफ्नो तर्क छ र आफ्नै भनाइ छ । उनको तर्कसँग म सहमत नभएर पनि मैले विवाद ल्याउन चाहिनँ । हामी खाना खाइसकेर गन्तव्य स्थानतर्फ लाग्छौं ।

विशाल काय कुनै चौतारो अथवा मेचमा थपक्क खुट्टा झारेर बसेको जस्तो गरी बसेको बुद्धको मूर्ति मिन जियाङ अर्थात् मिन नदीको किनारमा अवस्थित लेसान बुद्ध भएको क्षेत्रमा पुग्यौं । पर्यटकको भीड लाग्ने ठाउँ भएकोले हिड्न, घुम्न र बस्न सबै राम्रो किसिमले व्यवस्था गरिएको रहेछ । करीब तीन सय फुट ऊँचाइको त्यो मूर्ति सिंगै पहाडमा खोपिएर बनाइएको अनुमान गर्न सकिन्छ ।

विश्वमा नै एकमात्र यति विशाल बुद्ध-मूर्ति भएको कुरा लिविन मलाई बताउँछन् । हामी यो बुद्ध-मूर्ति अवलोकन गरेर यसै नजीकको लोसार शहरको एक होटलमा बस्छौं । भोलिपल्ट बिहान हामी इमाई माउन्टेनको लागि प्रस्थान गर्छौं ।

हामी करीब दश बजे बिहान इमाई पहाडको फेदीमा पुग्छौं । पहाडी यात्रा शुरू हुने स्थानमा तरुना र मोटाघाटा एक जमात मान्छेहरू आएर हामीलाई तानातान गर्न

लागे । पहिले त म डराएँ, पछि लिविनले सम्झाएपछि थाहा पाएँ - करीब आधा घण्टाको चढाइको लागि यिनीहरूले बोकेर लाने रहेछन् । केही ज्याला लिन तय गरेर म र लिविन दुवै यिनीहरूबाट ताम्दानमा बोकिएर पहाडको उकालो लाग्यौं । केबुलकारको स्टेशनमा लगेर यिनीहरूले हामीलाई छाडिदिए । त्यसपछि हामी केबुलकारद्वारा इमाई पहाडको चुचुरामा पुग्यौं ।

इमाई पहाडको चुचुरो खुल्ला छ र आकाश निर्मल छ । तर तलतिर बादलले ढपक्क ढाकेको हुँदा पानीको तलाउ जस्तो देखिन्छ । अनेक नयाँ र पुराना मन्दिर भएको यो इमाईको चुचुरोलाई स्वर्ग पुग्ने भञ्ज्याङ्को रूपमा चीनियाँहरूले स्वीकारेका रहेछन् । मरेका आफ्ना पितृहरूलाई कागजको टुक्रा चढाएर वा धूप बालेर आफ्नो श्रद्धा व्यक्त गर्ने चलन रहेछ । यति मात्र होइन, मृतक मान्छेको नाउँ नोट र कागजमा लेखेर पहाडबाट फाल्ने पनि चलन रहेछ । लिविनले पनि बाबुको नाम दश युआनको नोटमा लेखेर पहाडको तलतिर फालिदिए । उनले विश्वासले चढाएको नोटलाई तीन मिनेटसम्म हामीले देख्यौं । पछि बादलले छोपेर विलीन गरायो । नयाँ युग र वातावरणमा हुर्किसकेका लिविन पनि अन्धविश्वासी रहेछन् भन्ने मैले बुझें । तर मैले यस - बारेमा कुनै प्रतिक्रिया जनाइनँ ।

हामी त्यहाँबाट केबुलकारको बाटो नै पहाडबाट तल आयौं । त्यसपछि बिस्तारै हिंडेर हाम्रो गाडी भएसम्म आइपुग्यौं । त्यसपछि हामी चिन्दू शहरको लागि रमाना भयौं ।

साँझ चिन्दू शहर आइपुग्यौं । कार्यक्रम - अनुसार हामीलाई सिचुआन प्रान्तकै अर्को प्रमुख शहर चुङकिङ जानु छ । लिविनको कम्पनीबाट जुन माल हामीले खरीद गर्न लागेका छौं, त्यो कम्पनीको उत्पादनको गुणस्तर निरीक्षण गर्नुपर्ने भएकोले हामीलाई जानुपरेको हो । हामी भोलि साँझको रेलबाट चुङकिङ जाँदै छौं ।

रेल-सेवा राम्रो नै छ । रातको यात्रा गर्ने रेलमा कम्बल र बिछ्यौना दिने नियमले गर्दा भारत यात्रामा जस्तो बेडिङ बोकिरहनुपर्दैन । हामी चिन्दूमा साँझ आठ बजे रेल चढेका थियौं,भोलिपल्ट बिहान ६ बजे चुङकिङ शहरमा पुग्याइदियो ।

बिहानको समय, जाडो ठाउँ, हामीलाई केही बेर कुर्नुपर्‍यो टेक्सीको लागि । केही बेरपछि निर्दिष्ट होटलमा पुग्यौं । चिया नाश्ता मात्र सकेका थियौं, कारखानाबाट हामीलाई लिन मोटर आइपुग्यो ।

चुङकिङ शहर विशाल नदीको वारि र पारि फैलिएको डाँडोको टुप्पोदेखि नदीको किनारसम्म टम्म बसेको रहेछ । हामी वारिबाट नदी-पारिको दृश्य राम्रो गरी देख्न सक्छौं । पुराना घरहरू अलि होचा र नयाँ घरहरू अग्ला र चम्किला देखिने हुँदा नयाँ र पुराना घरहरू राम्रो गरी छुट्याउन सकिन्छ । चौडा र ओरालो ओरालो परेको सफा बाटोको किनारमा हरिया रूखहरू झुलिरहेका हुन्छन् । बिहान भएको हुँदा सडक धुने गाडीहरू सडक धुन व्यस्त छन् । सडक सफा नै देखिन्छ, तरपनि धुने कार्य भइरहेछ । हामी नदी-पार गरेर शहरको अर्को पाखोमा पुग्छौं । त्यहाँबाट हेर्दा हामीले छोडेको एरिया झन् राम्रो रहेछ । हावापानी र सुन्दरताको दृष्टिकोणले अत्यन्तै राम्रो मानिने चुङकिङ शहर उद्योग र व्यापारका लागि पनि कम रहेनछ । यहाँ व्यापार बढाउनमा ठूलो मदत याङ्जी नदीले

गरेको रहेछ । यो नदी चीनको धेरै शहरसँग सम्पर्क राख्दै प्रशान्तमहासागरको मुख्य बन्दरगाह सांघाईसँग जुटेको छ । साना ठूला स्टीरमहरू सांघाईबाट यहाँ दैनिक आउने जाने गर्छन् । मध्य चीनमा रहेको यो शहर सांघाईबाट करीब तीन हजार किलोमिटर टाढा पर्छ ।

हामी एउटा मोटर-साइकल बनाउने कारखानामा जाँदै छौं । कारखानामा पुग्ने वेलामा लिविन कुरा खोल्छन् - यो कारखानामा उनकी दिदी पनि काम गर्छिन्। मेरो सोधखोजपछि उनी भन्छन्- 'मेरी दिदीले साह्रै दुःख पाएकी छन् । विवाह भएको छैन । दश वर्षदेखि एउटै काममा छिन् । उनले मेकानिकल इन्जिनियरिङ पास गरेपछि त्यो मोटर-साइकल कारखानामा काम गर्न शुरू गरेकी हुन् ।'

'इन्जिनियर भनेपछि राम्रै होला नि !'

तपाईं आफैले देख्नुहुनेछ - राम्रो र नराम्रो !'मेरी दिदीसँग पढेको साथी त्यहाँ सात सय मान्छेको हाकिम अर्थात् त्यहाँको जनरल मेनेजर छ !'

'कसरी हाकिम भो त ?'

'कसरी भयो भनूँ ! भयो !'

मैले बुझिहालें, त्यसैले मैले अनुमान लगाएँ- 'शायद त्यो मान्छेको माथि राम्रो पहुँच हुनुपर्छ ।'

'निश्चय नै ! त्यस्तो नभए दश वर्षभित्रमा जनरल मेनेजर कसरी हुन्छ ?'

गफ गर्दै हामी कारखानामा पुग्छौं । सर्वप्रथम हामी जनरल मेनेजरकहाँ भेट्न जान्छौं । उनलाई पूर्व सूचना भएको हुँदा उनी हामीलाई आफिस बाहिरसम्म लिन आए । मैले हात मिलाएर औपचारिकता निभाएँ । दुवैले नेम कार्ड आदान-प्रदान गऱ्यौं । उनको नाम ओन यी रहेछ ।

लिविनले उनको बारेमा मलाई बढाई चढाई परिचय दिएर भने - 'उहाँकै नेतृत्वमा यो कारखाना सञ्चालन भएको छ । उहाँ नै प्रमुख व्यक्ति हुनुहुन्छ ।'

कार्डको नाउँलाई व्याख्या गर्दै मैले पनि ठट्यौलो स्वरमा भनें -'उहाँ यस कारखानाको प्रथम व्यक्ति भन्ने कुरा त उहाँको नामले नै बताइहालेको छ नि! अंग्रेजीमा 'ओन' भनेको प्रथम अंक एक र चीनियाँमा 'यी' भनेको पनि त्यही प्रथम अंक एक भएको हुँदा सबैतिरबाट प्रथम व्यक्ति हुनुहुँदो रहेछ ।'

शायद मैले अंग्रेजीमा बोलेको कुरा ओन यीले पनि बुझेछन् क्यार ! उनी हाँसे, लिविन र म दुवैले हाँसोलाई बढायौं । हामी तीनै जवान हाँसेको देखेर 'ओन यी' का सहायक जो हाम्रो कुरा बुझ्न सक्दैनथे - तिनीहरूले पनि हाम्रो हाँसोमा साथ दिए । प्रथम भेट नै रमाइलो वातावरणमा सम्पन्न भयो ।

यो मोटर साइकल बनाउने कारखाना हो । यसलाई निर्यात्त गर्ने अधिकार छैन । यहाँ विदेश व्यापार गर्न अधिकार पाएको कम्पनीले मात्र विदेश व्यापार गर्न पाउँछ ।

कुनै पनि वस्तु उत्पादन गर्ने कारखानाले निर्यात गर्न सक्दैन । त्यसैले चिन्दू - स्थित लिविन काम गर्ने कम्पनीले निर्यात गर्ने र यस कम्पनीले उत्पादन गर्ने हुँदा निर्यात-पूर्व निरीक्षणको अनिवार्यताको कारणले हामी यहाँ आइपुगेका हौं ।

सर्वप्रथम हामी निर्यातको लागि तयार गरिएको मोटर - साइकल राखिएको ठाउँमा जान्छौं र हेर्छौं । त्यसपछि मोटर साइकल बन्ने कारखानाको निरीक्षण शुरू गराउँछन् । ठूला- ठूला आठओटा सेडमा कारखाना भए पनि कारखाना एरिया दश स्क्वायर किलोमिटरमा फैलिएको हुँदा एक ठाउँबाट अर्को ठाउँमा जान मोटर प्रयोग गर्नुपर्ने रहेछ । बीच - बीचमा मजदूरहरूको बस्ने ठाउँ, घुम्ने पार्कहरूको समेत व्यवस्था भएको हुँदा कारखाना क्षेत्रको वातावरण राम्रो छ ।

हामी कारखानाको पहिलो, दोस्रो र तेस्रो गर्दै कामदारहरूले काम गरिरहेको हेर्दै गयौं । हामीलाई कारखाना निरीक्षण गर्न ल्याउने भाइस मेनेजर हामीसँगसँगै हिडिरहेका छन् । मैले कुनै कुरा सोधें भने लिविनबाट नै जवाफ पाइरहेछु । उनले नबुझेका कुराहरू भाइस मेनेजरसँग सोधेर लिविनले बताउँदै गरेका छन् । प्रायः एक मेशीनमा एक मान्छे घोटिएर काम गरिरहेका छन् । कसैले यसो एकपटक हेरे पनि, कसैले त हामीलाई टेढो आँखाले पनि हेर्ने गरेका छैनन् ।

एउटी बूढी आइमाई चश्मा लगाएर लेथ मेशीनमा घोप्टेर मेशीन चलाइरहेकी छन् । तिनको अवस्था हेरेर मैले अनुमान गरें-यिनी पचास वर्षभन्दा बढी उमेरकी देखिन्छिन् । छेउमै एक जना सुन्दर युवती करीब अठार उन्नाईस वर्ष उमेर अडकल गर्न सकिने, पनि लेथ मेशीनमा काम गरिरहेकी छन् । यी दुवैलाई हेर्दा मैले अनुमान गरें- यी सुन्दर युवती यही मिशीनमा झुन्डिएर केही कालपछि यस्तै वृद्ध हुनेछिन्। संयोग, यही कुरो बिचरा लिविनले पनि सोचेका रहेछन् - यो कुरा मैले उनलाई भनेपछि उनले मलाई दोहऱ्याएर भने- 'कसरी तपाईंको र मेरो सोचाइ एक भइरहेछ ?'

मेरो जिज्ञासाको आडमा लिविनले तिनीहरूसँग आफ्नो भाषामा सोध-खोज गर्छन् । परिणाम आयो-तिनीहरू आमा, छोरी रहेछन् । आमाले त्यही मेशीनमा काम गरेको पच्चीस वर्ष भएछ र छोरीले गरेको एक वर्ष भएछ ।

यी सुन्दर युवतीले पढेकी जरूर हुनुपर्छ । यी युवतीका कोमल हातलाई यी फलामे मेशीनले किन जकडेर राख्यो भन्ने मलाई लाग्छ । यो सम्झेर मलाई चस्स बिझ्यो - म केवल यात्री हुँ, के भन्न र गर्न सक्छु ? त्यसैले चुपचाप अगाडिको मेशीन र मेशीनसँग जुधिरहेका कामदारलाई नियाल्दै गएँ ।

सातौं भवनमा पुगेपछि मोटर साइकलको इन्जिन फिट गर्ने स्थान रहेछ। यो भवन अरूभन्दा विशेष सफा र उज्यालो देखें । लिविनले भने - 'यहीं मेरी दिदी काम गर्छिन्!'

'ए हो, कहाँ ?'

हामी अगाडि बढ्दै गयौं । इन्जिन फिट भएपछि स्टार्ट गरेर चेक गर्ने ठाउँमा लिविनकी दिदी रहिछन् । दिदीको छेउमा पुगेर आफ्नो भाषामा लिविनले केही भने । त्यहाँ

मलाई चिनाजानी गराउने स्थिति नै थिएन । कारण हाम्रो साथमा भाइस मेनेजर छन् । साथै उनी स्वयं पनि कार्यमा व्यस्त छिन् । मैले चिनिहालें लिविनको जस्तो अनुहार देखेर । हामी केही नबोली अगाडि बढ्दै गयौं ।

हामी अन्तिम भवनमा पस्यौं, जहाँ अन्तिम जोडजाड गरेर मोटरसाइकल तयार गरी निकाल्ने स्थान रहेछ । यो भवन अरू भवनभन्दा बेग्लै किसिमको र ठूलो पनि रहेछ । यो भवनबाट बाहिर निस्कनेबित्तिकै हाम्रो निरीक्षण कार्य समाप्त हुन्छ ।

हामी सबै जनरल मेनेजरको आफिसतर्फ लाग्यौं । कार्यक्रम अनुसार हाम्रो लन्च त्यहीं तयार हुँदै छ । जनरल मेनेजर ओन यी हाम्रो प्रतीक्षामा रहेछन् । हामीलाई उनले आफ्नो कोठा - बाहिर- सम्म आएर स्वागत गरे र अफिस कोठाभित्र लगे । उनले कारखाना कस्तो लाग्यो भन्ने उत्तरमा मैले जे जवाफ दिनुपर्थ्यो दिएँ । लिविन त एक वर्षमा पाँच छः पटक आउने रहेछन् । त्यसैले उनले कारखानाको बारेमा कुनै कुरा बताउने कुरै भएन ।

खाना केही ढीलो रहेछ । हामी कुरा-कानी गरिरहेका छौं । यसै - बीच लिविनलाई खबर आइपुग्छ - उनकी दिदी तल भिजिटिङ रूममा लिविनको प्रतीक्षामा बसेकी रहिछिन् । यो कुरा लिविनले एकछिन दिदी भेटेर आउँछु भनेर मलाई भनेपछि मैले थाहा पाएँ । मैले पनि तुरन्तै भनें- 'मित्र ! तपाईंकी दिदीसँग मैले पनि भेट्न हुँदैन ?'

उनले नकार्न सकेनन् । त्यसैले ओन यी-सँग माफी माग्दै हामी दुवै तल भिजिटिङ रूममा गयौं । लिविनकी दिदी कुरिरहेकी रहिछिन् । कोठामा पुग्नेबित्तिकै लिविनले दिदीसँग मेरो परिचय गराएं । उनको नाउँ लिस्याउ ली रहेछ ।

लिविन र लिस्याउ ली आपसमा कुरा गर्दै गए । के कुरा गरे म बुझ्न सक्दिनथिएँ । तर उनीहरूको अध्ययनबाट अनुमान गर्न सकिन्थ्यो कि वार्तालाप अत्यन्तै सम्वेदनशील छ । दुवैको आँखा रसाइसक्यो र दुवै चिन्तित देखिन्छन् । मैले पनि चुपचाप उनीहरूलाई नियालिरहें ।

लिविनका अरू दुइटी बहिनी रहेछन् । बाबु नभएकोले तिनीहरूको पढाइको जिम्मेवारी लिविन र लिस्याउ लीको काँधमा आएको रहेछ । यस्तै अरू घरायसी कुराले उनीहरूलाई चिन्तित बनाएको रहेछ । यो सुनेर लिविन-सँग प्रश्न गरें - 'चीनमा शिक्षा अनिवार्य र निःशुल्क छ भन्ने सुनेको छु, के हो ?'

'यो प्रचार गर्ने कुरा हो !'- भन्दै उनी भन्छन्- 'शिक्षा अनिवार्य छैन' प्राथमिक तह निःशुल्क छ, तर त्यसपछिको कुनै ग्यारेन्टी छैन !'

'त्यसो भए तपाईंले स्नातक गरेको आफ्नो खर्चबाट ?'

'निश्चय हो !'- भन्दै उनी भन्छन्- 'यही दिदीले मजदूरी गरेर मलाई पढाएकी हुन् र मैले मेरा दुई बहिनी पढाउनु छ !'

यस्तै कुरा हुँदै थियो । यसै - बीच माथि ओन यीबाट खबर आउँछ - लन्च तयार भयो । हामी लिस्याउ लीसँग विदा मागेर माथि लाग्छौं र हामी सोझै खाना खाने कोठामा पुग्छौं ।

सबै हामीलाई कुरेर बसेका रहेछन् । हामी पुग्नेबित्तिकै सबै टेबुलमा बस्न पुग्छौं । टेबुलमा खाना सजिएको छ । हाँसो र ठट्टाको साथ खाना खाएर हामी पुनः जनरल मेनेजर ओन यीको कोठामा पुग्छौं । केही बेर बसेर वेलैमा हामी चुङकिङ शहरको लागि प्रस्थान गर्छौं र साँझ होटेल पुग्छौं ।

लिविनको विचार - अनुसार मलाई उहान शहर याङ्जी नदीको बाटोबाट स्टीमरद्वारा पठाउने र आफू चिन्दू फर्कने थियो । तर उनले भने नदीमा पानीको वेग बढेको अर्थात् बाढी आएको हुँदा हवाईजहाजबाट नै जानु बेस हुन्छ भन्ने कुरा सम्झाए । मैले उनको निर्णयलाई नाइँनास्ति गर्ने कुरै थिएन । त्यसैले मैले भनें - 'जस्तो ठीक लाग्छ त्यसै गरी कार्यक्रम तयार गर्नुहोस् ।'

बिहानै हामी हिंड्ने तरखरमा छौं । दश बजेको हवाईजहाज एयरपोर्ट पुग्न एक घण्टाभन्दा बढी लाग्छ । फेरि भनेको वेलामा टेक्सी पाइँदैन । त्यसैले चाँडो चाँडो गरेर होटेलबाट निस्कन्छौं ।

हामी ठीक समयमा एयरपोर्ट पुग्छौं । लिविनको पनि चिन्दू जाने रेल एघार बजे भएको हुँदा मलाई एयरपोर्ट छोडेर उनी फर्कनुपर्ने भएकोले चेकिङ गराउने तरखरमा लागेका छन् ।

एयरपोर्ट भीड छ । बेजिङ सिआन निङ्वो र उहान जाने फ्लाइट बिहानै रहेछ । सानो एयरपोर्ट भएकोले पनि ज्यादै भीड भएको छ । लिविन म - छेउ आएर हतारिँदै भन्छन्- 'जाउँ उहानको चेकिङ हुँदै रहेछ ।'

उनी मलाई चेकिङ गराएर बोर्डिङ कार्ड दिँदै भन्छन्- 'अब तपाईं जानुहोस्!' हाम्रो मित्रता पछिसम्म कायम रहोस् ! केही पर्‍यो भने टेलेक्स अथवा फोन गर्नुहोस्!' - भन्दै हात मिलाउँछन् र भन्छन्- 'अब मलाई बिदा दिनुहोस् !'

मैले उनलाई प्रतिउत्तरमा भावपूर्ण अभिवादन गर्दै अंग्रेजीमा -'थ्याङ्क्यु भेरि मच' र चीनियाँ भाषामा 'सेसे' भनें । उनले पनि तुरुन्तै 'पुसे' भन्दै शिर निहुराएर अभिवादन फर्काए । अलि टाढा गएर फेरि फर्केर हात हल्लाउँदै 'बाई बाई' गरे र मैले पनि !

अब म यो भीडमा एक्लो भएँ । एक ठाउँमा बसेर भीडका प्रत्येक व्यक्तिलाई नियाल्न थालें । चीनियाँ जनता र मित्रहरूको बारेमा सोच्न थालें । पहिले अर्थात् उन्नाईसको सत्तरीको दशकमा चीनियाँहरूको अनुहार एउटै देख्थें र सोच्थें किं कसरी यिनीहरू एउटै देखिन्छन्, तर अहिले उन्नाईसको अस्सीको दशकमा राम्ररी खुट्याउन र छुट्याउन सक्ने भएको छु । अनुहार, जीउ डाल, कद र हात खुट्टादेखि लिएर पहिरन र बोलीबाट जाति र स्तरको अनुमान गर्न सक्छु । त्यसैले म यहाँ एक अर्कासँगको अन्तर स्पष्ट देखिरहेको छु ।

हेर्दाहेर्दै भीड कम हुँदै छ, बेजिङ र सिआनको हवाईजहाज उडिसक्यो । म भीडलाई नियाल्न व्यस्त छु । मसँग कुरा गर्ने र सम्पर्कमा आउने एउटा मान्छे पनि देखिनँ । यहाँ विदेशीमा म एक जना मात्र भएको अनुमान गर्छु । हवाईजहाज ढीला हुने एलाउन्स भयो, निङ्वो एक घण्टा ढीलो उड्ने र उहान पाँच घण्टा ढीलो उड्ने जानकारी गराइयो । अब म साँझमा मात्र उहान पुग्ने भएँ ।

हवाईजहाज ढीलो नभएसम्म मलाई चिन्ता लागेको थिएन । जब ढीलो हुने थाहा पाएँ, हरएक मिनेट मेरो लागि घण्टामा परिणत हुन थाल्यो । एक्लो, त्यसमा नयाँ ठाउँ, भाषाको समस्या, मेरो मन छटपटिन थाल्यो । अब पन्ध्र मिनेट पनि एउटा मेचमा बस्न नसक्ने भएँ ! अंग्रेजी जान्ने कोही छ कि भनेर खोज्ने कोशिश गरें, कोही पाइनँ ।

बडो मुश्किलले दिउँसोको दुइ बज्यो । अब केही आशा पलाउन थालेको छ । सबै यात्रीहरू म जस्तै छटपटिएका छन् । भाषाका समस्याले गर्दा शब्द-द्वारा व्यक्त गर्न नसके पनि प्रत्येक व्यक्ति-भित्रको अन्तरद्वन्द्व मेरो सामु स्पष्ट अभिव्यक्त भइरहेछ । प्रायः सबैले मलाई चिनिसके र मैले पनि । यात्रीहरू-मध्ये केही म बसेको मेचको छेउमै आएर बस्न थालेका छन् । कोही कोही त चीनियाँ भाषामा मसँग बोल्न थाले भने कोही कोही मौन अभिनयद्वारा नजीकिन थाले । केही घण्टा पहिले यही मान्छेहरूको भीडको बीचमा बस्दा निर्जन जंगल सम्झेको थिएँ भने अहिले मान्छेहरूको बीचमा बसेजस्तो अनुभव हुन थालेको छ ।

एकाएक एलाउन्स भयो - हवाईजहाज आज क्यानसिल भयो - र भोलि बिहान सात बजे मात्र जाने भयो । सबै यात्रीहरू सल्बलाए ! म बिलखबन्दमा परें - म के गरूँ !

सोधखोज गर्दा थाहा पाएँ, नजीकै एउटा होटेल रहेछ । कोही त्यहीं बस्ने भए, कोही होटेलतर्फ लागे र म पनि होटेलतर्फ लागें । होटेलको काउन्टरमा अंग्रेजी भाषा जान्ने मान्छे नभएको हुँदा मलाई मुश्किल पर्‍यो ।

यस्तै तीतो, मीठो, अप्ठेरो र रमाइलो - नरमाइलोको अनुभव गर्दै उहान शहर पुगें । निर्दिष्ट ठाउँमा गगनलाई भेटें । गगनले सिआन शहरको बारेमा, मैले चिन्दू तथा चुङकिङ शहरको बारेमा बताउँदै उहान शहर घुम्न थाल्यौं । याङ्जी नदीको किनारामा रहेको यो उहान शहर हुवाई प्रान्तको मुख्य औद्योगिक शहर हो । शताब्दियौं पुरानोदेखि आधुनिक कालका मिल कारखानाहरू समेत यहाँ चलिरहेका छन् । यहाँबाट सांघाई जलमार्गद्वारा जोडिने हुँदा पनि यो शहरमा औद्योगिक विकास भएको हो ।

अरू शहरमा जस्तै यो शहरमा पनि कंक्रीटले ढलान गरेको बाटो - घाटो बनेको छ । हरियालीको अनिवार्यताले बाटोको दुवै किनार स्वच्छ, सफा र सुन्दर छ । नयाँ भवनहरूको निर्माण पूर्ण आधुनिक ढाँचामा बनाइएको छ । शहर फैलदै गएको कारणले शहरवासीहरूले अनिवार्य साइकलको प्रयोग गर्नुपरेको छ ।

हामी उहान शहरको काम सकेर गुवाङ्चाउ आइपुग्छौं । यो पटक हामी 'लिउहुवा पिङ्हुआ' अर्थात् लिउहुवा नाम गरेको होटेलमा बसेका छौं । यो होटेल गुवाङ्चाउको मुख्य रेलवे स्टेशन - अगाडि छ । यो होटेल त्यति ठूलो होइन र सानो पनि होइन ।

यहाँ दोभाषे दिने व्यवस्था नभएको हुँदा हामीलाई समस्या पर्‍यो । पुराना हाम्रा मित्रहरू चाङ्सच र लियाङ लीलाई खोज्ने निर्णय गरेर हामी डङ्फङ होटेलमा पुग्यौं । होटलेमा सबै सँग सोधखोज गर्दा पनि हामीले पत्ता लगाउन सकेनौं । मूल समस्या भाषाकै थियो । हामी करीब एक घण्टासम्म यताउता हेर्ने र सोध्ने कार्यमा लागेर होटेलकै लविमा अल्मलियौं ।

उपाय - रहित अवस्थामा परेका हामी दुवै चिन्तित मुद्रामा चुपचाप समस्या समाधानको उपाय खोजिरहेका छौं । छटपटिएका गगन समय - समयमा लविको एक कुनादेखि अर्को कुनासम्म हराएको माल खोजे जस्तो गरी चाङ्सच र लियाङ लीको अनुहार खोज्न त्यहाँ आउने जाने र काम गर्ने युवतीहरूलाई नियाल्न व्यस्त छन् ।

गगन हुत्तिएर म बसेको सोफामा आएर बस्छन् र भन्छन्- 'तिमीसँग लियाङ लीको ब्वाइफ्रेन्ड चाउयाङ्को ठेगाना छ ? उसलाई भेटियो भने पनि त पत्ता लाग्छ ।'

'ठीक भन्यौ ! शायद म - सँग हुनुपर्छ !' - यति भनेर म आफ्नो ब्रीफकेश खोलेर म-सँग भएको भिजिटिङ कार्ड तलास्न थाल्छु ।

कार्ड फेला पर्‍यो । गगनलाई कार्ड दिएर भनें- 'तिमी यहींबाट फोन गर र सोध!'

'हुन्छ !' - भनेर गगन कार्ड लिएर टेलिफोन गर्न जान्छन् ।

गगनको चाउयाङ्सँग सम्पर्क भएछ । उनले चाङ्सच र लियाङ लीको बारेमा टेलिफोनबाट बताउन इन्कार गरेपछि गगनले भेट गर्नको लागि अनुरोध गरेछन् । चाउयाङ हामी बसेको होटलमा आजै तीन बजे आउने भएका रहेछन् ।

हामी घुमघाम गरेर तीन बजेभन्दा अगाडि नै होटेलको कोठामा गएर बस्यौं । ठीक तीन बजे चाउयाङ होटेलको लविमा आएर टेलिफोनद्वारा हामीलाई आइपुगेको सूचना गरे। हामीले उनलाई कोठामा नै बोलायौं ।

'हेलो ! गुड आफ्टर्नून् !' को आवाज - सँगसँगै चाउयाङ कोठाभित्र प्रवेशं गरे र हामी दुवैसँग हात मिलाए ।

हामी दुवैले औपचारिकता निभाउँदै सोफामा बस्नको लागि अनुरोध गर्‍यौं, धेरै समयपछि भेट भएको आ-आफ्नो विचार दुवै थरीले व्यक्त गरिसकेपछि मैले लियाङ लीको बारेमा जान्न चाहें- 'लियाङ लीसँग विवाह भयो होला, होइन ? उनी अहिले कहाँ छिन्?'

'विवाह त भयो !'- चाउयाङ बोल्दाबोल्दै रोकिए र उनको प्रसन्न अनुहारमा खिन्नता झल्किएको टड्कारो देखियो ।

'बधाई छ ! कहिले ? त्यही समयमा ? बच्चा पनि त भयो होला ! बच्चा कस्तो छ ! उनको स्वास्थ्य कस्तो छ ? अहिले उनी कहाँ छिन् ?'

यसरी मैले एकै बोलीमा फटाफट तेर्स्याएको प्रश्नको उत्तरमा गह्रारो मान्दै भने- 'उनी ठीक छिन् ।'

उनको जवाफबाट म सन्तुष्ट भइनँ । उनी अझ प्रसंगलाई बदल्न गगनतर्फ फर्कदै सोध्न पुग्छन्- 'तपाईंहरूको व्यापार कस्तो छ ? व्यापारी मामलामा अहिले त चीन धेरै उदार भएको छ । तपाईंहरूको विचारमा कस्तो लाग्छ ?'

'ठीक बेठीक भन्नु भन्दा म त्यत्ति सन्तुष्ट छैन । कारण, तोकेको कम्पनीले मात्र निर्यात गर्न पाउने । आयात गर्न विशेष इजाजत लिनुपर्ने, त्यो पनि केन्द्रबाट । यसरी कहाँ व्यापार फस्टाउन सक्छ ?'

'तपाईंहरूलाई यसले के फरक पार्छ र ?'

'सोझै उत्पादकसँग माल किन्नु वा उत्पादकलाई चाहिने माल बिक्री हुने व्यवस्था भयो भने वस्तुको उत्पादन-मूल्य कम हुन्छ र विश्व - बजारमा प्रतिस्पर्धा गर्न सक्छ । बीचको कम्पनी मार्फत् कारोबार भइदिंदा वस्तुको मूल्य वृद्धि हुन जान्छ । यसले गर्दा हामी व्यापारीलाई गाह्रो हुन्छ ।'

यसरी चाउयाङ्ले प्रसंग मोडेर गगनसँग कुरा गर्न थालेपछि उनीहरू - बीचको कुरा सुने पनि मलाई भने लियाङ लीको बारेमा जान्ने उत्सुकता झन् बढ्दै गइरहेको छ । कुरा सुस्ताएको वेलामा मैले चाउयाङ्लाई बीचैमा प्रश्न गरें - 'लियाङ ली कहाँ छिन् ?'

'अहिले सेन्जनमा काम गर्छिन्'- उनले यो भन्दा नमीठो अनुहार लगाए ।

मैले बुझिहालें यिनी कुनै उल्झनमा परेछन् । म एकछिन चुप रहें । तुरुन्त फेरि लियाङ लीको बारेमा सोध्न मलाई ठीक लागेन । यसैबीच गगनले सोधे- 'तपाईंलाई थाहा छ ? चाङ्सच कहाँ काम गर्छिन् ? होटेलमा कसैले बताएनन्!'

'बताएनन् होला ! नबताउन सक्छन् !'- भन्दाभन्दै चाउयाङ गम्भीर देखिए र बिस्तारै अनुरोध गरे - 'यस - बारेमा नसोध्नुभए बेस हुन्छ ।'

'के भन्न खोजेको ?'- गगन आश्चर्य व्यक्त गर्छन् ।

'के भयो ?'- म जानकारी लिन चाउयाङ्लाई सोध्छु ।

हामी चाउयाङ्बाट चाङ्सचको बारेमा जान्ने उत्सुक छौं । तर उनी बताउने मनःस्थितिमा छैनन् । कोठाको वातावरण एकछिन शून्यताले छायो । हाम्रो उत्सुकता झन् प्रबल हुँदै गयो । फेरि मैले दोहोर्‍याएँ- 'भन्नुहोस् ! के भयो ?' उनी बडो अप्ठ्यारो मान्दै, आफ्नो आँखा निहुराएर मन्द बोलीमा अंग्रेजीको शब्द बोल्छन्- 'सुइसाइड् !'

'हँ' - हामी दुवै आश्चर्य व्यक्त गर्छौं ।

'हो !' - उनी आफ्नो भनाइलाई पुष्टि गर्छन् ।

'किन आत्महत्या गरिन् उनले ?'- गगन आत्तिएको स्वरमा सोध्छन् ।

'किन गरिन् ? कसरी गरिन् ? म कसरी भनूँ । तर गरिन् । त्यो वास्तविकता हो ।'

'त्यस्तो कमजोर दिलकी त थिनन् जस्तो लाग्थ्यो !' मैले मेरो अध्ययन बताएँ ।

'दिल कमजोर र बलियोभन्दा समय-परिस्थितिलाई विचार गर्नुपर्छ ।'

'के भयो र उनले आत्महत्या गर्नुपर्‍यो ?' गगन उही आत्तिएको स्वरमा फेरि सोध्न पुग्छन् र भन्छन् - 'बताउनुहोस् ! त्यस्तो के परिस्थिति पर्‍यो ?'

गगन चाङ्सचसँग नजीकिएका थिए वा थिएनन् । गगनले चाङ्सचको बारेमा केही सोचिसकेका थिए वा थिएनन् । यो सोध्ने प्रसङ्ग नै आएको थिएन । त्यसैले मैले उनलाई सोधेको पनि थिइनँ । तर अहिले चाङ्सचको बारेमा जसरी चाख लिइरहेका छन् त्यसबाट म अनुमान लगाउन सक्छु कि यिनको हृदयको कुनामा कता - कता चाङ्सच - प्रति स्नेह पलाइसकेको रहेछ ।

'यो बताउन बडो गाह्रो छ । तर उनले आत्महत्या अस्पतालमा गरेकी हुन्!'

'अस्पतालमा !' - फेरि गगन उत्तेजित हुन पुग्छन् । गगनको स्थिति देखेर चाउयाङ भन्छन्- 'यदि तपाईंहरू सुन्न चाहनुहुन्छ भने मैले जानकारी पाएसम्म मात्र भन्न सक्छु ।'

'भन्नुहोस् !' उत्सुकतासाथ गगन चाउयाङ्को नजीकै बस्न पुग्छन् ।

'अस्पताल भर्ना गरेको रात चाङ्सचले आत्महत्या गरेकी हुन् । त्यस दिन साँझ लियाङ ली भेट्न गएकी थिइन् । उनको भनाइ - अनुसार त्यसै दिन बिहान होटेलको एक कोठामा मार्ने धम्की दिँदै सात जना मान्छेहरूले पालै-पालो बलात्कार गरेछन् र बेहोश अवस्थामा अस्पताल पुर्‍याइदिएछन् र अस्पतालमा चाङ्सचको होशखुलेपछि लियाङ लीसँग रुँदै भनेकी रहिछन् -'यो सबै कार्य मेनेजर ताउजुनको हो !'तर त्यत्तिखेरसम्म आत्महत्या गर्ने कुनै संकेत नपाएको कुरा लियाङ लीले बताएकी थिइन् ।

'कस्तो अवस्थामा आत्महत्या भएको रहेछ ?' -गगन पुनः प्रश्न गर्छन्।

'पेटमा छुरी रोपिएको र दाहिने हातको हत्केलामाथि छुरी रहेको थियो!'

'त्यो मर्डर वा सुइसाइड् ?'- गगन शंकालु स्वरमा चाउयाङ्सँग सोध्छन् ।

'त्यो निर्णय गर्ने अधिकारी म होइन । तर रिपोर्टमा भनिएको थियो - बलात्कारको घटना सहन गर्न नसकी आत्महत्या गरेकी हुन् !'

'सबैले पत्याए त ?'

'मान्ने र पत्याउने कसले ? उनका आमा र भाइ हजारौं किलोमिटर टाढा छन् । उनको एक जना ब्वाय फ्रेन्ड थियो, त्यही केटाको कारणले यो घटना घटेको हो भन्ने कुरा लियाङ ली भन्थिन् ।'

'ए, उसको ब्वाय फ्रेन्ड थियो ?'

'तर अहिले छैन !'

'काहाँ गयो त ?'

'मेनेजर ताउज्जुनले चाङ्सचलाई गलत दृष्टिले हेर्न थालेपछि त्यही कुरा थाहा पाई विरोध जनाउन मेनेजर ताउज्जुनको कोठामा पसेको त्यो केटो निस्किएन । सुनिन्छ, त्यसको विरोध चाङ्सचले गरेकी थिइन् ।'

घटनाको विवरण सुनेर खल्लो लाग्यो । कोठाको वातावरण नै नरमाइलो भयो । साँच्चै नै चाउयाङ्ले सुनाउन चाहेका थिएनन् । नसुनेको भए पनि हुन्थ्यो जस्तो मलाई लाग्यो । गगनलाई अत्यन्तै चिन्तित तुल्यायो । केही बोल्न सकेनन् । एकछिन टोलिएर बसे । म पनि चुपचाप चाङ्सचलाई सम्झन थालें-बोली, हाँसो, उत्पीडन र साहस ! अहिले गगनभन्दा म दुःखी भएँ ।

मौनतालाई भंग गर्दै म चाउयाङ्लाई रमाइलो वातावरणमा लान र लियाङ लीको बारेमा जानकारी लिन प्रश्न गर्छु - 'विवाहपछिका दिनहरू त रमाइला भए होलान् ?'

'भन्नुपर्‍यो !'- तर यो भन्दा उनको अनुहारमा बादल छायो । साथै, उनका आँखा अन्यत्र टिक्न पुगे । अब यसबाट मैले सोझै अनुमान गरें-यिनीहरूका दिनहरू सुखमय भएनन् ।

गगनको मौनतालाई तोड्न पनि मैले चाउयाङ्सँग कुरा गर्नु नै पर्‍यो । पुनः मैले चाउयाङ्लाई सम्बोधन गर्दै भनें- 'चाउयाङ ! तपाईंहरूको बीचमा कुनै मिस अण्डरस्टाण्डिङ त भएन ? के होटेलको नोकरी उनले छोडिन् ?'

'छोडिन् ! त्यही घटनाले गर्दा पनि हो !'- भन्दै उनी भन्छन्- 'त्यसपछि उनी ताइवानको चाइनिज कम्पनीमा काम गर्न थालेपछि हामीमा दूरी बढ्दै गयो ।'

'तपाईंहरूको त प्रेमविवाह हो । लियाङ लीले तपाईंको बारेमा हामीलाई धेरै कुरा सुनाएकी थिइन् । तपाईंको यति तारीफ गर्थिन् कि उनी बोलेर थाक्दिनथिन् । आज कसरी यो भयो ?'

'यसको कारण हाम्रो गरीबी हो ।'- यो भन्दा उनको आँखा रसाउँछ, उनी भन्छन्- 'म एउटा पढे - लेखेको मान्छे, धेरै नजीकको एउटा युनिभर्सिटीमा पढाउने काम गर्थें । यिनकै प्रेमले गर्दा यहाँ गुआङ्चाउ आइपुगें,तर उनी सेन्जन पुगिन् ।'

'तपाईंको सहमति बेगर उनी सेन्जनमा काम गर्छिन् ?'

'हो ! म त चाहन्थें विवाह - पश्चात् आफ्नै होम टाउन जाऊँ ! दुःख-सुख जीवन चलिहाल्छ, तर उनी मानिनन्, संगत र सम्पर्कले गर्दा उनको इच्छा र आकांक्षा बढ्दै गयो । मेरो स्वीकृति बेगर तीन महीनाको बच्चा पनि अस्पतालमा गएर फालिन् ! यही नै मेरो लागि दुःखपूर्ण कार्य भयो' - भन्दाभन्दै उनी रोकिए । उनको व्यथित हृदय उनको अनुहारमा मैले छर्लङ्ग देखीरहेको छु, उनी लामो सास फेरेर तातो पानी भएको थर्मस समाउन पुग्छन् अनि आफ्नो कपमा तातो पानी टम्म भरेर पिउन थाल्छन् । चलन - अनुसार हाम्रो कप पनि उनले भर्नुपर्ने हो, तर यसपटक उनले यो गर्नसकेनन् । अनि आफैले थर्मसको पानी गगन र मेरो कपमा भरें र पिउन थालें ।

'तपाईंहरूको भेटघाट ?'

'दुई महीना भयो यहाँ आएकी छैनन् । अहिले उनी सेन्जनमै हेड आफिस भएको व्यापारिक कम्पनीमा काम गर्छिन् ।'

'तपाईं हामीलाई उनको ठेगाना दिन सक्नुहुन्छ ?'

चाउयाङ कुनै असजिलो नमानीकन मलाई लिथाङ लीको अफिसको ठेगाना र टेलिफोन नंबर टिपाइदिन्छन् । हाम्रो सेन्जनमा काम पनि छ । एक दिन बसेर हङकङ जाने कार्यक्रम छ ।

'तपाईं सेन्जनमा काम खोज्न सक्नुहुन्न ? यदि त्यहीं तपाईंको काम भयो भने भइ-हाल्यो नि !' - म उनलाई सल्लाह दिन खोज्छु ।

उनी उपहासको हाँसो हाँस्दै भन्छन् -'म सुन्दर युवती भएको भए काम पाउन सक्थें होला, तर अपसोच, म श्रमजीवी र ईमान्दार केटो हुँ ।'

कुरा यति स्पष्ट भयो कि सुनेर हामी स्तब्ध भयौं । चाउयाङ्का दिनहरू दुःखमय रहेछन् । उनको र हाम्रो बीचमा अरू सामाजिक कुरीतिका बारेमा कुरा हुन थाल्यो । कुराको क्रममा उनले तर्क पेश गरे- 'पश्चिम मुलुकमा सभ्यताको नाउँमा आएको सामाजिक विकृतिले चीनियाँ युवा-युवतीलाई प्रभाव पारेको कारण परम्परागत रूपमा निरन्तर आइरहेको सामाजिक रीतिरिवाजलाई वर्तमान व्यवस्थाले नयाँ वादको नाउँमा अथवा चीनियाँ एकीकरणको आडमा नौलो समाजको रचना गर्न जुन पद्धतिको अख्तियार गर्‍यो, त्यो नै त्रुटिपूर्ण हो !'

हो वा होइन भन्नु भन्दा म उनको विचारलाई केलाउन थालें । माओको नौलो जनवादको उद्देश्य हो- एक भाषा, एक बोली, एउटै जाति । एउटै वर्ग!! आँट र परिश्रमले राष्ट्र बनाउँदै, शोषणलाई दूर भगाउँदै ! राष्ट्रिय एकता जगाउनु! विश्व - सामु चीनलाई चिनाउनु हो ! यसतर्फ पनि मैले सम्झें ।

'कम्युनिस्टका त्रुटिहरू निस्कदै र देखिंदै गए ।'- भन्दै चाउयाङ भन्छन्- 'त्रुटि महसूस गरेपछि परिवर्तन गर्नुपर्छ ! व्यक्ति परिवर्तनले पद्धति परिवर्तन हुँदैन। यहाँ त मान्छे परिवर्तन गरेर आँखामा छारो हाल्ने मात्र काम भइरहेको छ ।'

उनी जोशिंदै भन्छन्- 'कसैले निहित स्वार्थपूर्तिको लागि वा आफ्नो अहम् परिपूर्तिको लागि नीति परीक्षणमा ल्याएर लाखौं मान्छेको जीवनसँग खेलबाड गर्न मिल्दैन । यही नै वर्तमान व्यवस्थाका अँधेरा पक्षहरू हुन् !'

उनले किटानसाथ भनेका यी वाक्यहरूलाई म कुनै प्रतिक्रिया जनाउँदिनँ । गगन भने केही नबोली चुपचाप रहन सकेनन् र भनिहाले- 'चाउयाङ! तिमी राजनीतिक दृष्टिकोणले चेतनशील व्यक्ति रहेछौ ! किन यो सानो जागीर खाएर बसेका छौ ? जीवन एकक्षणको लागि हो ! यही क्षणभित्र चीनियाँ जनता र समाजको लागि केही गरेर देखाऊ!'

शायद गगनले चाउयाङ्को अन्तर - आत्माको इच्छा बोलिदिए कि क्याहो ! चाउयाङ गगनतर्फ फर्किएर भने- 'गगन ! के तपाईं मलाई मदत गर्न सक्नुहुन्छ ?'

'केको मदत ?'

'मलाई एउटा पावरफुल डाइनामाइट ल्याइदिनुहोस् ,म आफ्नो छातीमा बाँधेर ती हठी बूढाहरूको समूहमा गएर विस्फोट भइदिन्छु । जसले मेरो जीवन लिन्छ, तर करोडौं चीनियाँ युवाहरूको जीवन दान दिन्छ !'

यो सुनेर मेरो दिमाग चक्करायो ! केही क्षण अघिसम्म मेरो सहानुभूति प्राप्त गरिरहेका चाउयाङ्सँग म स्वयम् डराएँ । उनलाई जीवनसँग मोह नभएको खास कारण चाहिं मैले अझ पत्ता लगाउन सकेको छैन । हाम्रो कोठाको वातावरणले हरएक घण्टामा कोण बदलेकोमा म पनि चकित परेको छु । साँझ पर्न लागिसकेको छ ।

खाना सँगै खाने मेरो प्रस्तावलाई चाउयाङ्ले अस्वीकार गरेनन् । भोलि रेलबाट सेन्जन जाने निर्णय भएकोले होटेलको सर्भिस काउण्टरमा खबर गरिदियौं । टिकट बनेर आयो । हामीले चाउयाङ्कै उपस्थितिमा लियाङ लीलाई सेन्जनमा फोन गरेर हामी सेन्जन पुग्ने समय बतायौं । यसपछि साँझको डिनरको लागि हामी तीनै जना रेष्टुराँतर्फ लाग्यौं ।

खाना चाउयाङ्को रोजाइमा खाएको हुँदा उत्तरी चीनको खाना नुडल्स र मासुको विभिन्न परिकार खायौं । अब हामी प्रान्तीय भाषा र खानासँग पनि बिस्तारै परिचित हुन थालेका छौं । आजभोलि सबै क्षेत्रको खाना हामीलाई रुचिकर हुन थालेको छ । खाना खाइसकेपछि फेरि भेट्ने वाचा गर्दै हामी छुट्टिन्छौं ।

भोलिपल्ट बिहानै सेन्जनको लागि प्रस्थान गर्ने तरखरमा लागेका छौं । रेलवे स्टेशन नजीकै भएको हुँदा टेक्सी लिनुपर्दैन । हामी रेल चढ्नुभन्दा पन्ध्र मिनेट अगाडि रेल-स्टेशन पुग्यौं । रेल ठीक समयमा स्टार्ट भयो ।

सेन्जन रेलवे स्टेशनमा लियाङ ली हामीलाई लिन आएकी रहिछन् । हामीले देख्नेबित्तिकै हामी ढुक्क भयौं भने - लियाङ ली हामीलाई देखेर खुशी भइन् । हामीले आपसमा हात मिलाएर औपचारिकता निभायौं ।

गुआङ्चाउबाट सेन्जन, रेलबाट दुई घण्टाको मात्र दूरी भएको हुँदा हामी बिहान दश बजे नै आइपुगिहाल्यौं । हामीले लियाङ लीलाई भन्यौं- 'पहिले हामीलाई नयाँ शहर घुमाइदेऊ, साथै कुनै दर्शनीय स्थान छ भने पनि देखाइदेऊ' भनेर हामीले भनेपछि - लियाङ लीले भनिन् - 'पहिले तपाईंहरूलाई होटेल व्यवस्था गरिदिन्छु । त्यसपछि म तपाईंहरूलाई चीस्युचुङ्हुवा अर्थात् सानो चीन देखाउन लैजान्छु । यो शहर हाल मात्र बनेको हो । यो विशेष आर्थिक क्षेत्र भएको हुँदा यहाँका एक दुई उद्योग देखाउने कार्यक्रम राख्छु ! हुँदैन ?'

'ठीक छ, तपाईं जे भन्नुहुन्छ !'

'जाऊँ, हाम्रो गाडी छ ।'

लियाङ लीको गाडीबाट हामी होटेल पुग्छौं । हामीलाई होटेल बन्दोबस्त गरेर उनी एक घण्टापछि आउने गरेर उनको कम्पनीमा जान्छिन् । एक घण्टापछि उनी ठीक समयमा गाडी लिएर हामीकहाँ आइपुगिन् र भन्छिन्- 'आज साँझको कार्यक्रम मैले हाम्रो कम्पनीको मुख्य हाकिम जनरल मेनेजर लीसाउ तोङसँग भेटघाट गर्ने र व्यापारिक कुराकानी गर्ने गरी मिलाएकी छु, र साँझको डिनरको लागि पनि उनले तपाईंहरूलाई निम्ता गरेका छन् ।'

'ठीक छ ! अब हामी कति वेला हिड्ने त ?'

'बस् ! हिडे भइहाल्छ नि !'

हामी गाडीमा चढेर सोझै चीनको झाँकी देखाउने ठाउँमा पुग्छौं । विदेशी र चीनियाँलाई प्रवेश टिकटको मूल्य बेग्लाबेग्लै रहेछ । हामीले दुइवटा र लियाङ लीले एउटा गरी भिन्दाभिन्दै टिकट खरीद गर्छौं ।

पस्नेबित्तिकै बायाँतर्फ ल्हासाको पोताला दरबार देखेर म छक्क परें । उस्तै पोताला दरबार ! तिब्बतीहरूको संस्कृति झल्कने अनेक झाँकीहरू पनि त्यहाँ प्रदर्शित गरिएको छ। हेर्दै जाँदा ग्रेट वालदेखि लिएर चीनको सबै प्रमुख दर्शनीय स्थानहरू, प्रायः सबै घुमेको ठाउँ भएको हुँदा सम्झनासम्म भयो । स्थान साँच्चि नै दर्शनीय बनाइएको रहेछ । दुइ घण्टा लाग्यो । त्यसपछि हामी सिल्क गारमेन्ट उद्योग र खेलौना उद्योगको अध्ययन भ्रमण गर्न गयौं । तीन बजे लियाङ लीले हामीलाई होटेलमा छोडेर भनिन्- 'म अब पाँच बजे मात्र लिन आउँछु । त्यसपछि हाम्रो अफिस जानुपर्छ ।'

हामीले होटेलमा पुगेर खाना - साना खायौं र केही बेर आराम गर्न कोठातर्फ गयौं। ठीक पाँच बजे लियाङ ली होटेलको लविमा आइपुगेकी हामीले जानकारी पायौं । हामी दुवै जना तयार भएर कोठाबाट बाहिर निस्कियौं ।

लियाङ लीको अफिस 'फरेनट्रेड बिल्डिङको' पैंतीसौं तलामा रहेछ । हामी लिफ्ट चढेर उनको अफिसमा पुग्यौं, अफिसको प्रवेश द्वारमा लेखिएको छ- 'स्पेसल इकोनमीजोन फरेन ट्रेड कम्पनी ।' हामीलाई यो अफिसको सजावटले ज्यादै आकर्षित गर्‍यो । उच्चस्तरीय गलैंचा बाहिरदेखि नै ओछ्याइएको यस भव्य अफिसमा कोठा - कोठामा सबै कामदारहरू काम गर्न व्यस्त देखिन्छन् । हामी चारओटा अफिस कोठाहरू पार गरेर शान्त र एकान्त कोठामा पुग्छौं । त्यहाँ कोठा भरिने गरी सोफा बिछ्याइएको छ । हामीलाई त्यस कोठामा बस्न लगाई लियाङ ली अझ अगाडिको कोठामा प्रवेश गर्छिन् ।

एकछिनपछि बाहिर आएर लियाङ ली भन्छिन्- 'एकैछिन सर लीसाउ तोङ इमर्जेन्सी मिटिङमा हुनुहुन्छ । केही छिन तपाईंहरूले कुर्नुपर्‍यो । माफ गर्नुहोस् है!'- भन्दै हाम्रो अगाडि चियाको प्याला ल्याएर राखिदिन्छिन् र चिया पिउन हामीलाई आग्रह गर्छिन्

मैले मनमनै विचार गरें -'लियाङ ली यति ठूलो अफिसमा कसरी आइपुगिन् ? यस कम्पनीका प्रमुख लीसाउ तोङको कस्तो व्यक्तित्व होला ? कति ठूलो काम होला ?' आदि आदि ।

पन्ध्र मिनेट, बीस मिनेट, पच्चीस मिनेट जाँदा पनि बोलावट आएको छैन । लियाङ ली बाहिर भित्र गर्दी छिन् । हामीलाई पनि पट्टाई लागिसक्यो । आधा घण्टापछि हामीलाई भित्र कोठामा लिएर जान लियाङ लीको साथमा अर्का एक जना व्यक्ति पनि आएर सम्मानपूर्वक भित्र जान आग्रह गर्दै भने- 'माफी पाऊँ ! ढीलो भयो ! जाऊँ भित्र !'

हामी चारै जना भित्र कोठामा प्रवेश गर्छौं । हामी कोठामा पस्नेबित्तिकै जनरल मेनेजर आफ्नो सीटबाट उठेर हामीसँग हात मिलाउन आउँदा त हामीले चिनिहाल्यौं र उनले पनि हामीलाई चिने । हामी पूर्व - परिचित साथी भएको हुँदा हार्दिकता देखाउन धेरै बेरसम्म हात मिलाइ नै रह्यौं ।

मेनेजरलीसाउ तोङ्ले हामीलाई सोफामा बस्नको लागि अनुरोध गर्दै भने- 'मलाई लियाङ लीले विदेशी व्यापारी दुइ जना छन् भनेर भनेपछि मनमा कता-कता तपाईंहरूलाई नै सम्झेको थिएँ । तर एकीनका साथ होइन ! जे होस्, चिने-जानेको साथी नै हुनुहुँदो रहेछ, खुशी लाग्यो !'

'तपाईं यहाँ कहिलेदेखि काम गर्दै हुनुहुन्छ ?'

'दुई वर्ष हुन लाग्यो !'

'कस्तो छ तपाईंको यहाँ व्यापार ?'

'धेरै राम्रो, चीनको स्वतन्त्र आर्थिक क्षेत्र हो यो । यो प्रयोगको रूपमा सञ्चालन भइरहेछ । मेरो कम्पनीले मात्र महीनामा तीन मिलियन यु० एस० डलरको कारोबार गर्छ !'

गगन र म दुवै जिल्ल परेर 'लीसाउ' तोङ्का कुरा सुनिरहेका छौं । हाम्रो अगाडि लियाङ लीले चिया ल्याएर राखिदिन्छिन् । 'लीसाउ' तोङ आफ्नो दाहिने हात मेरो हाततर्फ बढाउँदै भन्छन्- 'भन्नुहोस्, तपाईंहरूको व्यापार कस्तो छ ?'

मैले 'ठीक छ' भन्न नपाईकनै उनले भने - 'भन्नुहोस्, मैले तपाईंहरूको के सेवा गर्न सक्छु ?'

म अथवा गगन हामी दुवैले केही बोल्न नै पाएका छैनौं, उनले फेरि भने-'तपाईंहरू मेरो पाहुना हुनुहुन्छ । यो पटकको होटेलको बिल मेरो कम्पनीले तिरिदिन्छ, जति दिन बस्न मन लाग्छ, तपाईंहरू शहरमा बस्न सक्नुहुन्छ !'

लीसाउ' तोङ्ले हामी-प्रति देखाएको हार्दिकतालाई चीनियाँ भाषाको 'सेसे' भनेर स्वीकार गर्छौं । हामी-बीचमा खुल्ला कुराकानी हुन सक्ने भएकोले रमाइलोपूर्वक कुराकानी शुरू हुन्छ । हामीलाई नै उनले प्रश्नमाथि प्रश्न यसरी थपिदिए कि हामीले उनलाई जानकारी दिन कर लाग्यो । करीब एक घण्टा कुराकानी गरिसकेपछि डिनरको लागि रेष्टुराँ जान तरखर गर्न थाल्यौं ।

लीसाउ' तोङ्ले आफ्नो टेबुलमा भएको ह्याण्ड सेट टेलिफोन पुरुष सेक्रेटरी चुलाई बोक्नको लागि अह्राए- 'मिस्टर चु समेत हामी पाँचै जना लिफ्टद्वारा तल ओर्लियौं । मिस्टर चुले तुरुन्त हामी उभिएको ठाउँमा गाडी ल्याए ! अमेरिकन फोर्ड कम्पनीले बनाएको

आठ सिलिण्डरको साउण्डलेस कार रहेछ । मिस्टर चुले ड्राइभ गरे, लियाङ ली अगाडि सीटमा र हामी तीन जवान पछाडि सीटमा बस्यौं । यति आरामदायी गाडी म जीवनमा पहिलो पटक चढ्दै छु भन्ने मलाई अनुभव भयो । गाडी चढेका छौं वा कोठाको घुम्ने सोफामा बसेर शहर निरीक्षण गरिरहेका छौं-यो कुरा मैले सम्झनुपर्ने भयो ।

वेला - वेलामा ह्याण्ड सेटमा फोन आइरहन्छ ! मिस्टर चु एक हातले गाडीको स्टेरिङ र एक हातले टेलिफोन सेट समाएर कुरा गरीरहन्छन् । वेला-वेलामा हुन्छ वा हुँदैन भन्न मात्र टेलिफोन सेट लीसाउ तोङ्को हातमा दिन्छन्। ज्यादै छोटो कुरा गरेर त्यो टेलिफोन सेट मिस्टर चुलाई पुनः फर्काउने गर्छन् ।

हामी भव्य रेष्टुराँमा पुग्छौं । यो सांघाई रेष्टुराँ हो ! यहाँ सांघाईका मान्छेले त्यहींको परिकार बनाएर त्यहींका परिचारिकाको हातद्वारा सेवा उपलब्ध गराइने रहेछ । चट्ट जीउडाल मिलेका अग्ला यी सांघाई क्षेत्रका परी जस्ता युवतीहरूको हँसिलो अनुहारले रेष्टुराँको उज्यालो वातावरणलाई चम्काएको छ ।

खाना आउँदै छ, गगन लीसाउ तोङ्सँग कुरा गरिरहेका छन् । मलाई ट्वाइलेट जाने इच्छा भयो । मैले बिस्तारै मिस्टर चुलाई अनुरोध गरें । उनी मलाई ट्वाइलेट लिएर जान्छन्। म ट्वाइलेटबाट बाहिर निस्केर बेसनमा हात धुन्छु, एक जना रेष्टुराँको युनिफर्म लगाएको युवकले मलाई हात पुछ्न रुमाल दिन्छन् । मेरो चिसो हात पुछेर जब म बाहिर निस्कन खोज्छु । मिस्टर चुले आफ्नो खल्तीबाट दश युआन झिकेर त्यो केटालाई बकस दिन्छन्। यो देखेर म झस्किएँ । आफूमा हीनता-बोध पनि भयो, किनभने ट्वाइलेट मैले प्रयोग गरेको थिएँ र बक्स मैले दिनुपर्थ्यो । मैले अप्ठेरो मान्दै भनें- 'म दिइहाल्थें नि !'

टेबुल खानाले सजिएको छ । महँगा परिकारहरू टेबुलमा देखेर सम्झन्छु- लीसाउ तोङ्ले हामीलाई दिल खोलेर स्वागत गरेका छन् । इच्छा-भोजन गरे-पछि बिल आयो-बाइस सय युआनको, त्यो बिलमा लीसाउ तोङ्ले सही गरिदिएर खल्तीबाट एक सय युआन झिकेर बकसको रूपमा बिल-सँगै राखिदिए । हामी सबै उठ्यौं,लीसाउ तोङ्लाई रेष्टुराँका सबै अगाडि पर्ने युवक युवतीले मुस्कानका साथ टाउको हल्लाएर अभिवादन गरे । मानों, एउटा सानो स्टेटको राजाको सवारी भएको छ ।

यो सबै देखेर मेरो मन खल्लो भयो । म चिन्तित भएँ, चीनले कस्तो स्पेसल जोन बनाउन खोजेको हो ? मेरो दिमागले खुट्याउन सकेन । पूँजीवादको विरुद्धमा बोली बुलन्द गरेर 'सर्वहारा वर्गको नेतृत्वमा स्थापित सरकारले नव सामन्त र नव धनाढ्य जन्माउन थालेको देखेर म चिन्ताग्रस्त हुन पुगें । म केही नबोली चुपचाप चिन्तामग्न अगाडि बढ्दै गएँ ।'

गगन चाहिं लीसाउ तोङ्सँग कुरा गरेर हिडिरहेका छन् । म कुरा टड्कारो सुनिरहेको छु - लीसाउ तोङ्लाई सर छिन गो छिनले यहाँ पठाएका रहेछन् । अझ उनले भने-यो अफिस उनको लागि स्पेसल खोलिएको हो ।

यो सुनेर मलाई कुनै उल्का लागेको छैन । हिजोको ड्राइभर आज जनरल मेनेजर नहुनु भन्ने पनि छैन । तर दुःख यस मानेमा लागेको छ कि चिन्दू शहरका लिविन र गुआङ्चाउका चाउयाङ्को योग्यता कुण्ठित हुन गएकोमा मात्र म चिन्तित भएको हुँ । यी हाम्रा मित्र लीसाउतोङ गुवाङ्चाउको मेनेजर ताउजुन बन्न के बेर । उनको चाल - चलन, बस - उठ, बोलीचालीमा निकै अन्तर आइसकेको छ । धनको संचय र धन खर्च गर्ने अख्तियार पाएका लीसाउ तोङ विलासी बन्दै गइरहेको म टड्कारो देखिरहेछु । समाजमा शोषक र बुर्जुवाहरूको जन्म यसै गरी हुन्छ ।

मतर्फ फर्कंदै लीसाउ तोङ सोध्छन्- 'तपाईंहरू यहाँ कति दिन बस्नुहुन्छ ?'

'बस ! भोलि जान्छौं !' - म आफ्नो कार्यक्रम बताउँछु ।

'व्यापार - सम्बन्धी कार्यमा आउनुभएको होइन ?'

'हो ! तर अहिले काम सकियो । चाँडै घर फर्कनु छ !' मिस्टर चु र लियाङ ली पढे-लेखेका स्नातक भएको हुँदा लीसाउ तोङ्लाई काम गर्न सजिलो भएको कुरा बताउँछन् - यो कुरा विदेश व्यापार गर्न गहारो भएको छैन ? भन्ने मेरो प्रश्नको उत्तरमा लीसाउ तोङ्ले भनेका हुन् ।

हामी बस्ने होटेलको ढोकासम्म हामीलाई पुग्र्याएर लीस्याउ तोङ भन्छन - 'अर्को पटक आउँदा बढी समय लिएर आउनु है ! भोलि कति बजे जाने रेलवे स्टेशनमा लियाङ लीले गाडीमा पुग्र्याइदिन्छिन् ।' 'भोलि बिहानै जाने विचार छ । मिल्छ भने छः बजे नै हिडौं !'

'हुन्छ ! छ बजे लियाङ ली आइपुग्छिन् ।'

हामी उनीहरूसँग छुट्टिएर कोठामा पुग्यौं, भोलि बिहान हिड्नको लागि तयारी गरेर आराम गरियो, बिहान सबेरै उठेछु ! बाहिर हेरें - अँध्यारै रहेछ । बिस्तारै झ्याल खोलें, मन्द गतिले बिहानको हावा कोठाभित्र प्रवेश गर्न थाल्यो । म बाहिरको एकान्त वातावरण हेर्न व्यस्त रहन्छु । सबै निद्रामा छन् । शायद सुतेका छन् । कुनै चहलपहल सुनिदैन । हेर्दै म सोचमा डुबें - जाँगर हराएर यो शहरका नागरिकले अल्छी मानेका हुन् कि ? जोश र हिम्मत टुटेर सुस्ताएर बसेका हुन् ? वा कामैकामले थाकेर टाउको उठाउन नसेकेका हुन् ? होइन भने पूर्व आकाशमा लाली चढ्ने वेला भइसक्यो, किन यिनीहरू बिउँझिएका छैनन् ?

हेर्दाहेर्दै शहरमा उज्यालो पोखिन्छ । म गगनलाई तयारी हुन भन्छु । लियाङ ली ठीक समयमा आइपुग्छिन् र हामीलाई हङकङ र चीनको सीमा लोउ स्टेशनमा पुग्र्याइदिन्छिन् । म लियाङ लीलाई उनको व्यथित लोग्ने चाउयाङ्को बारेमा केही भन्ने चासो राख्दिनँ । हामीलाई बिदा गर्ने क्रममा हात मिलाउँदै लियाङ ली भन्छिन्- 'तपाईंहरूलाई थाहा भयो ? चाङ्सचको आत्महत्याको बारेमा ?'

'थाहा पायौं !'

'कसरी ?'

'हामीलाई चाउयाङ्ले भनेका !'

'ए ! उनलाई भेट्नुभयो !'

यसभन्दा बढी उनले चाउयाङ्को बारेमा नबोलेपछि हामीले पनि केही भन्न मिलेन । लियाङ ली हामीलाई हात हल्लाएर बिदा गर्छिन् र हामी चीनको सीमा पार गर्ने क्रममा अगाडि बढिरहेका छौं ।

ॐ शिवम् भूयात्

★ इति ★

INDU SERIES



श्री भरत जङ्गम एक ख्याति प्राप्त उपन्यासकार हुनुहुन्छ। उहाँले लेख्नु भएका उपन्यासहरू मध्ये **'कालो सूर्य'** उपन्यास विश्वका विभिन्न भाषाहरू जस्तै अंग्रेजी, रूसी र चीनियाँ भाषामा अनुवाद भइसक्यो। काठमाण्डौ उपत्यकाको भक्तपुरमा जन्मनु भएका श्री जङ्गम विश्वका धेरै मुलुकको भ्रमण गरिसक्नु भएको छ। उहाँको कलम मानवता र मानव कल्याणका लागि समर्पित छ। त्यसैले उहाँ कलम-क्रान्तिको योद्धाको रूपमा परिचित हुनुहुन्छ- **प्रकाशक**

---

उपन्यासकारले आफ्ना पाठकहरूलाई के सन्देश दिन खोजेका छन् भन्ने तर्फ विचार गर्दा मलाई लाग्यो- लेखकको चिन्तनमा सन् १९४९ को क्रान्तिको प्रभाव अब अरू धेरै समय सम्म रहन सक्ने छैन र चीनियाँ जनतामा प्राचीनकालदेखि जन्मेका आफ्नै सभ्यता र संस्कृतिका गुण र प्रभावहरूद्वारा प्रेरित र अनुप्राणित भएर चीनियाँ जाति र समाज छिटै अर्कै दिशातर्फ मोडिन सक्ने छ भन्ने सन्देशका झल्काहरू मैले पाएँ।

✍ ऋषिकेश शाह

---

**पृथ्वी र त्यससँग सम्बन्धित यावत् पूँजी कसैको व्यक्तिगत सम्पत्ति हुन सक्दैन। यो सबैको साझा हो र हुनुपर्छ, त्यसैले पूँजीको व्यक्तिगत स्वामित्व अन्त गरी सामूहिक अर्थात सामाजिक स्वामित्व स्थापना गर्नुपर्छ र भएको सम्पत्तिको सबैले समान रूपमा उपभोग गर्न पाउनु पर्छ- यही नै सत्य हो।**

**- यसै पुस्तकबाट**

हिन्दी भाषामा **'लाल सूरज'** अनुवादकः डा. राम दयाल राकेश
अंग्रेजी भाषामा **'The Red Sun'** अनुवादकः सरोज कुमार शाक्य